॥ श्रीः ॥

## श्रीमद्योगीश्वरमहर्षियाज्ञवल्क्यप्रणीता

# याज्ञवल्क्यस्मृतिः



तस्विर श्रोतः embodiedphilosophy

(सङ्कलन तथा नेपालीमा भावानुवाद : मोहन प्रसाद सापकोटा)

## दुई शब्द

याज्ञवल्क्यको अर्थ यज्ञका वक्ता भन्ने हुन्छ । यिनलाई धर्मशास्त्रका प्रयोजक एक मुनि मानिन्छ । यी ब्रह्मरात्रि, योगेश र योगीश्वर नामले पनि चिनिन्छन् । याज्ञवल्क्य मुनि शुक्ल यजुर्वेदको वाजसनेयी शाखाका द्रष्टा हुन् । यिनले "बृहदारण्यक उपनिषद", "शतपथ ब्राह्मण" र "याज्ञवल्क्य स्मृति" नामका ग्रन्थ लेखेका थिए । यिनलाई लगभग ई.पू.१८०० तिरका मुनि मानिन्छ । तर स्मृति काल द्वापरयुगको तेश्रो चरण हो भनी पुराणहरूले भनेका हुनाले तथा यी पनि एक स्मृतिकार भएकाले यो त्यती भरपर्दो समय भने देखिँदैन । भनिन्छ यिनले मिथिलामा बसेर ग्रन्थहरु लेखेका थिए । यसैले यिनको वासस्थान नेपालकै कुनै भूभागमा थियो भन्नेहरू थुप्रै छन् । यिनका कात्यायनी र मैत्रेयी नामका दुई पत्नी थिए ।

यो ग्रन्थ तयार पार्न तीन चार वटा ग्रन्थहरुको सहयोग लिएँ । ग्रन्थ नै पिच्छे श्लोक, अध्याय आदिका क्रममा भिन्नता छ । तै पनि सकेसम्म समेट्न प्रयाश गरेको छु । विभिन्न अन्य ग्रन्थको सहयोगमा यहाँ प्रयोग भएका शब्द, श्लोक आदिको व्याख्या गर्न खोज्दा यो ग्रन्थ धेरै नै लामो हुन जाने देखी सकेसम्म छोटो बनाएर भावानुवाद गरेको छु । मबाट भइरहेको विषयगत सङ्कलनमा विस्तृत व्याख्या लेख्ने गरिएकोले पनि म यहाँ यस ग्रन्थमा धेर तन्कन नचाहेको हुँ ।

यस ग्रन्थमा विशेषतः तत्कालीन कानुनका कुरा धेरै छन् । धार्मिक कानुन नै आधुनिक कानुनको जननी भएकोले कानुनप्रति रुची हुनेहरुका लागि पनि यो ग्रन्थ फाइदाजनक हुनेछ । अन्य कुराहरु पनि चाख लाग्दा छन् । वर्णव्यवस्था लागू गर्ने समयमा लेखिएको ग्रन्थ हुनाले सो सम्बन्धी अलि कडा खालका कुरा पनि यसमा पाइन्छन् । "नहुनु मामाभन्दा कानू मामा निको" भनेझैं आधारभूत ज्ञान लिनका लागि मेरो प्रयाशले केही सहयोग गर्नेछ भन्ने विश्वास लिएको छु ।



यो मबाट नेपालीमा भावानुवाद भई आर्किभमा अपलोड गरिएको एक्काईसौं स्मृति ग्रन्थ हो ।

त्रुटीहरु अल्पज्ञान, मुद्राराक्षस आदि अनेक किसिमले भएका हुन्छन्, सच्चिन मद्दत गर्नु हुने नै छ ।

-sapkotamps731@gmail.com

## विषयसूची

# याज्ञवल्क्यस्मृतिः
## अथाचाराध्यायः १
## उपोद्धातप्रकरणम् (१)
### श्रीगणेशाय नमः ॥

**योगीश्वरं याज्ञवल्क्यं सम्पूज्य मुनयोऽब्रुवन् ।**
**वर्णाश्रमेतराणां नो ब्रूहि धर्मानशेषतः ॥१॥**

(प्राचीन कालमा) योगीश्वर (सनक आदि ऋषिहरूमा श्रेष्ठ) याज्ञवल्क्यलाई विधिपूर्वक (मन, वचन र कर्मले) पूजा गरी (त्यहाँ जम्मा भएका सोमश्रवा आदि) मुनिहरूले यो कुरा भने-“हे भगवन् ! ब्राह्मण आदि वर्ण, ब्रह्मचर्य आदि आश्रम र तिनका अन्तर-वर्ण सम्पर्कबाट जन्मिएका मूर्धावसिक्त आदिका वर्णधर्म (ब्राह्मणले मदिरा कहिल्यै पिउनु हुन्न आदि), आश्रम धर्म (अग्नि, इन्धन, भिक्षा आदि) वर्णाश्रम धर्म (पलाशको दण्ड ब्राह्मणले बोक्नु आदि), गुणधर्म (राजा आदिका गुण), निमित्त धर्म (प्रायश्चित आदि) र साधारण धर्म (अहिँसा आदि) का बारेमा सम्पूर्णरूपमा हामीलाई बताउनु होस्” ।

**मिथिलास्थः स योगीन्द्रः क्षणं ध्यात्वा ब्रवीन् मुनीन् ।**
**यस्मिन् देशे मृगः कृष्णस्तस्मिन् धर्मान्निबोधत ॥२॥**

मिथिलामा बस्ने ती योगीश्वरले एकछिन सोची मुनिहरूलाई भन्नु भयो-“जुन देशमा कृष्णसार मृग हुन्छन् त्यो देशका धर्मका बारेमा सुन्नु हवस्” ।

**पुराणन्यायमीमांसा धर्मशास्त्राङ्गमिश्रिताः ।**
**वेदाः स्थानानि विद्यानां धर्मस्य च चतुर्दश ॥३॥**

पुराण, न्याय (तर्क विद्या), मिमांशा (वेदवाक्य विमर्श शास्त्र), धर्मशास्त्र (मनुस्मृति आदि स्मृति) र छ अङ्ग सहितका वेद गरी चौध शास्त्र नै विद्या र धर्मको कारण (वा आधार) हुन् ।

**मन्वत्रिविष्णुहारीत याज्ञवल्क्योशनोङ्गिराः ।**
**यमापस्तम्बसम्वर्ताः कात्यायनबृहस्पती ॥४॥**

भृगु (मनु), अत्रि, विष्णु, हारीत, याज्ञवल्क्य, भृगु, अङ्गिरा, यम, आपस्तम्ब, सम्वर्त, कात्यायन, बृहस्पति...।

**पराशरव्यासशङ्खलिखिता दक्षगौतमौ ।**
**शातातपो वसिष्ठश्च धर्मशास्त्रप्रयोजकाः ॥५॥**

पराशर, व्यास, शङ्ख, लिखित, दक्ष, गौतम, शातातप र वसिष्ठ : यी ऋषिमुनिहरू नै धर्मशास्त्रका प्रयोजक (प्रेरक वा व्यवस्थापक, लेखक होइनन्) हुन् ।

**देशे काल उपायेन द्रव्यं श्रद्धासमन्वितम् ।**
**प्राप्ते प्रदीयते यत्तत्सकलं धर्मलक्षणम् ॥६॥**

पवित्र देश (कृष्णसार स्वाभाविकरूपमा विचरण गर्ने देश) र पवित्र समय (सङ्क्रान्ति आदि पर्व) मा शास्त्रीय विधिविधानले जे कुरा श्रद्धापूर्वक जुन् सत्पात्रलाई दिइन्छ त्यो र यस्तै (अन्य शास्त्रले बताएका) सबै कर्म धर्मका लक्षण हुन् ।

**श्रुतिः स्मृतिः सदाचारः स्वस्य च प्रियमात्मनः ।**
**सम्यक्सङ्कल्पजः कामो धर्ममूलमिदं स्मृतम् ॥७॥**

वेद, स्मृति अनुसार धार्मिक जनले जेजस्ता काम गर्दै आएका छन्; आफ्नो आत्मालाई जे कुरा प्रिय लाग्दछ र जुन वेदसम्मत ढङ्गले उत्पन्न हुने सङ्कल्प छ-यी सबै कुरा नै धर्मका मूल हुन् ।

**इज्याचारदमाहिंसादानस्वाध्यायकर्मणाम् ।**
**अयं तु परमो धर्मो यद्योगेनात्मदर्शनम् ॥८॥**

सज्ञ, सदाचार, इन्द्रिय नियन्त्रण, अहिंसा, दान, वेद आदिको अध्ययन आदिभन्दा पनि ठूलो धर्म भनेको योग मार्फत आत्मालाई दर्शन गर्नु हो ।

**चत्वारो वेदधर्मज्ञाः पर्षत्त्रैविद्यमेव वा ।**
**सा ब्रूते यं स धर्मः स्यादेको वाऽध्यात्मवित्तमः ॥९॥**

वेद एवं धर्म जान्ने चार जना मानिस वा तीन वेद जान्ने तीन जना मानिसको एउटा विद्वत् सभा हुने गर्दछ, यो सभाले वा अध्यात्म विद्या (वेदान्त) को ज्ञानी एउटै मानिस जे भन्दछ त्यही नै धर्म हो भनेर भनिने गर्दछ ।

इत्युपोद्घातप्रकरणम्

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत उपोद्घातप्रकरण (मङ्गलाचरण) को नेपाली भावानुवाद पूर्ण भयो ।**

## अथ ब्रह्मचारिप्रकरणम् (२)

**ब्रह्मक्षत्रियविट्शूद्रा वर्णास्त्वाद्यास्त्रयो द्विजाः ।**
**निषेकाद्याः श्मशानान्तास्तेषां वै मन्त्रतः क्रियाः ॥१०॥**

चार वर्णमध्ये ब्राह्मण, क्षत्री र वैश्यलाई "द्विज" भनिन्छ । द्विजका गर्भाधानदेखी अन्त्येष्टि सम्मका संस्कार वेदमन्त्रसहित गरिन्छ ।

**गर्भाधानमृतौ पुंसः सवनं स्पन्दनात्पुरा ।**
**षष्ठेऽष्टमे वा सीमन्तः मास्येते जातकर्म च ॥११॥**

ऋतुमती स्त्रीलाई सम्भोगद्वारा गर्भवती बनाउने संस्कारलाई गर्भाधान संस्कार भनिन्छ (यो संस्कार स्त्री ऋतुमती भएपछिका शुभरातमा नै गर्नुपर्दछ) । गर्भको बालक चल्न थाल्नुभन्दा अघि पुंसवन संस्कार गर्नू । छ-आठ महिनाको गर्भ भएपछि सीमन्तोन्नयन र बालक जन्मेपछि जातकर्म संस्कार गर्नुपर्दछ ।

**अहन्येकादशे नाम चतुर्थे मासि निष्क्रमः ।**

**षष्ठेऽन्नप्राशनं मासि चूडा कार्या यथाकुलम् ॥१२॥**

जन्मेको एघार दिनमा नामकर्म, जन्मेको चौथो महिनामा निष्क्रमण (सूर्यदर्शन), बालक छ महिनाको भएपछि अन्नप्राशन र कुलपरम्परा अनुसार चूडाकर्म संस्कार गर्नू ।

**एवमेनः शमं याति बीजगर्भसमुद्भवम् ।**
**तूष्णीमेताः क्रियाः स्त्रीणां विवाहस्तु समन्त्रकः ॥१३॥**

संस्कारले वीर्य र गर्भसम्बन्धी दोष शान्त हुन्छ तथा शुक्र-रगतजन्य शारीरिक रोग छुट्दछ । बालिकाको (अन्य) सबै संस्कारहरु बिनामन्त्र गरी विवाह संस्कारमा मन्त्रको प्रयोग गर्नु पर्दछ ।

**गर्भाष्टमेऽष्टमे वाऽब्दे ब्राह्मणस्योपनायनम् ।**
**राज्ञामेकादशे सैके विशामेके यथाकुलम् ॥१४॥**

गर्भरहेको वा जन्मेको समयदेखि आठ वर्षमा ब्राह्मणको, एघार वर्षमा छेत्रीको र बाह्र वर्षमा वैश्यको कुल-परम्परा अनुसार उपनयन संस्कार गर्नू ।

**उपनीय गुरुः शिष्यं महाव्याहृतिपूर्वकम् ।**
**वेदमध्यापयेदेनं शौचाचाराँश्च शिक्षयेत् ॥१५॥**

गुरुले शिष्यको उपनयन गराई महाव्याहृतिका साथ वेद पढाउनू र पवित्र आचरण र नियमका विषयमा जानकारी दिनू ।

**दिवा सन्ध्यासु कर्णस्थब्रह्मसूत्र उदङ्मुखः ।**
**कुर्यान्मूत्रपुरीषे च रात्रौ चेद्दक्षिणामुखः ॥१६॥**

कानमा जनै सिउरेर दिउसो उत्तरतिर र रातमा दक्षिणतिर फर्केर दिसापिसाब गर्नू ।

**गृहीतशिश्नश्चोत्थाय मृद्भिरभ्यद्धृतैर्जलैः ।**
**गन्धलेपक्षयकरं शौचं कुर्यादतन्द्रितः ॥१७॥**

मलमूत्र त्याग गरेपछि अल्छी नगरी दुर्गन्ध हटाउन मूत्राङ्गलाई माथि उठाई गुदद्वार आदि अङ्गलाई छुट्टै राखिएको माटो दलेर राम्ररी धुनू ।



**अन्तर्जानु शुचौ देश उपविष्ट उदङ्मुखः ।**
**प्राग्वा ब्राह्मेण तीर्थेन द्विजो नित्यमुपस्पृशेत् ॥१८॥**

द्विजले पवित्र स्थानमा उत्तर वा पूर्वतिर फर्केर बसी दुवै हात घुँडाभित्र पारी ब्रह्मतीर्थले आचमन गर्नू ।

**कनिष्ठादेशिन्यङ्गुष्ठमुलान्यग्रं करस्य च ।**
**प्रजापतिपितृब्रह्मदेवतीर्थान्यनुक्रमात् ॥१९॥**

(दाहिने) हत्केलाको कान्छी औँलोको फेद, चोर औँलोको फेद, बूढी औँलोको फेद र अघिल्लो भाग (टुप्पो) क्रमशः प्राजापत्य, पितृ, ब्रह्म र देवतीर्थ हुन् ।

**त्रिः प्राश्यापो द्विरुन्मृज्य खान्यद्भिः समुपस्पृशेत् ।**
**अद्भिस्तु प्रकृतिस्थाभिर्हीनाभिः फेनबुद्बुदैः ॥२०॥**

केही नमिसिएको (गन्ध, रूप, रस र स्पर्शमा भिन्नता नआएको) र फिँज-फोका केही नउठेको र पवित्र जलले तीन पटक आचमन गर्नू, बूढी औँलाको फेदले दुई पटक मुख पुछ्नू, जलमा जलमा

चोपिएको बूढी औंलो र चोर औंलोको टुप्पोले नाक र मुख छुनू । जलमा चोपिएको बूढी औंलो र साहिँली औंलोको टुप्पोले आँखा र कान छुनू । जलमा चोपिएको बूढी औंलो र कान्छी औंलोले नाइटो र छाती छुनू । अन्तमा हत्केलाको टुप्पोले शिर छुनू ।

**हृत्कण्ठतालुगाभिस्तु यथासङ्ख्यं द्विजातयः ।**
**शुध्येरन्स्त्री च शूद्रश्च सकृत्स्पृष्टाभिरन्ततः ॥२१॥**

यसरी आचमन गरिएको जल हृदय, कण्ठ र तालुमा पुग्दा क्रमशः ब्राह्मण, क्षत्री र वैश्य शुद्ध हुन्छन् । स्त्री र शूद्र तालुले जलस्पर्श पाई तुरुन्त शुद्ध हुन्छन् । व्रतबन्ध नगरेकाका लागि पनि आचमनको यही विधान हो ।

**स्नानमब्दैवतैर्मन्त्रैर्मार्जनं प्राणसंयमः ।**
**सूर्यस्य चाप्युपस्थानं गायत्र्याः प्रत्यहं जपः ॥२२॥**

स्नान गर्दा अब्दैवत मन्त्र (आपोहिष्ठा...आदि) ले शरीर माडी त्यसपछि प्राणायाम गर्नू । बिहान प्राणायाम पछि सौर्यमन्त्रले सूर्योपस्थान गरी अनि गायत्री मन्त्र जप्नू ।

**गायत्रीं शिरसा सार्धं जपेद्व्याहृतिपूर्विकाम् ।**
**प्रतिप्रणवसंयुक्तां त्रिरयं प्राणसंयमः ॥२३॥**

शिरोमन्त्र र महाव्याहृति सहित गायत्री मनमनै तीन पटक जप्नू । प्रत्येक महाव्याहृति अगाडि ॐ भन्नु र पूरै मन्त्र एकपटक जप गर्दासम्म सास रोक्नू । यसरी जप गर्दा एक पटक प्राणायाम गरेको मानिन्छ ।

**प्राणानायम्य सम्प्रोक्ष्य तृचेनाब्दैवतेन तु ।**
**जपन्नासीत सावित्रीं प्रत्यगातारकोदयात् ॥२४॥**

प्राणायाम पछि मार्जनको अब्दैवत मन्त्रले शीरमा जल छर्कनू । साँझमा पश्चिम फर्केर तारा नउदाएसम्म र...।

**सन्ध्यां प्राक्प्रातरेवं हि तिष्ठेदासूर्यदर्शनात् ।**
**अग्निकार्यं ततः कुर्यात्सन्ध्ययोरुभयोरपि ॥२५॥**

बिहान पूर्व फर्की सूर्य नउदाएसम्म गायत्री जप्नु गायत्री जपे पछि

दुवै सन्ध्यामा अग्निहोत्र (होम) गर्नु पर्दछ ।

व्याख्या : सूर्यको दर्शन नहुने (उदाउन आँटेको वा भर्खर अस्ताएको) तर सूर्यको मण्डल वा प्रकाशको घेरा मात्र दर्शन हुने समयलाई सन्ध्याकाल भनिन्छ ।

**ततोऽभिवादयेद्वृद्धानसावहमिति ब्रुवन् ।**
**गुरुं चैवाप्युपासीत स्वाध्यायार्थं समाहितः ॥२६॥**

ब्रह्मचारीले होम सकेपछि आफ्नो नाम भन्दै गुरु लगायतका वृद्धजनलाई (नित्य) नमस्कार (यथायोग्य अभिवादन) गर्नू । एकाग्र चित्तले गुरुले बोलाएपछि मात्र अध्ययन गर्न शुरु गर्नू ।

**आहूतश्चाप्यधीयीत लब्धं चास्मै निवेदयेत् ।**
**हितं तस्याचरेन्नित्यं मनोवाक्कायकर्मभिः ॥२७॥**

भिक्षामा पाइएका सबै कुरा गुरुलाई चढाउनू । मन, वचन र शरीरले
सदा गुरुको हितका कार्य गर्नू ।

**कृतज्ञाद्रोहिमेधाविशुचिकल्यानसूयकाः ।**
**अध्याप्या धर्मतः साधुशक्ताप्तज्ञानवित्तदाः ॥२८॥**

कृतज्ञ (अरुले गरेको उपकार नबिर्सने), दयालु, मेधावी (पढेको कुरा बुझ्न र सम्झन सक्ने), शुद्ध (बाहिरी र भित्री दुवै रूपमा चोखो), निरोगी, अछिद्रान्वेषी (दोष लुकाउने तर गुण फैलाउने), सदाचारी, आज्ञापालक, सुखदुःखको साथी, विद्या-विस्तार गर्ने र उदार
शिष्यलाई मात्र पढाउनु धर्म हुन्छ ।

**दण्डाजिनोपवीतानि मेखलां चैव धारयेत् ।**
**ब्राह्मणेषु चरेद्भैक्षमनिन्द्येष्वात्मवृत्तये ॥२९॥**

ब्रह्मचारीले दण्ड, मृगचर्म, जनै र कन्धनी धारण गर्नु (लिनू वा लगाउनू) । यी लगाएर वा लिएर जीवन धान्नका लागि सदाचारी ब्राह्मणका घरहरुमा मात्र भिक्षा माग्न जाने गर्नू ।

**आदिमध्यावसानेषु भवच्छब्दोपलक्षिता ।**
**ब्राह्मणक्षत्रियविशां भैक्षचर्या यथाक्रमम् ॥३०॥**

भिक्षा माग्ने समयमा ब्राह्मण, क्षत्रिय र वैश्यले 'भवति' शब्दलाई क्रमशः शुरु, मध्य र अन्तमा प्रयोग गर्नू ।

**कृताग्निकार्यो भुञ्जीत वाग्यतो गुर्वनुज्ञया ।**
**आपोशानक्रियापूर्वं सत्कृत्यान्नमकुत्सयन् ॥३१॥**

मागेर लेराइएको भिक्षा गुरुलाई समर्पण गर्दै उनको आज्ञाले होम सकी विधिपूर्वक आचमन गरी पस्किएको खानालाई पूजा एवं सत्कार गर्दै मौन भएर खानुपर्दछ ।

**ब्रह्मचर्ये स्थितो नैकमन्नमद्यादनापदि ।**
**ब्राह्मणः काममश्नीयाच्छ्राद्धे व्रतमपीडयन् ॥३२॥**

सामान्य परिस्थितिमा एउटै घरको अन्नले पेट भर्ने नगर्नू । श्राद्धमा निमन्त्रित ब्राह्मण ब्रह्मचारीले भने आफ्नो ब्रह्मचर्य व्रत खण्डित नहुने कुराहरु मात्र पेटभरी खान हुन्छ ।

**मधुमांसाञ्जनोच्छिष्टशुक्तस्त्रीप्राणिहिंसनम् ।**
**भास्करालोकनाश्लीलपरिवादादि वर्जयेत् ॥३३॥**



(ब्रह्मचारीले) मह-मासु खान, (घिउ आदिले शरीर) मालिश गर्न , गाजल लगाउन, (गुरुबाहेक अरुको) जुठो खान, कठोर बोली बोल्न, स्त्री सहवास गर्न, हिँसा गर्न, उदयास्तकालीन सूर्यको दर्शन गर्न, असत्य वा अश्लील कुरा गर्न र अर्काको दोष देखाउन (कुरा काट्न) हुँदैन ।

**स गुरुर्यः क्रियाः कृत्वा वेदमस्मै प्रयच्छति ।**
**उपनीय ददद्वेदमाचार्यः स उदाहृतः ॥३४॥**

गर्भाधानदेखि उपनयनसम्मका संस्कार विधिपूर्वक गराई ब्रह्मचर्याश्रममा रही वेद पढ्न प्रेरित गर्नेलाई "गुरु" भनिन्छ । उपनयन (व्रतबन्ध) मात्र गराई वेदज्ञान दिनेलाई "आचार्य" भनिन्छ ।

**एकदेशमुपाध्याय ऋत्विग्यज्ञकृदुच्यते ।**
**एते मान्या यथापूर्वमेभ्यो माता गरीयसी ॥३५॥**

वेदको कुनै एक भाग वा अङ्ग पढाउनेलाई "उपाध्याय" तथा यज्ञकर्म गराउनेलाई "ऋत्विक्" भनिन्छ । यी क्रमशः पूजनीय हुन्छन् । यीभन्दा पनि श्रेष्ठ स्थान माताको हुन्छ ।

**प्रतिवेदं ब्रह्मचर्यं द्वादशाब्दानि पञ्च वा ।**
**ग्रहणान्तिकमित्येके केशान्तश्चैव षोडशे ॥३६॥**

एक वेदको अध्ययन काल बाह्र वर्षसम्म नसके पाँच वर्षसम्म ब्रह्मचर्यमा रही
सोह्र वर्षको भएपछि केशान्त कर्म गर्नु पर्दछ ।

व्याख्या : केशान्त कर्ममा हुने र सक्नेले गुरुलाई गुरुदक्षिणामा गाई दान दिनु पर्दछ र नसक्नेले कपाल मात्र खौरनु पर्दछ ।

**आषोडशाद्द्वाविंशाच्चतुर्विंशाच्च वत्सरात् ।**
**ब्रह्मक्षत्रविशां काल औपनायनिकः परः ॥३७॥**

ब्राह्मण, क्षत्रिय र वैश्यको व्रतबन्ध गर्ने अन्तिम उमेर क्रमशः सोह्र, बाइस र चौबीस वर्ष हो ।

**अतऊर्ध्वं पतन्त्येते सर्वधर्मबहिष्कृताः ।**
**सावित्रीपतिता व्रात्या व्रात्यस्तोमादृते क्रतोः ॥३८॥**



यो समय भित्र पनि व्रतबन्ध नगर्ने पतितलाई कुनै पनि धर्मकर्म गर्ने अधिकार हुँदैन, उ गायत्री
मन्त्रको दान दिन योग्य हुँदैन र “व्रात्य” भनेर चिनिन्छ ।

**मातुर्यदग्रे जायन्ते द्वितीयं मौञ्जिबन्धनात् ।**
**ब्राह्मणक्षात्रविशस्तस्मादेते द्विजाः स्मृताः ॥३९॥**

ब्राह्मण, क्षत्रिय र वैश्यहरुको एकपटक आमाको कोखबाट र अर्को पटक उपनयन गर्दा
कन्धनी बाँधेर जन्म हुन्छ । दुई पटक जन्म हुने हुनाले नै यिनलाई “द्विज” भनिएको हो ।

**यज्ञानां तपसाञ्चैव शुभानाञ्चैव कर्मणाम् ।**
**वेद एव द्विजातीनां निःश्रेयसकरः परः ॥४०॥**

यज्ञ, तपस्या, व्रत, संस्कार आदि सबै कर्म वेदबाटै प्राप्त हुने हुनाले द्विजातिका
लागि वेद अति नै श्रेयस्कर हुन्छ ।

**मधुना पयसा चैव स देवाँस्तर्पयेद् द्विजः ।**

**पितॄन्मधुघृताभ्याञ्च ऋचोऽधीते हि योऽन्वहम् ॥४१॥**

प्रतिदिन ऋग्वेदका मन्त्र पढ्नाले देवतालाई मह र दूधले तर्पण दिएको तथा पितृलाई मह र घिउले तर्पण दिएको जति नै फल प्राप्त हुन्छ ।

**यजूँषि शक्तितोधीते योऽन्वहं स घृतामृतैः ।**
**प्रीणाति देवानाज्येन मधुना च पितॄस्तथा ॥४२॥**

प्रतिदिन यजुर्वेदका मन्त्रहरु पढ्नाले देवतालाई घिउ र जलले तर्पण दिएको तथा पितृलाई मह र तेलले तर्पण दिएको फल प्राप्त हुन्छ ।

**स तु सोमघृतैर्देवाँस्तर्पयेद्योऽन्वहं पठेत् ।**
**सामानि तृप्तिं कुर्याच्च पितॄणां मधुसर्पिषा ॥४३॥**

प्रतिदिन सामवेदका मन्त्रहरु पढ्नाले देवतालाई घिउ र सोमले तर्पण दिएको तथा पितृलाई मह र घिउले तर्पण दिएको फल प्राप्त हुन्छ ।



**मेदसा तर्पयेद्देवानथर्वाङ्गिरसः पठन् ।**
**पितॄँश्च मधुसर्पिर्भ्यामन्वहं शक्तितो द्विजः ॥४४॥**

प्रतिदिन यथाशक्ति अथर्ववेदका मन्त्रहरु पढ्नाले देवतालाई बोसोले तर्पण दिएको तथा पितृलाई मह र घिउले तर्पण दिएको फल प्राप्त हुन्छ ।

**वाकोवाक्यं पुराणञ्च नाराशंसीश्च गाथिकाः ।**
**इतिहासाँस्तथा विद्याः शक्त्याधीते हि योऽन्वहम् ॥४५॥**
**मांसक्षीरौदनमधुतर्पणं स दिवौकसाम् ।**
**करोति तृप्तिं कुर्याच्च पितॄणां मधुसर्पिषा ॥४६॥**

प्रतिदिन यथाशक्ति प्रश्नोत्तररुपी वेदवाक्यहरु अर्थात तर्कशास्त्र, पुराणहरु, रुद्र देवताका मन्त्र, वेद प्रसंशा गर्ने कथाहरु, महाभारत आदि इतिहास र वारुणादि विद्या पढ्नेले मासु, दूध, भात र महले देवतालाई तथा मह र घिउले पितृलाई तर्पण दिएको फल प्राप्त गर्दछ ।

**ते तृप्तास्तर्पयन्त्येनं सर्वकामफलैः शुभैः ।**

**यं यं क्रतुमधीते च तस्य तस्याप्नुयात्फलम् ॥४७॥**
**त्रिर्वित्तपूर्णपृथिवीदानस्य फलमश्नुते ।**
**तपसश्च परस्येह नित्यस्वाध्यायवान्द्विजः ॥४८॥**

ग्रन्थको पाठबाट प्रसन्न भएका देवता र पितृहरुले उसलाई चाहे अनुसारको फल दिएर सुखी र आनन्दित बनाउँदछन् । यस्ता ग्रन्थ पाठ गर्नेहरुले आफूले जुन जुन यज्ञ गर्ने विधान भएका ग्रन्थहरु पढेको हो त्यही त्यही यज्ञ गरेको फल प्राप्त गर्दछन् ।

**नैष्ठिको ब्रह्मचारी तु वसेदाचार्यसन्निधौ ।**
**तदभावेऽस्य तनये पत्न्यां वैश्वानरेऽपि वा ॥४९॥**

निष्ठावान ब्रह्मचारीले अध्ययनकालमा गुरु, गुरुपुत्र, गुरुपत्नी वा यज्ञ-अग्निका सामु बस्ने गर्नू, आफूलाई स्वतन्त्र नराख्नू ।

**अनेन विधिना देहं साधयन्विजितेन्द्रियः ।**
**ब्रह्मलोकमवाप्नोति न चेह जायते पुनः ॥५०॥**



यस्तो विधिले शरीर-साधना गर्ने र प्रयत्नपूर्वक इन्द्रियलाई वशमा गर्ने ब्रह्मचारी ब्रह्मलोक जाने अधिकारी हुन्छ र उसले फेरी यहाँ जन्मनु-मर्नु पनि पर्दैन ।

इति ब्रह्मचारिप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत ब्रह्मचारिप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ विवाहप्रकरणम् (३)

**गुरवे तु वरं दत्त्वा स्नायाद्वा तदनुज्ञया ।**
**वेदं व्रतानि वा पारन्नीत्वा ह्युभयमेव वा ॥५१॥**

(ब्रह्मचर्याश्रम सकेपछि चाहनेले) वेद पूरै पढिसकेर अथवा व्रत सकेर अथवा वेद र व्रत दुवै सकेर त्योपनि नसके गुरुको आज्ञा लिई उनलाई दक्षिणा दिई समावर्तन स्नान गर्नू ।

**अविप्लुतब्रह्मचर्यो लक्षण्यां स्त्रियमुद्वहेत् ।**
**अनन्यपूर्विकां कान्तामसपिण्डां यवीयसीम् ॥५२॥**

ब्रह्मचर्य व्रत खण्डित नगरी लक्षणकी स्त्रीसँग विवाह गर्नू । पहिले टिकाटालो नगरिएकी वा अरु कसैले नभोगिएकी वा अविवाहिता, कोमल, सपिण्ड बाहिरकी, आफूभन्दा कम उमेर र उचाइकी,..।

**अरोगिणीं भ्रातृमतीमसमानार्षगोत्रजाम् ।**
**पञ्चमात्सप्तमादूर्ध्वं मातृतः पितृतस्तथा ॥५३॥**



असाध्य (निको नहुने) रोग नलागेकी, दाजुभाई भएकी, आफ्नोभन्दा बेग्लै गोत्र र प्रवरकी, आफ्नी आमाबाट पाँच र आफ्ना बाबुबाट सात पुस्ता परकी,..।

**दशपूरुषविख्याताच्छ्रोत्रियाणां महाकुलात् ।**
**स्फीतादपि न सञ्चारिरोगदोषसमन्वितात् ॥५४॥**

आमाबाबुको पाँच-पाँच पुस्तादेखि प्रख्यात श्रोत्रिय र सम्पन्न कुलकी, शुक्र-रगत जन्य सेतो कुष्ठ आदि रोग नभएकी,...।

**एतैरेव गुणैर्युक्तः सवर्णः श्रोत्रियो वरः ।**
**यत्नात्परीक्षितः पुंस्त्वे युवा धीमान्जनप्रियः ॥५५॥**

यी (र यस्तै) गुणले युक्त कन्यालाई सवर्ण, श्रोत्रिय, जवान, व्यावहारिक र जनप्रिय वरसँग प्रयत्नपूर्वक उसको मर्दानापन राम्ररी जाँची विवाह गर्नू ।

**यदुच्यते द्विजातीनां शूद्राद्दारोपसङ्ग्रहः ।**

**नैतन्मम मतं यस्मात्तत्रायं जायते स्वयम् ॥५६॥**

मेरो (याज्ञवल्क्यको) विचार द्विजले शूद्रासँग विवाह गर्नुहुन्छ भन्ने होइन, किनकि कन्या (पत्नी) का माध्यमबाट आफू नै पुत्रकारुपमा जन्मिने हुनाले कन्यालाई जाया भनिएको हो पुत्र (सन्तान) जन्माउने कारणले भनिएको होइन ।

**तिस्रो वर्णानुपूर्व्येण द्वे तथैका यथाक्रमम् ।**
**ब्राह्मणक्षत्रियविशां भार्या स्वा शूद्रजन्मनः ॥५७॥**

वर्णक्रम अनुसार ब्राह्मणले तीन, क्षत्रियले दुई, वैश्यले एक र शूद्रले शूद्रसँग मात्र विहाबारी गर्न हुन्छ ।

**ब्राह्मो विवाह आहूय दीयते शक्त्यलङ्कृता ।**
**तज्जः पुनात्युभयतः पुरुषानेकविंशतिम् ॥५८॥**

आमन्त्रित वरलाई शक्ति अनुसार अलङ्कृत-कन्या दिनु "ब्राह्म-विवाह" हो । यसबाट जन्मने सन्तानले अगाडिपछाडिका दश-दश र आफू समेत गरी एक्काइस पुस्ताको उद्धार गर्दछ ।



**यज्ञस्थः ऋत्विजे दैव आदायार्षस्तु गोद्वयम् ।**
**चतुर्दश प्रथमजः पुनात्युत्तरजश्च षट् ॥५९॥**

यज्ञमा उपस्थित ऋत्विज्लाई कन्या दिनु "दैव-विवाह" र वरसँग दुई वटा गाई लिएर कन्या दिनु "आर्ष-विवाह" हो । पहिलोको पुत्रले चौध र पछिल्लोको पुत्रले छ पुस्ताको उद्धार गर्दछ ।

**इत्युक्त्वा चरतां धर्मं सह या दीयतेर्थिने ।**
**स कायः पावयेत्तज्ज षट् षड्वंश्यान्सहात्मना ॥६०॥**

"सह-धर्म निभाउनू" भन्दै कन्या दिई गरिने विवाह "प्राजापत्य-विवाह" हो । यसबाट जन्मिने पुत्रले छ-छ पुस्ताको उद्धार गर्दछ ।

**आसुरो द्रविणादानाद्गान्धर्वः समयान्मिथः ।**
**राक्षसो युद्धहरणात्पैशाचः कन्यकाछलात् ॥६१॥**

धन लिएर गरिने विवाह "आसुर-विवाह", आपसमा प्रेम बसी गरिने विवाह "गान्धर्व-विवाह", युद्ध जितेर गरिने विवाह "राक्षस-विवाह" र कन्यालाई छलले विवाह गर्नु "पैशाच-विवाह" हो ।

**पाणिर्ग्राह्यः सवर्णासु गृह्णीयात्क्षत्रिया शरम् ।**
**वैश्या प्रतोदमादद्याद्वेदने त्वग्रजन्मनः ॥६२॥**

समान जातसँगको विहेमा पाणिग्रहण गर्नू । उच्च जाति सँगको बिहेमा भने छेत्रिनीले वाण र वैश्याले कोर्रा समाउनु पर्दछ ।

**पिता पितामहो भ्राता सकुल्यो जननी तथा ।**
**कन्याप्रदः पूर्वनाशे प्रकृतिस्थः परः परः ॥६३॥**

पिता, हजूरबा, दाजुभाई, सपिण्डी दाजुभाई र मातामध्ये पहिलो नभए वा अप्राकृतिक (उन्मत्त आदि) भए क्रमशः दोश्रो कन्यादानका अधिकारी हुन्छन् ।

**अप्रयच्छन्समाप्नोति भ्रूणहत्यामृतावृतौ ।**
**गम्यं त्वभावे दातृणां कन्या कुर्यात्स्वयम्वरम् ॥६४॥**



कन्यादान नगरे प्रत्येक पटक उनी परसर्दा भ्रूण-हत्या गरेको पाप बाबुलाई लाग्दछ । कन्यादान गर्ने कोही पनि नभएको अवस्थामा कन्याले आफूखुशी योग्य वर खोज्न सक्दछे ।

**सकृत्प्रदीयते कन्या हरँस्ताञ्चोरदण्डभाक् ।**
**दत्तामपि हरेत्पूर्वाच्छ्रेयाँश्चेद्वर आव्रजेत् ॥६५॥**

कन्यादानको वचन एक पटक मात्र दिइने हुनाले त्यसलाई नमान्नेले चोरेको दण्ड पाउँदछ । पहिलोभन्दा उत्तम केटो पाएको अवस्थामा भने वचन फेर्दा पनि कुनै दोष हुँदैन ।

**अनाख्याय ददद्दोषं दण्ड्य उत्तमसाहसम् ।**
**अदुष्टान्तु त्यजन्दाण्ड्यो दूषयँस्तु मृषा शतम् ॥६६॥**

दोष लुकाई विहे गराउने र झुटो दोष देखाई परित्याग गर्ने : यी दुवैलाई एक हजार असी पण (तामाको पैसा) तथा कुमारीमा झुटो दोष देखाउनेलाई सय पण जरिवाना गर्नू ।

**अक्षता च क्षता चैव पुनर्भूः संस्कृता पुनः ।**

**स्वैरिणी या पतिं हित्वा सवर्णं कामतः श्रयेत्॥६७॥**

आफूले विवाह गरेको पतिसँग यौन सम्पर्क नगरीकन अर्कोसँग विवाह गर्ने स्त्रीलाई "पुनर्भू" र बिहे गरेर फेरी सजातीय अर्को पुरुषलाई वरण गर्ने स्त्रीलाई "स्वैरिणी" भनेर जान्नू ।

व्याख्या : टिकाकार विज्ञानेश्वरले पुनर्भू स्त्रीका दुई रुप मानेका छन् , पहिली "क्षता योनी" अर्थात् विवाहपूर्व नै कुनै पुरुषसँग यौन सम्पर्क राख्ने र दोश्री "अक्षता योनी" अर्थात विवाहपछि पर-पुरुषसँग यौन सम्पर्क राख्ने ।

**अपुत्रां गुर्वनुज्ञातो देवरः पुत्रकाम्यया ।**
**सपिण्डो वा सगोत्रो वा घृताभ्यक्त ऋतावियात्॥६८॥**
**आगर्भसम्भवाद्गच्छेत्पतितस्त्वन्यथा भवेत् ।**
**अनेन विधिना जातःक्षेत्रजोऽस्य भवेत्सुतः ॥६९॥**

छोरा नपाउने स्त्री ऋतुमती हुँदा पिता, ससुरा आदि मान्यजनको अनुमतिमा देवर, सपिण्डी वा सगोत्री दाजुभाईले सबै अङ्गमा घिउ दलेर उसका साथ गर्भ नरहेसम्म सहवास गर्नू । गर्भ रहेपछि पनि सम्भोग गर्ने व्यक्ति भने पतित हुन्छ । यस विधिले जन्मने पुत्र क्षेत्रज हुन्छ ।



व्याख्या : यसलाई "नियोगविधि" भनिएको छ र कलियुगमा यो विधि अपनाउन निषेध गरिएको छ ।

**हृताधिकारां मलिनां पिण्डमात्रोपजीविनम् ।**
**परिभूतामधःशय्यां वासयेद्व्यभिचारिणीम्॥७०॥**

कुलटालाई अधिकार खोसी, मलिन र दोषी बनाई, बाँच्न पुग्ने मात्र खाने कुरा दिई भुईँमै सुत्न लगाउनु पर्दछ ।

**सोमः शौचं ददावासां गन्धर्वश्च शुभाङ्गिरम् ।**
**पावकः सर्वमेध्यत्वं मेध्या वै योषितो ह्यतः ॥७१॥**

विवाहपूर्व नै स्त्रीलाई भोगी सोमले शुद्धता, गन्धर्वले मधुर-वाणी र अग्निले पवित्रता प्रदान गर्ने हुनाले चुम्बनादिले स्त्री अपवित्र हुन्न भनिएको छ ।

**व्यभिचारादृतौ शुद्धिर्गर्भे त्यागो विधीयते ।**
**गर्भभर्तृवधादौ च तथा महति पातके ॥७२॥**

व्यभिचारपूर्वक धारण गरिएको गर्भ त्याग गर्नुपर्ने विधान छ । आफ्नै लोग्नेलाई मार्न खोज्ने वा महापापमा संलग्न हुने पत्नीलाई पनि त्याग गर्नू ।

**सुरापी व्याधिता धूर्ता वन्ध्यार्थघ्नप्रियम्वदा ।**
**स्त्रीप्रसूश्चाधिवेत्तव्या पुरुषद्वेषिणी तथा ॥७३॥**

मदिरा पिउने, दीर्घरोगी, धूर्त, बाँझी, धन सक्ने, नमिठो बोल्ने, छोरी नै छोरी पाउने र पुरुष (पति) प्रति द्वेष गर्ने पत्नी भए उनी हुँदाहुँदै दोश्री बिहे गर्न सकिन्छ ।

**अधिविन्ना तु भर्तव्या महदेनोऽन्यथा भवेत् ।**
**यत्तानुकूल्यं दम्पत्योस्त्रिवर्गस्तत्र वर्धते ॥७४॥**

यसरी अर्को विवाह गरे जेठीलाई पनि धर्म अनुसार भरण-पोषण गर्नुपर्दछ, नगरे अन्याय हुन्छ किन कि सुखमय दाम्पत्य जीवनमै धर्म, अर्थ र कामको वृद्धि हुन्छ ।

**मृते जीवति वा पत्यौ या नान्यमुपगच्छति ।**

**सेह कीर्तिमवाप्नोति मोदते चोमया सह ॥७५॥**

पति हुँदा वा नहुँदा सधैं पतिव्रता धर्ममा रहने स्त्रीले यस लोकमा सम्मान र यश तथा परलोकमा उमा (पार्वती) सँगै बस्न पाउँदछे ।

**आज्ञासम्पादिनीं दक्षां वीरसूं प्रियवादिनीम् ।**
**त्यजन्दाप्यस्तृतीयांशमद्रव्यो भरणं स्त्रियाः ॥७६॥**

आज्ञाकारी, दक्ष, पुत्रवती र मधुरभाषिणी पत्नीलाई त्यागी अर्को विवाह गर्नेसँगबाट एक तिहाई सम्पत्ति वा भरण-पोषणको व्यवस्था प्रथम पत्नीलाई दिलाई दिनुपर्दछ ।

**स्त्रीभिर्भर्तृवचः कार्यमेष धर्मः परः स्त्रियाः ।**
**आशुद्धेः सम्प्रतीक्ष्यो हि महापातकदूषितः ॥७७॥**

पतिको आज्ञापालन गर्नु स्त्रीको परम धर्म हो । पति महापापले दूषित हुँदा पनि उसलाई नत्यागी प्रायश्चित गरेर शुद्ध नहुन्जेलसम्म प्रतीक्षा गर्नु पर्दछ ।

लोकानन्त्यं दिवः प्राप्तिः पुत्रपौत्रप्रपौत्रकैः ।
यस्मात्तस्मात्स्त्रियः सेव्याः कर्तव्याश्च सुरक्षिताः ॥७८॥

यस लोकमा वंशवृद्धि तथा परलोकमा छोरा, नाती, पनातीले गर्दा सद्गति प्राप्त हुने साधन मानी स्त्रीलाई रक्षा र उचित पालन-पोषण गर्नु हरेक पतिको कर्तव्य हो ।

षोडशर्तुनिशाः स्त्रीणां तस्मिन्युग्मासु सम्विशेत् ।
ब्रह्मचर्येव पर्वाण्याद्याश्चतस्रस्तु वर्जयेत् ॥७९॥

ऋतुकालका सोह्र मध्ये जोर रातमा स्त्री-समागम गर्नू । समागममा रजस्वला हुँदाका शुरुका चार रात र पर्व त्याग्ने पुरुषलाई ब्रह्मचारी नै मानिन्छ ।

एवं गच्छन् स्त्रियं क्षामां मघां मूलञ्च वर्जयेत् ।
सुस्थ इन्दौ सकृत्पुत्रं लक्षण्यं जनयेत्पुमान् ॥८०॥

मघा र मूल नक्षत्र नपरेको र चन्द्रमा एघारौं स्थान (भाव) मा रहेको समयमा ऋतुमती स्त्रीसँग गरिने समागमबाट शुभ लक्षणको छोरो जन्मिन्छ ।



यथाकामी भवेद्वापि स्त्रीणां वरमनुस्मरन् ।
स्वदारनिरतश्चैव स्त्रियो रक्ष्या यत स्मृताः ॥८१॥

ऋतुस्नाता स्त्री बढी कामुक हुने तथा इन्द्रको वरदान अनुसार यी रातमा स्त्रीको कामतृप्ति नगर्ने पुरुषलाई पाप लाग्ने हुनाले पापबाट बच्न र रतिसुखमा सहयोग गर्न
यो बेलामा आफ्नी पत्नीलाई सम्झाउनू ।

भर्तृभ्रातृपितृज्ञातिश्वश्रूश्वशुरदेवरैः ।
बन्धुभिश्च स्त्रियः पूज्या भूषणाच्छानाशनैः ॥८२॥

स्त्रीलाई पति लगायत दाजुभाई, बाबु, बन्धुवान्धव, सासु-ससुरा, देवर तथा अरु नातेदारहरुबाट पनि वस्त्र, आभूषण र भोजनको सम्मान पाउने अधिकार हुन्छ ।

संयतोपस्करा दक्षा हृष्टा व्ययपराङ्मुखी ।
कुर्याच्छ्वशुरयोः पादवन्दनं भर्तृतत्परा ॥८३॥

गृहिणीले गृह-काममा पोख्त, प्रसन्न र मितव्ययी भई सासुससुरालाई दिनहुँ प्रणाम गर्दै पतिको अधिनमा रहनु पर्दछ ।

**क्रीडां शरीरसंस्कारं समाजोत्सवदर्शनम् ।**
**हास्यं परगृहे यानं त्यजेत्प्रोषितभर्तृका ॥८४॥**

पति परदेश हुँदा स्त्रीले धेरै श्रृङ्गार गर्ने, खेल खेल्न, उत्सव हेर्ने, हाँसख्याल गर्ने पर-घरमा जान कम गर्नु पर्दछ वा छाड्नु पर्दछ ।

**रक्षेत्कन्यां पिता विन्नां पतिः पुत्राश्च वार्धके ।**
**अभावे ज्ञातयस्तेषां न स्वातन्त्र्यं क्वचित्स्त्रियाः ॥८५॥**

स्त्रीलाई अविवाहित हुँदा पिताले, विवाह पछि पतिले, वृद्ध हुँदा पुत्रले र यी कोही नहुँदा नातेदारले रक्षा गर्नू, कहिल्यै स्वतन्त्र नछोड्नु ।

**पितृमातृसुतभ्रातृश्वश्रूश्वशुरमातुलैः ।**
**हीना न स्याद्विना भर्त्रा गर्हणीयाऽन्यथा भवेत् ॥८६॥**



पति नहुने स्त्रीले आफ्ना बाबु, आमा, छोरा, दाजुभाई, सासुससुरा, मामा अदिबाट टाढा स्वतन्त्र भई नरहनू, रहेमा पतिता कहलिन्छे ।

**पतिप्रियहिते युक्ता स्वाचारा विजितेन्द्रिया ।**
**सेह कीर्तिमवाप्नोति प्रेत्य चानुत्तमाङ्गतिम् ॥८७॥**

पति-हितलाई आफ्नो हित सम्भी कार्य गर्ने, सदाचारिणी र इन्द्रियजिता स्त्रीले यसलोकमा कीर्ति र परलोकमा उत्तम गति पाउँदछे ।

**सत्यामन्यां सवर्णायां धर्मकार्यं न कारयेत् ।**
**सवर्णासु विधौ धर्म्ये ज्येष्ठया न विनेतरा ॥८८॥**

समान वर्णकी पत्नी हुँदाहुँदै असमान वर्णकी पत्नीका हातबाट धर्मकर्म नगराउनू । सवर्णमा पनि धेरै वटी पत्नी भए जेठी पत्नीका हातबाट धर्मकर्म गराउनू ।

**दाहयित्वाग्निहोत्रेण स्त्रियं वृत्तवतीं पतिः ।**

**आहरेद्विधिवद्दारानग्नींश्चैवाविलम्बयन् ॥८९॥**

असल पत्नीको मरण भएमा अग्निहोत्रको अग्निले उसको दाहसंस्कार गरी पतिले पुनः अग्नि आधान गर्दै बिहे गर्नू, ढिलो नगर्नू ।

**इति विवाहप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत विवाहप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

## अथ वर्णजातिविवेकप्रकरणम् (४)

**सवर्णेभ्यः सवर्णासु जायन्ते हि सजातयः ।**
**अनिन्द्येषु विवाहेषु पुत्राः सन्तानवर्धनाः ॥९०॥**

एउटै जातका स्त्रीपुरुषको अनिन्दित विवाहका विधिबाट कुल बढाउने सजातीय सन्तान जन्मन्छ ।

**विप्रान्मूर्धावसिक्तो हि क्षत्रियायां विशः स्त्रियाम् ।**
**अम्बष्ठः शूद्र्यां निषादो जात पारशवोऽपि वा ॥९१॥**

ब्राह्मणले छेत्रिनीबाट 'मूर्धावसिक्त', वैश्याबाट 'अम्बष्ठ' र शूद्राबाट 'निषाद' वा 'पारशव' सन्तान जन्माउँदछ ।

**वैश्याशूद्र्योस्तु राजन्यान्माहिष्योग्रौ सुतौ स्मृतौ ।**
**वैश्यात्तु करणःशूद्र्यां विन्नाष्वेष विधिः स्मृतः ॥९२॥**



विधिले विवाह गरी क्षत्रियले वैश्या र शूद्राबाट 'माहिष्य' र 'उग्र' तथा वैश्यले शूद्राबाट 'करण' नामका सन्तान जन्माउँदछ ।

**ब्राह्मण्यां क्षत्रियात्सूतो वैश्याद्वैदेहकस्तथा ।**
**शूद्राज्जातस्तु चण्डालः सर्वधर्मबहिष्कृतः ॥९३॥**

क्षत्रीले ब्राह्मणीबाट जन्माउने सन्तानलाई 'सूत', वैश्यले ब्राह्मणीबाट जन्माउने सन्तानलाई 'वैदेहक' र शूद्रले ब्राह्मणीबाट जन्माउने सन्तानलाई सर्बधर्मबाट वहिष्कृत 'चाण्डाल' भनिन्छ ।

**क्षत्रिया मागधं वैश्याच्छूद्रात्क्षत्तारमेव च ।**
**शूद्रादायोगवं वैश्या जनयामास वै सुतम् ॥९४॥**

वैश्यले छेत्रीनीबाट जन्माएको सन्तानलाई 'मागध', शूद्रले छेत्रीनीबाट जन्माएको सन्तानलाई 'क्षत्ता' र शूद्रले वैश्याबाट जन्माउने सन्तानलाई 'आयोगव' भनिन्छ ।

**माहिष्येण करण्यान्तु रथकारः प्रजायते ।**
**असत्सन्तस्तु विज्ञेयाःप्रतिलोमानुलोजमजाः ॥९५॥**

माहिष्यले करणीबाट जन्माउने सन्तान 'रथकार' हुन्छ । उच्चले निम्न वर्णबाट 'अनुलोमज' र निम्नले उच्च वर्णबाट 'प्रतिलोमज' सन्तान जन्माउँदछन् ।

**जात्युत्कर्षो युगे ज्ञेयः सप्तमे पञ्चमेऽपि वा ।**
**व्यत्यये कर्मणां साम्यं पूर्ववच्चाधरोत्तरम् ॥९६॥**

तल्लो जातको कन्या विवाह गरी त्यसबाट जन्मने छोरी माथिल्लो जातमा पाँच वा सात पुस्तासम्म विवाह गरेमा माथिल्लो जातमा उत्कर्ष हुन्छ भने सङ्कटकालमा तल्लो जातको पेसा अपनाउने र सङ्कटकाल सकिँदा पनि सो पेसा नछाडी पाँच वा सात पुस्तासम्म सोही पेसा अपनाएमा पेसा अनुसारकै जातमा परिणत हुन्छन् ।

व्याख्या : उदाहरणका लागि बाहुनले शूद्राबाट निषाद जन्मायो, निषादले जन्माएकी कन्याको बाहुनसँग विवाह भयो, त्यस विवाहबाट जन्मिएकी कन्याको फेरी बाहुन सँगै विवाह भयो यसरी पाँच-सात पुस्तासम्म चलेमा त्यसपछि उत्पन्न पुत्र ब्राह्मण नै हुन्छ ।

**इति वर्णजातिविवेकप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत वर्णजातिविवेकप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

# अथ गृहस्थधर्मप्रकरणम् (५)

**कर्म स्मार्तं विवाहाग्नौ कुर्वीतप्रत्यहं गृही ।**
**दायकालाहृते वापि श्रौतं वैतानिकाग्निषु ॥९७॥**

स्मार्त-कर्म (बलि वैश्वदेव आदि) विवाह अग्निमा र श्रौत-कर्म आहवनीय अग्निमा गर्नु पर्दछ ।

**शरीरचिन्तां निर्वर्त्य कृतशौचविधिर्द्विजः ।**
**प्रातःसन्ध्यामुपासीत दन्तधावनपूर्वकम् ॥९८॥**

प्रातकालमा मलमूत्र विसर्जन र दाँत माझ्ने काम विधिपूर्वक सकेर सन्ध्योपासना गर्नुपर्दछ ।

**हुत्वाग्नीन्सूर्यदैवत्यान्जपेन्मन्त्रान्समाहितः ।**
**वेदार्थानधिगच्छेच्च शास्त्राणि विविधानि च ॥९९॥**

सन्ध्योपासना सकी होम गर्नू र होमगरी सूर्यको मन्त्र ध्यानलाएर जप गर्नू । अनि
वेदादी शास्त्रको अर्थसहित अध्ययन गरी ज्ञान लिनू ।



**उपेयादीश्वरं चैव योगक्षेमार्थसिद्धये ।**
**स्नात्वा देवान्पितॄंश्चैव तर्पयेदर्चयेत्तथा ॥१००॥**

पूजा र स्वाध्याय पछि आजीविकाका साधन बटुल्न र सुरक्षा गर्नमा लाग्नू । मध्याह्नमा
घर फर्की नुहाई देवपितृलाई तर्पण-पूजा गर्नू ।

**वेदाथर्वपुराणानि ऐतिहासानि शक्तितः ।**
**जपयज्ञप्रसिद्ध्यर्थं विद्याञ्चाध्यात्मिकीं जपेत् ॥१०१॥**

जपयज्ञका लागि प्रसिद्ध वेद, अथर्व, पुराण, इतिहास र उपनिषद् पनि यथाशक्ति अध्ययन गर्नू ।

**बलिकर्मस्वधाहोमस्वाध्यायातिथिसत्क्रियाः ।**
**भूतपित्रमरब्रह्ममनुष्याढां महामखाः ॥१०२॥**

भूत यज्ञ, पितृयज्ञ, देवयज्ञ, ब्रह्मयज्ञ र मनुष्य यज्ञ गरी पाँच महायज्ञ दिनहुँ गर्नु पर्दछ ।

**बलिकर्मस्वधाहोम हुतादननाच्छेषाद्भूतबलिं हरेत् ।**
**अन्नं भूमौ श्वचाण्डालवायसेभ्यश्च निक्षिपेत् ॥१०३॥**

देवतालाई समर्पण गरेपछि बाँकी अन्नले भूतबलि दिनु तथा कुकुर, कौवा र चाण्डालकालागि भनी जमिनमा अन्न चढाउनू ।

**अन्नं पितृमनुष्येभ्यो देयमप्यन्वहं जलम् ।**
**स्वाध्यायं सततं कुर्यान्न पचेदन्नमात्मने ॥१०४॥**

सद्गृहस्थले प्रतिदिन देवता र पितृलाई अन्न र सोको अभावमा कन्दमूल-फलफूल वा जल प्रदान गर्नु पर्दछ । आफ्ना लागिमात्र खाना नबनाउनू र नित्य स्वाध्याय गर्नू ।

**बालस्ववासिनीवृद्धगर्भिण्यातुरकन्यकाः ।**
**सम्भोज्यातिथिभृत्याँश्च दम्पत्योः शेषभोजनम् ॥१०५॥**

बालक, माइत आएकी स्त्री, वृद्धजन, गर्भवती, रोगी, कन्या, अतिथि र सेवकलाई खुवाएर मात्र दम्पत्तिले खानू ।



**आपोशनेनोपरिष्टादधस्तादश्नता तथा ।**
**अनग्नममृतञ्चैव कार्यमन्नं द्विजन्मना ॥१०६॥**

खाना खानु पूर्व मन्त्र पढ्दै आफ्नो शरीरमा जल छर्कनू र आचमन गर्नू । पस्केको खानालाई द्विजले अमृत मानी खानू, खाना खुल्ला नछोड्नू ।

**अतिथित्वेन वर्णानां देयं शक्त्यानुपूर्वशः ।**
**अप्रणोघोऽतिथिः सायमपि वाग्भूतृणोदकैः ॥१०७॥**

धेरै अतिथि भए जात अनुसार क्रमैले सत्कार गर्नू । साँझको अतिथिलाई पनि मीठो बोली, आसन, अन्न र जलले सत्कार गर्नू ।

**सत्कृत्य भिक्षवे भिक्षा दातव्या सुव्रताय च ।**
**भोजयेच्चागतान्काले सखिसम्बन्धिबान्धवान् ॥१०८॥**

भिक्षुक र व्रतीलाई सत्कारवूर्पक भिक्षा दिनु पर्दछ । खाना खाने बेला आइपुगेका आफन्तलाई पनि प्रेमपूर्वक खुवाउनू ।

**महोक्षं वा महाजं वा श्रोत्रियायोपकल्पयेत् ।**
**सत्क्रियाऽन्वासनं स्वादु भोजनं सूनृतं वचः ॥१०९॥**

श्रोत्रिय ब्राह्मण अतिथिका रूपमा आए ठूलो साँढे वा बोको दिनू र विधिले सत्कार गर्दै मिष्ठान्न र मधुर वाणीले सन्तुष्ट पार्नू ।

**प्रतिसम्वत्सरं त्वर्घ्याः स्नातकाचार्यपार्थिवाः ।**
**प्रियो विवाह्यश्च तथा यज्ञं प्रत्यृत्विचः पुनः ॥११०॥**

वर्षको एकपल्ट (मात्र) स्नातक, आचार्य, मित्र र ज्वाईं मधुपर्क (अर्घका) लागि योग्य हुन्छन् । ऋत्विजलाई भने प्रत्येक यज्ञमा मधुपर्क (अर्घ) दिनु पर्दछ ।

**अध्वनीनोऽतिथिर्ज्ञेयः श्रोत्रियो वेदपारगः ।**
**मान्यावेतौ गृहस्थस्य ब्रह्मलोकमभीप्सतः ॥१११॥**



बटुवा पनि सद्गृहस्थका अतिथि नै हुन् तर श्रोत्रिय र वेदज्ञ अतिथि पाउनु भनेको ब्रह्मलोक चाहनेका लागि भाग्य नै हो ।

**परपाकरुचिर्न स्यादनिन्द्यामन्त्रणादृते ।**
**वाक्पाणिपादचापल्यं वर्जयेच्चातिभोजनम् ॥११२॥**

मिठो हुन्छ भन्दै श्रद्धापूर्वक नडाकेको ठाउँमा गई नखानू । खाँदा बोली, हात र गोडा संयमित राख्नू, अनि धेरै पनि नखानू ।

**अतिथिं श्रोत्रियं तृप्तमासीमान्तमनुव्रजेत् ।**
**अहःशेषं समासीत शिष्टैरिष्टैश्च बन्धुभिः ॥११३॥**

अघाएको वा तृप्त श्रोत्रिय अतिथिलाई फर्कंदा गाउँको सीमासम्म पुऱ्याउन जानू । खाना खाए पछि बाँकी दिन शिष्टजन र इष्टमित्रसँग बसेर बिताउनू ।

**उपास्य पश्चिमां सन्ध्यां हुत्वाग्नींस्तानुपास्य च ।**

**भृत्यैः परिवृतो भुक्त्वा नातितृप्याथ सम्विशेत् ॥११४॥**

बेलुकीको सन्ध्यावन्धन, होमादि गरी आफ्ना सेवकादिलाई खुवाई आफूले ठीक्क खाई गृह-सञ्चालनका विषयमा सोची अनि सुत्नू ।

**ब्राह्मे मुहूर्ते चोत्थाय चिन्तयेदात्मनो हितम् ।**
**धर्मार्थकामान्स्वे काले यथाशक्ति न हापयेत् ॥११५॥**

बिहान ब्रह्ममुहूर्तमा उठेर आत्मचिन्तन गर्नू तथा दिनभर गरिने धर्म, अर्थ र कामसँग सम्बन्धित कार्य कसरी यथाशक्ति यथासमय पूरा गर्ने होला भनी सोचविचार गर्नू ।

**विद्याकर्मवयोबन्धुवित्तैर्मान्या यथाक्रमम् ।**
**एतैः प्रभूतैः शूद्रोऽपि वार्धके मानमर्हति ॥११६॥**

विद्या, कर्म, उमेर, नाता र धनमध्ये बढी गुणका क्रमशः माननीय हुन्छ । यी सबै वा एक गुण भएको शूद्र पनि वृद्ध छ भने उ सम्माननीय हुन्छ ।



**वृद्धभारिनृपस्नातस्त्रीरोगिवरचक्रिणाम् ।**
**पन्था देयो नृपस्तेषां मान्यः स्नातश्च भूपतेः ॥११७॥**

वृद्ध, भारी बोक्ने, राजा, ब्रह्मचारी, स्त्री, रोगी, बेहुला र गाडावाल (वा मदहोश) आदि भेट हुँदा पहिले राजालाई र त्यो भन्दा पनि पहिले स्नातकलाई बाटो छोडिदिनू ।

**इज्याध्ययनदानानि वैश्यस्य क्षत्रियस्य च ।**
**प्रतिग्रहोऽधिको विप्रे याजनाध्यापने तथा ॥११८॥**

द्विज सबैलाई यज्ञ गर्ने, वेद पढ्ने र दान दिने अधिकार भएपनि ब्राह्मणलाई यज्ञ गराउने, वेद पढाउने र दान लिने अधिकार बढी हुन्छ ।

**प्रधानं क्षत्रिये कर्म प्रजानां परिपालनम् ।**
**कुसीदकृषिवाणिज्यपाशुपाल्यं विशः स्मृतम् ॥११९॥**

क्षत्रियको प्रधान कर्म प्रजापालना गर्नु हो । वैश्यको प्रधान कर्म कृषि, व्यापार, पशुपालन र ब्याजमा धन लगाउनु हो ।

**शूद्रस्य द्विजशुश्रूषा तयाऽजीवन्वणिग्भवेत् ।**
**शिल्पैर्वा विविधैर्जीवेद् द्विजातिहितमाचरन् ॥१२०॥**

शूद्रको प्रधान कर्म द्विजको सेवा गर्नु हो । यसबाट गुजारा नभए वैश्यकर्म वा द्विजातिको हित गर्दै शिल्पकारको पेसा गर्नू ।

**भार्यारतिः शुचिर्भृत्यभर्ता श्राद्धक्रियारतः ।**
**नमस्कारेण मन्त्रेण पञ्चयज्ञान्न हापयेत् ॥१२१॥**

विवाहिता पत्नीका साथ नै रति गर्नू । पवित्र रहनू । सेवकलाई पालनपोषण गर्नू । श्राद्धादि गर्ने गर्नू । नमः भन्दै पञ्चयज्ञ गर्नू, नछाड्नू ।

**अहिंसा सत्यमस्तेयं शौचमिन्द्रियनिग्रहः ।**
**दानं दमो दया क्षान्तिः सर्वेषां धर्मसाधनम् ॥१२२॥**

अहिंसा, सत्यता, नचोर्नु, पवित्रता, इन्द्रिय दमन, दान, संयमता, दया र क्षमा : यी सबै वर्णका लागि धर्मका साधन हुन् ।



**वयोवृद्ध्यर्थवाग्वेषश्रुताभिजनकर्मणाम् ।**
**आचरेत्सदृशीं वृतिमजिह्मामशठां तथा ॥१२३॥**

उमेर, बुद्धि, धन, वचन, भेष, विद्या, कुल र आफ्नु कर्म अनुसार सोझो र उन्मादरहीत तरिकाले आफ्नो जीविका चलाउनू ।

**त्रैवार्षिकाधिकान्नो यः स हि सोमं पिबेद्द्विजः ।**
**प्राक्सौमिकीः क्रियाः कुर्याद्यस्यान्नं वार्षिकं भवेत् ॥१२४॥**

तीन वर्ष पुग्ने अन्न हुने द्विजलाई सोमयज्ञ गर्ने अधिकार छ । एक वर्ष पुग्ने अन्न हुनेलाई अधिका (अन्य) पूर्णमास आदि यज्ञ गर्ने अधिकार छ ।

**प्रतिसम्वत्सरं सोमः पशुः प्रत्ययनन्तथा ।**
**कर्तव्याग्रयणेष्टिश्च चातुर्मास्यानि चैव हि ॥१२५॥**

गृहस्थले प्रत्येक वर्ष सोमयज्ञ, चतुर्मास यज्ञ, अयन बदलिँदा निरुढ पशुयज्ञ र नयाँअन्नको आग्रायण यज्ञ गर्नू ।

**एषामसम्भवे कुर्यादिष्टिं वैश्ववानरीं द्विजः ।**
**हीनकल्पं न कुर्वीत सति द्रव्ये फलप्रदम् ॥१२६॥**

सोम आदि यज्ञ गर्न नसक्ने भए वैश्वानर यज्ञ गर्नू तर सम्पत्ति हुँदाहुँदै झारा टार्ने किसिमले सानातिना यज्ञ नगर्नू ।

**चाण्डालो जायते यज्ञकरणाच्छूद्रभिक्षिताम् ।**
**यज्ञार्थं लब्धमददद्भासःकाकोऽपि वा भवेत् ॥१२७॥**

शूद्रसँग धन लिएर यज्ञ गर्ने व्यक्ति अर्को जन्ममा शूद्र भएर जन्मन्छ । यज्ञका लागि भनी छुट्ट्याइएको धन पूरा नदिने (खर्च नगर्ने) व्यक्ति अर्को जन्ममा कौवा जस्ता निम्न योनीमा जन्म लिन पुग्दछ ।

**कुशुलकुम्भीधान्यो वा त्र्याहिकोऽश्वस्तनोऽपि वा ।**
**जीवेद्वापि शिलोञ्छेन श्रेयानेषां परः परः ॥१२८॥**

बाह्र दिन, छ दिन, तीन दिन र एक दिनलाई पुग्ने अन्न सञ्चयगर्ने तथा अन्न शिला खोजेर पेट पाल्ने ब्राह्मण क्रमशः श्रेष्ठ हुन्छ ।

**इति गृहस्थधर्मप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत गृहस्थधर्मप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

# अथ स्नातकधर्मप्रकरणम् (६)

**न स्वाध्यायविरोध्यर्थमीहेत न यतस्ततः ।**
**न विरुद्धप्रसङ्गेन सन्तोषी च भवेत्सदा ॥१२९॥**

स्नातकले-स्वाध्याय विरोधीबाट, यताउताका अज्ञात कुरा वा अधार्मिक कामगरी धन कमाउनतिर नलाग्नू, सदा धैर्यशाली र सन्तोषी हुनू ।

**राजान्तेवासियाज्येभ्यः सीदन्निच्छेद्धनं क्षुधा ।**
**दम्भिहैतुकपाखण्डिवकवृत्तींश्च वर्जयेत् ॥१३०॥**

भोकले ब्याकुल हुँदा राजा, शिष्य वा योग्य जजमानसँग गएर माग्नू तर घमण्डी, शङ्काष्पद, पाखण्डी, अहङ्कारी र बकुल्लो-भगतसँग केही पनि नलिनू ।

**शुक्लाम्बरधरो नीचकेशश्मश्रुनखः शुचिः ।**
**न भार्यादर्शनेऽश्नीयान्नैकवासा न संस्थितः ॥१३१॥**



सधैं स्वच्छ लुगा लगाउनू, कपाल-दाह्री-जुँगा-नङ छोटो र सफा राख्नू । पत्नीसामु, एउटा लुगा लगाएर र उठेर नखानू ।

**न संशयं प्रपद्येत नाकस्मादप्रियं वदेत् ।**
**नाहितं नानृतं चैव न स्तेनः स्यान्न वार्धुषी ॥१३२॥**

कसैको प्राणजाने कुरामा हात नहाल्नू । कसैसँग अप्रिय, अहितकारी र झूट कुरो नबोल्नू । नचोर्नू । ब्याज खाएर जीवन धान्ने नहुनू ।

**दाक्षायणी ब्रह्मसूत्री वेणुमान्सकमण्डलुः ।**
**कुर्यात्प्रदक्षिणं देवमृद्गोविप्रवनस्पतीन् ॥१३३॥**

कानमा सुनका मुन्द्रा, गलामा जनै तथा हातमा कमण्डलु र दण्ड नछाड्नू । देवमूर्ति, तीर्थको माटो, गाई, ब्राह्मण र पीपल आदि वनस्पतिको प्रदक्षिणा गर्नू ।

**न तु मेहेन्नदीछायावर्त्मगोष्ठाम्बुभस्मसु ।**

**न प्रत्यग्न्यर्कगोसोमसन्ध्याम्बुस्त्रीद्विजन्मनः ॥१३४॥**

नदी, छाया (अन्धकार), बाटो, गोठ, जल र खरानीमा एवं अग्नि, सूर्य, गाई, चन्द्रमा, सन्ध्याको आकाश, जल, स्त्री र द्विजका सामु मलमूत्र नत्याग्नू ।

**नेक्षेतार्कं न नग्नां स्त्रीं न च संसृष्टमैथुनाम् ।**
**न च मूत्रं पुरीषं वा नाशुची राहुतारकाः ॥१३५॥**

(उदयास्तकालीन, ग्रहणग्रस्त, मध्याह्नको र जल-छायाको) सूर्य, नग्न स्त्री, सम्भोगरत स्त्री, मूत्र, मल तथा अपवित्र अवस्थामा हुँदा राहु तथा तारालाई नहेर्नू ।

**अयं मे वज्र इत्येवं सर्वं मन्त्रमुदीरयेत् ।**
**वर्षत्यप्रावृतो गच्छेत्स्वपेत्प्रत्यक्शिरा न च ॥१३६॥**

वर्षाकालमा 'अयं मे वज्रः पाप्मान...' मन्त्र जप्नू । पानी पर्दा केही नओढी नहिँड्नू । पश्चिम सिरान पारेर पनि नसुत्नू ।



**ष्ठीवनासृक्शकृन्मूत्ररेतांस्यप्सु न निक्षिपेत् ।**
**पादौ प्रतापयेन्नाग्नौ न चैनमभिलङ्घयेत् ॥१३७॥**

थुक, रगत, मल, मूत्र तथा वीर्य पानीमा नफ्याँक्नू । आगोमा गोडा नसेक्नू र आगोलाई नाघ्ने काम पनि नगर्नू ।

**जलं पिबेन्नाञ्जलिना न शयानं प्रबोधयेत् ।**
**नाक्षैः क्रीडेन्न धर्मघ्नैर्व्याधितैर्वा न संविशेत् ॥१३८॥**

अँजुलीले पानी नपिउनू । सुतेका मान्यजनलाई नबोलाउनू । जुवा नखेल्नू । धर्ममारा तथा रोगीका साथ नसुत्नू ।

**विरुद्धं वर्जयेत्कर्म प्रेतधूमं नदीतरम् ।**
**केशभस्मतुषाङ्गारकपालेषु च संस्थितिम् ॥१३९॥**

आफ्नो कुल, समाज र गाउँको प्रचलन विरोधी काम नगर्नू । लाशको धुवाँ नपिउनू । हातले पौडेर नदी नतर्नू । कपाल, खरानी, भूस, गोल र खोपडीमा नबस्नू ।

**नाचक्षीत धयन्तीं गां नाद्वारेण विशेत्क्वचित् ।**
**न राज्ञः प्रतिगृह्णीयाल्लुब्धस्योच्छास्त्रवर्तिनः ॥१४०॥**

बाच्छाबाच्छीलाई दूध ख्वाइरहेकी वा पानी पिइरहेकी गाइलाई नधपाउनू । कतै प्रवेश गर्दा मूलढोकाबाट मात्र प्रवेश गर्नू । अधार्मिक र लोभी राजाबाट दान नलिनू ।

**प्रतिग्रहे सूनिचक्रिध्वजिवेश्यानराधिपाः ।**
**दुष्टा दशगुणं पूर्वात्पूर्वादेते यथाक्रमम् ॥१४१॥**

कसाई, तेली, मदिराविक्रयी, वेश्या र राजाले दान लिएमा राजादेखिकालाई दश-दश गुणा पाप बढी लाग्दछ ।

**अध्यायानामुपाकर्म श्रावण्यां श्रवणेन वा ।**
**हस्तेनौषधिभावे वा पञ्चम्यां श्रावणस्य तु ॥१४२॥**

वनस्पति उम्रिँदा वा श्रावण पूर्णिमा वा श्रवण नक्षत्रयुक्त वा हस्तायुक्त पञ्चमीदेखि वेद पढ्न शुरु गर्नू ।



**पौषमासस्य रोहिण्यामष्टकायामथापि वा ।**
**जलान्ते छन्दसां कुर्यादुत्सर्गं विधिवद्बहिः ॥१४३॥**

अध्ययन सकी पुसको रोहिणी नक्षत्र परेको दिन वा अष्टमीमा गाउँ बाहिर जलाशय नजिकै आफ्नो गृह्यसूत्रको विधिले वेद-विसर्जन गर्नू ।

**त्र्यहं प्रेतेष्वनध्यायः शिष्यर्त्विग्गुरुबन्धुषु ।**
**उपाकर्मणि चोत्सर्गे स्वशाखाश्रोत्रिये तथा ॥१४४॥**

शिष्य, ऋत्विज्, गुरु, नातेदार र सहपाठीको मृत्युमा तीन दिनसम्म वेद नपढ्नू वा पढ्न शुरु नगर्नू ।

**सन्ध्यागर्जितनिर्घातभूकम्पोल्कानिपातने ।**
**समाप्य वेदं द्युनिशमारण्यकमधीत्य च ॥१४५॥**

सन्ध्यामा बादल गर्जंदा, कुनै उत्पातको सङ्केतमा, भूकम्पमा र उल्कापातमा पढिरहेको आरण्यक सकी एक दिनरातसम्म नपढ्नू ।

**पञ्चदश्यां चतुर्दश्यामष्टम्यां राहुसूतके ।**
**ऋतुसन्धिषु भुक्त्वा वा श्राद्धिकं प्रतिगृह्य च ॥१४६॥**

औंसी, पूर्णिमा, चतुर्दशी र अष्टमीमा; सूर्य र चन्द्र ग्रहणमा; ऋतुको पहिलो परेवा तिथिमा, श्राद्ध खाएको दिन र दान लिएको दिन वेद नपढ्नू ।

**पशुमण्डूकनकुलश्वाहिमार्जारमूषकैः ।**
**कृतेऽन्तरे त्वहोरात्रं शक्रपाते तथोच्छ्रये ॥१४७॥**

पढिरहँदा भ्यागुतो, न्याहुरीमुसो, कुकुर, सर्प, बिरालो, मुसो आदि आउनु तथा इन्द्रेनी देखिनुलाई अमङ्गल मानी ती दिनमा र उत्सवमा पनि एक दिनरात वेद नपढ्नू ।

**श्वक्रोष्टगर्दभोलूकसामबाणार्तनिःस्वने ।**
**अमेध्यशवशूद्रान्त्यश्मशानपतितान्तिके ॥१४८॥**



कुकुर, स्याल, गधा, उल्लू वा मानिस रोएको सुनेमा, बाँस हल्ली रोएभैँ आवाज आएमा, सामवेद सुनेमा, अपवित्र शव-शुद्र-अन्त्यज-मसान र पतित देखिएमा वा नजिक भएमा केही समय वेदाध्ययन नगर्नू ।

**देशेऽशुचावात्मनि च स विद्युत्स्तनितसम्प्लवे ।**
**भुक्त्वार्द्रपाणिरम्भोन्तरर्धरात्रेऽतिमारुते ॥१४९॥**

ठाउँ वा आफैं अपवित्र हुँदा, पटकपटक बिजुली चम्किँदा, बादल गर्जंदा, खाएर चिसै हातले, पानी भित्र हुँदा, आधारातमा, हुरी चल्दा,...।

**पांसुप्रवर्षे दिग्दाहे सन्ध्यानीहारभीतिषु ।**
**धावतः पूतिगन्धे च शिष्टे च गृहमागते ॥१५०॥**

आँधीमा, आकाश डढ्दा, सन्ध्यामा, मधुरो उज्यालोमा, राजा र चोरको डरमा, भागदौडमा, दुर्गन्धमा र विशिष्ट व्यक्तिको आगमनमा,...।

**खरोष्ट्रयानहस्त्यश्वनौवृक्षेरिणरोहणे ।**
**सप्तत्रिंशदनध्यायानेताँस्तात्कालिकान्विदुः ॥१५१॥**

गधा, ऊँट, रथ, हाती, घोडा, नौका र रुख चढ्दा तथा मरुभूमि र बन्जरभूमिमा हिँड्दा जस्ता सत्ताईस अवस्थामा वेदको अध्ययन रोक्नू ।

**देवर्त्विक्स्नातकाचार्यराज्ञां छायां परस्त्रियाः ।**
**नाक्रामेद्रक्तविण्मूत्रष्ठीवनोद्वर्तनादि च ॥१५२॥**

देवता, ऋत्विज्, स्नातक, आचार्य, राजा र परस्त्रीहरुको छाया तथा रगत, दिसा, पिसाब, खकार, शरीरबाट खसेको बुकुवा वा जललाई ननाघ्नू ।

**विप्राहिक्षत्रियात्मानो नावज्ञेयाः कदाचन ।**
**आ मृत्योःश्रियमाकाङ्क्षेन्न कञ्चिन्मर्मणि स्पृशेत् ॥१५३॥**

श्रोत्रिय ब्राह्मण, सर्प, राजा र आफूलाई अपमान नगर्नू । आजीवन भलो चिताउनू कसैको चित्त नदुखाउनू ।



**दुरादुच्छिष्टविण्मूत्र पादाम्भांसि समुत्सृजेत् ।**
**श्रुतिस्मृत्युदितं सम्यङ्नित्यमाचारमाचरेत् ॥१५४॥**

मलमूत्र , जुठो र गोडा धोएको पानी घरबाट पर लगेर फाल्नू । दैनिक जीवनमा श्रुतिस्मृतिका नियम राम्ररी पालना गर्नू ।

**गोब्राह्मणनलान्नानि नोच्छिष्टो न पदा स्पृशेत् ।**
**न निन्दाताडने कुर्यात्पुत्रं शिष्यञ्च ताडयेत् ॥१५५॥**

गाई, ब्राह्मण, अग्नि र अन्न (पाकेको) लाई जुठो मुखले वा गोडाले नछुनू । पुत्र र शिष्यबाहेक अरु कसैलाई पनि निन्दा गर्ने र पिट्ने काम नगर्नू ।

**कर्मणा मनसा वाचा यत्नाद्धर्मं समाचरेत् ।**
**अस्वर्ग्यं लोकविद्विष्टं धर्ममप्याचरेन्न तु ॥१५६॥**

मन, वचन र कर्मले प्रयत्नपूर्वक धर्म गर्नू । कुनै कुरा शास्त्रसम्मत छ तर त्यसमा लोक सहमत

छैन र त्यो काम गरेर स्वर्ग पनि पाइन्न भने, त्यसलाई नगर्नू ।

**मातृपित्रतिथिभ्रातृजामिसम्बन्धिमातुलैः ।**
**वृद्धबालातुराचार्यवैद्यसंश्रितबान्धवैः ॥१५७॥**
**ऋत्विक्पुरोहितापत्यभार्यादाससनादिभिः ।**
**विवादं वर्जयित्वा तु सर्वांल्लोकाञ्जयेद् गृही ॥१५८॥**

माता, पिता, अतिथि, सहोदर बाहेकका दाजुभाई, सौभाग्यवती स्त्री, वैवाहिक नातेदार, मामा, सत्तरी वर्ष पुगिसकेका वृद्ध, सोह्र वर्ष मुनिका केटा, रोगी, आचार्य, वैद्य, आश्रितजन, बन्धुबान्धव, ऋत्विज्, पुरोहित, पुत्र, पत्नी, सेवक र एकै पेटबाट जन्मेकाहरुसँग विवाद नगर्नेले घरमै सबैलोक पाउँदछ ।

**पञ्चपिण्डाननुद्धृत्य न स्नायात्परवारिषु ।**
**स्नायान्नदीदेवखातह्रदप्रस्रवणेषु च ॥१५९॥**

अर्काले बनाएको पोखरी आदिमा नुहाउँदा पाँच डल्ला माटो बाहिर निकाली नुहाउनू । सार्वजनिक नदी, देवकुण्ड, सरोवर, झरना आदिमा नुहाउँदा भने यसो गर्नु पर्दैन ।



**परशय्यासनोद्यानगृहयानानि वर्जयेत् ।**
**अदत्तान्यग्निहीनस्य नान्नमद्यादनापदि ॥१६०॥**

अर्काको ओछ्यान, आसन, उद्यान, घर र बाहन अनुमतिबिना प्रयोग नगर्नू । सकालमा यज्ञादि नगर्नेको र निम्न-वीर्यबाट जन्मेकाको अन्न नखानू ।

**कदर्यबद्धचौराणां क्लीबरङ्गावतारिणाम् ।**
**वैणाभिशस्तवार्धुष्यगणिकागणदीक्षिणाम् ॥१६१॥**

लोभी, बन्धनमा परेका, चोर, नपुंसक, नट-चारण-मल्ल, मुरली आदि बनाउने, पतित कर्म गर्ने, ब्याज कमाउने, वेश्या, सामूहिक अनुष्ठान,... ।

**चिकित्सकातुरक्रुद्धपुँश्चलीमत्तविद्विषाम् ।**
**क्रूरोग्रपतितव्रात्यदाम्भिकोच्छिष्टभोजिनाम् ॥१६२॥**

चिकित्सक, महारोगी, रिसाहा, कुलटा, घमण्डी, शत्रु, क्रूर, उग्र (परपीडक), पतित, सावित्री-पतित, जुठो खाने,...।

**अवीरास्त्रीस्वर्णकारस्त्रीजितग्रामयाजिनाम् ।**
**शस्त्रविक्रयिकर्मारतन्तुवायाश्ववृत्तिनाम् ॥१६३॥**

स्वतन्त्र-स्त्री, बाणा, जोइटिङ्गे, सस्तो पुरोहित, शस्त्रव्यापारी, लोहकार, सूचिकार (बुन्ने समेत), कुकुर-जीवि,...।

**नृशंसराजरजककृतघ्नवधजीविनाम् ।**
**चैलधावसुराजीवसहोपपतिवेश्मनम् ॥१६४॥**

निर्दयी, राजा, कपडा रङ्गाउने, बैगुनी, कसाईं, धोबी, मदिरा व्यवशायी, जार पाल्ने,...।

**पिशुनानृतिनाँश्चैव तथा चाक्रिकवन्दिनाम् ।**
**एषामन्नं न भोक्तव्यं सोमविक्रयिणस्तथा ॥१६५॥**



छिद्रान्वेषी, मिथ्यावादी, शाल्मी वा गाडी चलाउने र भाट-यिनको तथा सोमलता विक्रयीको अन्न नखानू ।

**शूद्रेषु दासगोपालकुलमित्रार्द्धसीरिणः ।**
**भोज्यान्ना नापितश्चैव यश्चात्मानं निवेदयेत् ॥१६६॥**

शूद्रमध्ये घरको दास, गोठालो, पुस्तैनी मित्र, अधियामा जग्गा कमाउने, नाइ, कुम्भकार र निस्वार्थ भावले अनुरोध गर्नेको अन्न ग्रहण गर्न हुन्छ ।

इति स्नातकधर्मप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत स्नातकधर्मप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ भक्ष्याभक्ष्यप्रकरणम् (७)

**अनर्चितं वृथामांसं केशकीटसमन्वितम् ।**
**शुक्तं पर्युषितोच्छिष्टं श्वस्पृष्टं पतितेक्षितम् ॥१६७॥**

अनादर गरी दिइएको, देवतालाई नचढाइएको, रौँ-कीरा परेको, अमिल्चिएको, बासी, जुठो, कुकुरले छोएको, पतितले देखेको,...।

**उदक्यास्पृष्टसङ्घुष्टं पर्य्यायान्नञ्च वर्जयेत् ।**
**गोघ्रातं शकुनोच्छिष्टं पदा पृष्टञ्च कामतः ॥१६८॥**

परसरेकीले छोएको, यस्तो अन्न को खाला र ! भनी दिइएको र अर्कैलाई पकाएर पस्किएको अन्न पनि नखानू । गाईले सुँघेको, चराको जुठो र जानीजानी गोडाले छोएको अन्न पनि नखानू ।

**अन्नं पर्युषितं भोज्यं स्नेहाक्तं चिरसँस्थितम् ।**
**अस्नेहा अपि गोधूमयवगोरसविक्रियाः ॥१६९॥**



घिउतेल आदि चिल्लोमा पकाइएको बासी खाने कुरा पनि खान हुन्छ । चिल्लोमा नपकाएको भएपनि गहुँ, जौ र गोरसले बनेका पदार्थ बासी खान हुन्छ ।

**सन्धिन्यनिर्दशावत्सागोपयः परिवर्जयेत् ।**
**औष्ट्रमैकशफं स्त्रैणमारण्यक्रमथाविकम् ॥१७०॥**

बहर खोजेकी-गर्भिणी-बेसमयमा दुहिने-नचोखिएकी र हतुवा गाई, ऊँट, एकखुरे जनावर, दुई कल्चौँडे जनावर एवं भैँसी (अर्ना) बाहेकका जङ्गली जनावरको दूध नखानू ।

**देवतार्थं हविः शिग्रुं लोहितान्व्रश्चनाँस्तथा ।**
**अनुपाकृतमांसानि विड्जानि कवकानि च ॥१७१॥**

बलि दिन तयार पारिएका वस्तु, <u>सजिवन</u>, रातो चोप वा खोटो, नचढाइएको मासु, रछ्यानमा उम्रिने वस्तु र च्याउ पनि नखानू ।

**क्रव्यादपक्षिदात्यूहशुकप्रतुदटिट्टिभान् ।**
**सारसैकशफान्हंसान्सर्वांश्च ग्रामवासिनः ॥१७२॥**

मांसाहारी जीव, गिद्ध आदि जस्ता पक्षि, काकाकुल, सुँगा, चुचोले लुछेर मासु खाने
बाज आदि, हुटिट्याउँ, सारस, एकखुरे जन्तु, हाँस तथा अन्य गाऊँघरमा
बस्ने परेवा आदि चराको मासु नखानू ।

**कोयष्टिप्लचक्राह्वबलाकाबकविष्किरान् ।**
**वृथाकृसरसंयावपायसाऽपूपशष्कुलीः ॥१७३॥**

कुक्कु, लुइँचे, चखेवा, बकुल्ला, नङ्गाको प्रयोग गरी खाने च्याखुरा आदि चराको मासु नखानू ।
खानमात्र पकाइएका तीलमुँगीको भात, घिउ- दूध-सखरको हलुवा, खीर,
अपुङ्गो-पुवा-मालपुवा र पुरी तथा...।

**कलविङ्कं सकाकोलं कुररं रज्जुदालकम् ।**
**जालपादान्खञ्जरीटानज्ञातौँश्च मृगद्विजान् ॥१७४॥**

भँगेरा, डुमकाग, न्याउली, कुथुर्के, जालीदार खुट्टा हुने चराहरु, बाहुनीचरी र जात
थाहा नपाइएका पशुपंक्षीको मासु नखानू ।



**चाषाँश्च रक्तपादाँश्च सौनं वल्लूरमेव च ।**
**मत्स्याँश्च कामतो जग्ध्वा सोपवासस्त्र्यहं वसेत् ॥१७५॥**

नीलकण्ठ, हाँस, शिकारीले मारेर छोडेको पशुपंक्षीको र सुकेको
मासु तथा माछा खाए तीन दिन उपवास बस्नू ।

**पलाण्डुं विड्वराहञ्च छत्राकं ग्रामकुक्कुटम् ।**
**लशुनं गृञ्जनञ्चैव जग्ध्वा चान्द्रायणञ्चरेत् ॥१७६॥**

प्याज, सुँगुरको मासु, च्याउ, कुखुराको मासु, लसुन र गाजर-शलगम
आदि खाएमा चान्द्रायण व्रत बस्नू ।

**भक्ष्याः पञ्चनखाः सोधागोधाकच्छपशल्लकाः ।**
**शशश्च मत्स्येष्वपि हि सिंहतुण्डकरोहिताः ॥१७७॥**
**तथा पाठीनराजीवसशल्काश्च द्विजातिभिः ।**
**अतः शृणुध्वं मांसस्य विधिं भक्षणवर्जने ॥१७८॥**

सेंधुवार, गोहोरो, कछुवा, खरायो, दुम्सी तथा माछाहरुमा सिंहतुण्ड-रोहित-पाठीन-राजीव र बाक्ला कत्ला हुने माछा द्विजातिले खान हुन्छ । त्यसैले अब खान नहुने बाहेकका मासुखाने विधि बताउँदछु ।

**प्राणात्यये तथा श्राद्धे प्रोक्षिते द्विजकाम्यया ।**
**देवान्पितॄन्समभ्यर्च खादन्मांसं न दोषभाक् ॥१७९॥**

प्राण सङ्कटमा, पुरेतको आदेशले श्राद्धमा, प्रोक्षण नामक संस्कारमा, ब्राह्मण-भोजका लागि बनाइएकोमा र बलि-प्रसादको रुपमा विधिपूर्वक मासु खान दोष छैन ।

**वसेत्स नरके घोरे दिनानि पशुरोमभिः ।**
**सम्मितानि दुराचारो यो हन्त्यविधिना पशून् ॥१८०॥**

विधिविधान नगरी मासु बढाउनका लागि मासु खाने व्यक्ति पशुको शरीरमा भएका रौं जत्तिकै वषसम्र्म नरकमा पर्दछ ।

**सर्वान्कामानवाप्नोति हयमेधफलं तथा ।**

**गृहेऽपि निवसन्विप्रो मुनिर्मांसविवर्जनात् ॥१८१॥**

यज्ञको प्रसादमा बाहेक अरु बेला मासु खान्न भनी निर्णय गर्नेको सबै कामना पूर्ण हुन्छन् र उसले अश्वमेध यज्ञ गरेको फल पनि पाउँदछ । मासु नै नखाने गृहस्थी मुनी हुन्छ ।

इति भक्ष्याभक्ष्यप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत भक्ष्याभक्ष्यप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ द्रव्यशुद्धिप्रकरणम् (८)

**सौवर्णराजताब्जानामूर्ध्वपात्रग्रहाश्मनाम् ।**
**शाकरज्जुमूलफलवासोविदलचर्मणाम् ॥१८२॥**

सुनचाँदीका भाँडा, पिँधले भुईं नछुने भाँडा, यज्ञपात्र, सागपात, डोरी, कन्दमूल, फलफूल, बाँसका टोकरी, छाला, लुगा र ..।

**पात्राणां चमसानाञ्च वारिणा शुद्धिरिष्यते ।**
**चरुस्रुक्स्रुवसस्नेहपात्राण्युष्णेन वारिणा ॥१८३॥**

होम गर्ने चमचा पानीले शुद्ध हुन्छ । चरु राख्ने थाली, सुरो लगायतका चिल्ला यज्ञका भाँडाहरु तातो पानीले शुद्ध हुन्छ ।

**स्फ्यशूर्पाऽजिनधान्यानां मुसलोलूखलाऽनसाम् ।**
**प्रोक्षणं संहतानाञ्च बहूनां धान्यवाससाम् ॥१८४॥**



यज्ञवज्र, नाङ्लो, कृष्ण मृगचर्म, धान, ओखल, मुसल र गाडाहरु तातोपानीले एवं धेरै लुगा र धेरै अनाज पानी छर्केर शुद्ध हुन्छ ।

**तक्षणं दारुश्रृङ्गास्थ्नां गोबालैः फलसम्भवाम् ।**
**मार्जनं यज्ञपात्राणां पाणिना यज्ञकर्मणि ॥१८५॥**

यज्ञ-वस्तु माटो-खरानीपानीले धुनाले, हस्तिहाडका सामान खुर्केर र फलफूलका गट्टाका वस्तु गाईको रौंले घोटेर शुद्ध हुन्छ ।

**सोषरोदकगोमुत्रैः शुध्यत्याविककौशिकम् ।**
**सश्रीफलैरंशुपट्टं सारिष्टैः कुतपन्तथा ॥१८६॥**

रेशमी-पश्मिना बन्जर माटो-पानी-गहुँतले, रुखका बोक्राका कपडा बेलले र च्याङ्ग्राको ऊनका कपडा रिठ्ठाले धुनाले शुद्ध हुन्छ ।

**सगौरसर्षपैः क्षौमं पुनः पाकान्महीमयम् ।**
**कारुहस्तःशुचिः पण्यं भैक्षम्योषिन्मुखन्तथा ॥१८७॥**

आलसको वस्त्र पहैँलो सर्स्यूँ-पानी-गहुँतले, माटाका भाँडा पोल्नाले तथा कालिगढको हात, पसलका सामान, भिक्षाको वस्तु र रतिकालीन स्त्रीको मुख त्यसै शुद्ध हुन्छ ।

**भूशुद्धिर्मार्जनाद्दाहात्कालाद्गोक्रमणात्तथा ।**
**सेकादुल्लेखनाल्लेपाद्गृहं मार्जनलेपनात् ॥१८८॥**

बढार्नाले, बाल्नाले, केही समय बिताले, गाईले कुल्चनाले, दूध-जल-गोबर-गहुँत छर्कनाले, खन्नाले र लिप्नाले भूमि र घर शुद्ध हुन्छ ।

**गोघ्रातेऽन्ने तथा केशमक्षिकाकीटदूषिते ।**
**सलिलं भस्म मृद्वापि प्रक्षेप्तव्यं विशुद्धये ॥१८९॥**

गाईले सुँघेर वा रौँ-झिँगा-कीरा परेर दुषित भएको (काँचो) अन्नलाई खरानीपानी वा माटोपानीले धुनाले शुद्ध हुन्छ ।

**त्रपुसीसकताम्राणां क्षाराम्लोदकवारिभिः ।**
**भस्माद्भिः कांस्यलोहानां शुद्धिः प्लावो द्रवस्य तु ॥१९०॥**



पीतल-सिसा-तामाका भाँडा नुनिलो वा अमिलो पानीले, फलाम-काँसका भाँडा खरानीले माझेर र घिउ-तेल आदि तरल पदार्थ भुसी पारेर बगाउनाले शुद्ध हुन्छ ।

**अमेध्याक्तस्य मृत्तोयैः शुद्धिर्गन्धादिकर्षणात् ।**
**वाक्शस्तमम्बुनिर्णिक्तमज्ञातञ्च सदा शुचिः ॥१९१॥**

शरीरजन्य फोहोर लागेका वस्तुलाई माटोपानीले गन्ध ननिखे्रसम्म धुनाले शुद्ध हुन्छ । शुद्धताका सम्बन्धमा ब्राह्मणको वचनलाई प्रामाणिक मान्नू, मनले नमाने जल छर्कनू । शुद्धअशुद्धको जानकारी नभएको खण्डमा त्यसलाई शुद्ध नै मान्नू ।

**शुचि गोतृप्तिकृत्तोयं प्रकृतिस्थं महीगतम् ।**
**तथा मांसं श्वचण्डालक्रव्यादादिनिपातितम् ॥१९२॥**

पृथ्वीमा गाई एक पटक अघाउन पुग्ने प्राकृतिकरुपको जल तथा (सङ्कटमा) कुकुर, चाण्डाल र मांसाहारी चराले खसालेको मासु पनि शुद्ध हुन्छ ।

**रश्मिरग्नी रजश्छाया गौरश्वो वसुधानिलः ।**
**विप्रुषो मक्षिकाःस्पर्शे वत्सः प्रस्रवने शुचिः ॥१९३॥**

सूर्यचन्द्रको किरण, अग्नि, धुलो, छाया, गाई, घोडा, पृथ्वी, वायु, वाफको पानी, झिँगा र दूध दुहुने बेलाको बाछो (को मुख) शुद्ध हुन्छ ।

**अजाश्वयोर्मुखं मेध्यं न गोर्न नरजा मलाः ।**
**पन्थानश्च विशुद्ध्यन्ति सोमसूर्यांशुमारुतैः ॥१९४॥**

बोका र घोडाको मुख शुद्ध हुन्छ तर गाईको हुँदैन । मानिसका मल (बाह्र थरीका) सबै अशुद्ध हुन्छन् । कुकुर-चण्डालले घेरिएको बाटो सूर्य-चन्द्रको किरण र वायुले शुद्ध हुन्छ ।

**मुखजा विप्रुषो मेध्यास्तथाऽऽचमनबिन्दवः ।**
**श्मश्रु चास्यगतं दन्तसक्तं त्यक्त्वा ततः शुचिः ॥१९५॥**

मुखबाट वस्त्रमा परेको थूकका छिटा र आचमन गर्दाको जलका छिटा अशुद्ध हुँदैन । दाह्रपछी-जुँगा र दाँतमा अड्केका अन्न निकाले पछि शुद्ध हुन्छ ।



**स्नात्वा पीत्वा क्षुते सुप्ते भुक्त्वा रथ्योपसर्पणे ।**
**आचान्तः पुनराचामेद्वासो विपरिधाय च ॥१९६॥**

नुहाएर, पानी पिएर, दाह्री काटेर, सुतेपछि उठेर, खाना खाएर, रथयात्रा पछि र लुगा फेरेपछि शुद्ध हुन दुई पटक आचमन गर्नू ।

**रथ्याकदर्मतोयानि स्पृष्टान्यन्त्यश्ववायसैः ।**
**मारुतेनैव शुद्ध्यन्ति पक्वेष्टकेचितानि च ॥१९७॥**

बाटोमा हिलो लागे, पानीका छिटा परे, चाण्डाल-कुकुर-कागले छोए र पाको ईंटले बनेको कुरा भए वायुको स्पर्शले नै शुद्ध हुन्छ ।

इति द्रव्यशुद्धिप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत द्रव्यशुद्धिप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ दानप्रकरणम् (९)

**तपस्तप्त्वासृजद्ब्रह्म ब्राह्मणान्वेदगुप्तये ।**
**तृप्त्यर्थं पितृदेवानां धर्मसंरक्षणाय च ॥१९८॥**

ब्रह्माले धर्म र वेदको रक्षाका लागि तथा देवता र पितृको तृप्तिका लागि आफ्नो तपस्याको बलले ब्राह्मणहरूको सृष्टि गरे ।

**सर्वस्य प्रभवो विप्राः श्रुताध्ययनशीलिनः ।**
**तेभ्यः क्रियापराः श्रेष्ठास्तेभ्योऽप्यध्यात्मवित्तमाः ॥१९९॥**

सबैमा (वर्णमा) ब्राह्मण श्रेष्ठ हुन्छन् । ब्राह्मण मध्येमा पनि वेद पढ्ने ब्राह्मण श्रेष्ठ हुन्छन् । वेदपढ्ने ब्राह्मणहरूमध्ये पनि वेद अनुसारका कर्म गर्ने ब्राह्मण श्रेष्ठ हुन्छन् । अनि ती ब्राह्मण मध्येमा पनि आत्मतत्वका ज्ञानी ब्राह्मण श्रेष्ठ हुन्छन् ।

**न विद्यया केवलया तपसा वापि पात्रता ।**
**यत्र वृत्तमिमे चोभे तद्धि पात्रं प्रकीर्तितम् ॥२००॥**

पढेर वा तपस्या गरेर मात्र सुपात्र हुँदैन । जो ब्राह्मण वेदले बताएका कर्म गर्दछ र उसमा यी दुई गुण (वेदज्ञान र तपस्या) पनि छन् त्यही नै उत्तम पात्र (वास्तविक सत्पात्र) भनी चिनिन्छ ।

**गोभूतिलहिरण्यादि पात्रे दातव्यमर्चितम् ।**
**नापात्रे विदुषा किञ्चिदात्मनः श्रेय इच्छता ॥२०१॥**

सुपात्रलाई अर्चना गरी गाई, भूमि, तिल तथा सुन दान दिनू । श्रेय चाहनेले कुपात्रलाई पनि केही केही दिने गर्नू ।

**विद्यातपोभ्यां हीनेन न तु ग्राह्य प्रतिग्रहः ।**
**गृह्णन्प्रदातारमधो नयत्यात्मानमेव च ॥२०२॥**

विद्या र तपले रहितलाई दान नदिनू, यस्तालाई दान दिँदा दिने समेत सँगै नरक जान्छ ।

**दातव्यं प्रत्यहं पात्रे निमित्तेषु विशेषतः ।**

**याचितेनापि दातव्यं श्रद्धापूतं स्वशक्तितः ॥२०३॥**

योग्य पात्रलाई दिनहुँ यथाशक्ति र विशेष चाडपर्वमा विशेष दान दिनू । योग्य व्यक्तिले मागेमा उपेक्षा नगरी श्रद्धाले जो सकेको दान दिनू ।

**हेमश्रृङ्गी शफै रौप्यैः सुशीला वस्त्रसंयुता ।**
**सकांस्यपात्रा दातव्या क्षीरिणी गौःसदक्षिणा ॥२०४॥**

सिङ र खुरमा सुन र चाँदी मोरेर शरीरमा वस्त्र ओढाई सज्जन लैनू गाईलाई काँसको पात्रमा दूध हाली दक्षिणा सहित दान दिनू ।

**दातास्याः स्वर्गमाप्नोति वत्सरात्रोमसम्मितान् ।**
**कपिला चेत्तारयति भूयश्चासप्तमं कुलम् ॥२०५॥**

यो दानले गाईको रौं जति वर्ष स्वर्गमा बस्न पाउँदछ भने कपिला (कैली) गाई दान गर्नाले सात पुस्ताको उद्धार हुन्छ ।



**सवत्सारोमतुल्यानि युगान्युभयतोमुखीम् ।**
**दातास्याःस्वर्गमाप्नोति पूर्वेण विधिना ददत् ॥२०६॥**

यही विधिले बाच्छो सहितको गाई दान गर्नाले दुवैको शरीरमा भएका रौं जति वर्ष स्वर्गसुख पाउँदछ ।

**यावद्वत्सस्य पादौ द्वौ मुखं योन्याञ्च दृश्यते ।**
**तावद्गौः पृथिवी ज्ञेया यावद्गर्भं न मुञ्चति ॥२०७॥**

बियाउँदा बाच्छाको दुई खुट्टा बाहिर र दुई खुट्टा र मुख भित्र रहेको अवस्थाको “उभयतोमुखी गाई” पृथ्वी समान हुन्छिन् ।

**यथाकथञ्चिद्दत्वा गां धेनुं वाऽधेनुमेव वा ।**
**अरोगामपरिक्लिष्टां दाता स्वर्गे महीयते ॥२०८॥**

कुनै पनि स्थितिको अर्थात बियाएकी-नबियाएकी, लैनु-थारी, बलिई-दुब्ली तर अवन्ध्या र निरोगी गाई दान गर्ने स्वर्गमा पूजिन्छ ।

**श्रान्तसम्वाहनं रोगिपरिचर्या सुरार्चनम् ।**
**पादशौचं द्विजोच्छिष्टमार्जनं गोप्रदानवत् ॥२०९॥**

थकित व्यक्तिलाई बस्न आसन आदि दिई मीठो बोल्नु, रोगीको सेवा गर्नु, देवपूजा गर्नु, ब्राह्मणको गोडा धुनु तथा तिनको जुठो सफा गर्नु गोदान गर्नु समान हुन्छ ।

**भूदीपाँश्चान्नवस्त्राम्भस्तिलसर्पिःप्रतिश्रयान् ।**
**नैवेशिकं स्वर्णधुर्यं दत्त्वा स्वर्गे महीयते ॥२१०॥**

भूमि-दीप-अन्न-वस्त्र-जल-तिल र घिउको दान, परदेशीलाई आश्रय दिने कार्य तथा सुन र बलिया साँढे दान गर्नेले स्वर्गमा सम्मान पाउँदछ ।

**गृहधान्याभयोपानच्छत्रमाल्यानुलेपनम् ।**
**यानं वृक्षं प्रियं शय्यां दत्त्वाऽत्यन्तं सुखी भवेत् ॥२११॥**

घर, धान, अभय, जुत्ता, छाता, माला, चन्दनादि, बाहन, रुख, प्रियवस्तु र शैया दान गर्ने अत्यन्त सुखी हुन्छ ।



**सर्वधर्ममयं ब्रह्म प्रदानेभ्योऽधिकं यतः ।**
**तद्ददत्समवाप्नोति ब्रह्मलोकमविच्युतम् ॥२१२॥**

सबै धर्ममा ज्ञानको प्रकाशक वेद हो, वेदको दान सर्वोत्कृष्ट दान हो, यो दानले ब्रह्मलोकमा अचल भएर बस्न पाइन्छ ।

**प्रतिग्रहसमर्थोऽपि नादत्ते यः प्रतिग्रहम् ।**
**ये लोका दानशीलानां स तानाप्नोति पुष्कलान् ॥२१३॥**

कसैले दान लिने सुपात्र भएर पनि दान नलिएमा उसले दानशीलले पाउने लोक प्राप्त गर्दछ ।

**कुशाः शाकं पयो मत्स्याः गन्धाः पुष्पं दधि क्षितिः ।**
**मांसं शय्यासनं धानाः प्रत्याख्येयं न वारि च ॥२१४॥**

नमागी पाए कुश, साग, दूध, माछा, अत्तर, फूल, दही, भूमि, मासु, शैया, आसन,

धान (भुटेको चना, खट्टे आदि) र जल दान लिन हुन्छ ।

**अयाचिताहृतं ग्राह्यमपि दुष्कृतकर्मणः ।**
**अन्यत्र कुलटाषण्ढपतितेभ्यस्तथा द्विषः ॥२१५॥**

दुराचारी भएपनि स्वेच्छाले दिन चाहेमा यी कुरा लिन हुन्छ तर कुलटा, नपुंसक र पतित वा भ्रष्टसँग भने लिन नमान्नू ।

**देवातिथ्यर्चनकृते गुरुभृत्यार्थमेव वा ।**
**सर्वतः प्रतिगृह्णीयादात्मवृत्त्यर्थमेव च ॥२१६॥**

देवपूजा, अतिथि सत्कार, आश्रितजनको भरणपोषण र आफ्नो आजीविकाका लागि जहाँबाट पनि दान लिन सकिन्छ ।

इति दानप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत दानप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ श्राद्धप्रकरणम् (१०)

**अमावस्याऽष्टका वृद्धिः कृष्णपक्षोऽयनद्वयम् ।**
**द्रव्यं ब्राह्मणसम्पत्तिर्विषुवत्सूर्यसङ्क्रमः ॥२१७॥**

औँसी, अष्टका[१], वृद्धि [२], कृष्णपक्ष, अयन [३], विषुव संक्रान्ति [४], संक्रान्ति, .. ।

व्याख्या : १. हेमन्त र शिशिर ऋतुका कृष्णपक्षका अष्टमी तिथिलाई अष्टका भनिन्छ । २.पुत्रजन्म आदि । ३.उत्तरायण र दक्षिणायण शुरु हुने दिन । ४.मेष वा तुला राशिमा सूर्य सर्ने दिनको संक्रान्ति ।

**व्यतीपातो गजच्छाया ग्रहणं चन्द्रसूर्ययोः ।**
**श्राद्धं प्रति रुचिश्चैते श्राद्धकालाः प्रकीर्तिताः ॥२१८॥**

व्यतिपात [५], गजच्छाया [६] र चन्द्रसूर्य ग्रहणमा रुचि हुनेले श्राद्ध गर्नु र कृष्णसार आदिको मासु ब्राह्मणलाई खुवाउनु भनी श्राद्धकाल बताइएको छ ।

व्याख्या : ५.श्रवण, अश्विनी, धनिष्ठा वा आर्द्रा नक्षत्र र आइतवार परेको दिन । ६.चन्द्रमा मघा नक्षत्रमा र सूर्य हस्ता नक्षत्रमा परेको दिन ।



**अग्र्याः सर्वेषु वेदेषु श्रोत्रियो ब्रह्मविद्युवा ।**
**वेदार्थविज्ज्येष्ठसामा त्रिमधुस्त्रिसुपर्णिकः ॥२१९॥**

वेदमा अग्रणी, स्वाध्यायी, ब्रह्मज्ञानी, वेदार्थ र सामवेदका ज्ञाता, त्रिमधु र त्रिसुपर्ण मन्त्रहरु नियमले पाठगर्ने ब्राह्मणलाई श्राद्धमा खुवाउनु राम्रो हुन्छ ।

**स्वस्त्रीयऋत्विग्जामातृयाज्यश्वशुरमातुलाः ।**
**त्रिणाचिकेतदौहित्रशिष्यसम्बन्धिबान्धवाः ॥२२०॥**

भानिज, ऋत्विज्, छोरीज्वाईं, जजमान, ससुरा, मामा, त्रिणाचिकेत, छोरीको छोरो, शिष्य, बन्धुबान्धव र इष्टमित्रलाई श्राद्धमा खुवाउनु फलदायक हुन्छ ।

**कर्मनिष्ठातपोनिष्ठाः पञ्चाग्निर्ब्रह्मचारिणः ।**
**पितृमातृपराश्चैव ब्राह्मणाः श्राद्धसम्पदः ॥२२१॥**

कर्मनिष्ठ, तपस्वी, पञ्चाग्नि ताप्ने, ब्रह्मचारी, बाबुआमाका सेवक र ज्ञाननिष्ठ
ब्राह्मणलाई श्राद्धमा खुवाउन उपयुक्त हुन्छ ।

**रोगी हीनातिरिक्ताङ्गः काणः पौनर्भवस्तथा ।**
**अवकीर्णी कुण्डगोलौ कुनखी श्यावदन्तकः ॥२२२॥**
**भृतकाध्यापकः क्लीबः कन्यादूष्यभिशस्तकः ।**
**मित्रध्रुक् पिशुनः सोमविक्रयी परिविन्दकः ॥२२३॥**
**मातापितृगुरुत्यागी कुण्डाशी वृषलात्मजः ।**
**परपूर्वापतिः स्तेनः कर्मदुष्टाश्च निन्दिताः ॥२२४॥**

दीर्घरोगी, कम-बढी अङ्ग हुने, कानू, पौनर्भव, ब्रह्मचर्य व्रत तोड्ने, कुण्ड, गोलक, भद्दा नङको, कालो दाँति, पैसा लिएर पढाउने वा पैसा तिरेर पढ्ने, नपुंसक, कन्यामा अनर्गल दोष देखाउने, ब्रह्महत्यादि पापको दोषी, मित्रद्रोही, चुक्लीखोर, सोमलता वा रस बेच्ने, परिवेत्ता, अकारण मातापिता र गुरुलाई त्याग्ने, कुण्डगोलकको अन्न खाने, अधर्मीका सन्तान, पुनर्भूको लोग्ने, चोर र दुराचारीलाई श्राद्धमा खुवाउनु निन्दित कर्म हो ।

**निमन्त्रयेत पूर्वेद्युर्ब्राह्मणानात्मवाञ्छुचिः ।**
**तैश्चापि संयतैर्भाव्यं मनोवाक्कायकर्मभिः ॥२२५॥**

हविष्यका दिन चोखो मनले योग्य ब्राह्मणलाई निम्ता गर्नू र निमन्त्रितले पनि
मन, वचन र कर्मले शुद्ध रहनू ।

**अपराह्णे समभ्यर्च्य स्वागतेनागताँस्तु तान् ।**
**पवित्रपाणिराचान्तानासनेषूपवेशयेत् ॥२२६॥**

श्राद्धका दिन अपराह्ण आएका ब्राह्मणसँग मीठो वचन बोल्दै
तिनको हात धोई दिएर पवित्र आसनमा बसाउनू ।

**युग्मान्दैवे यथाशक्ति पित्र्येऽयुग्माँस्तथैव च ।**
**परिस्तृते शुचौ देशे दक्षिणाप्रवणे तथा ॥२२७॥**

देवकार्यमा जोर र पितृकार्यमा बिजोर यथाशक्ति ब्राह्मणलाई निम्ता गर्नू । अनि पवित्रस्थानमा तयार पारिएको दक्षिणतिर झुकेको आसनमा उनीहरूलाई बसाउनू ।

**द्वौ दैवे प्राक् त्रयः पित्र्य उदगेकैकमेव वा ।**
**मातामहानामप्येवं तन्त्रं वा वैश्वदेविकम् ॥२२८॥**

अथवा देवकार्यमा दुई जना ब्राह्मणहरूलाई पूर्वतिर फर्काएर र पितृश्राद्धमा तीन जना ब्राह्मणहरूलाई उत्तर फर्काएर राख्नू । अथवा दुवैमा एकजना ब्राह्मण बोलाउनू । मातामहको श्राद्धमा र विश्वेदेवमा पनि यसै गर्नू ।

**पाणिप्रक्षालनं दत्त्वा विष्टरार्थं कुशानपि ।**
**आवाहयेदनुज्ञातो विश्वेदेवास इत्यृचा ॥२२९॥**

वैश्वदेव श्राद्धमा आएका ब्राह्मणहरूको हात धोई बस्नका लागि दुई-दुई कुशासन दिई दक्षिणतिर फर्काएर राख्नू । बसेपछि आज्ञा लिई "आगच्छन्तु महाभागा" मन्त्रले देवताको आवाहन गर्नू ।

**यवैरन्ववकीर्याथ भाजने सपवित्रके ।**
**शन्नो देव्या पयः क्षिप्त्वा यवोऽसीति यवाँस्तथा ॥२३०॥**

ब्राह्मणका अगाडी भूमिमा जौ छरेर दुई वटा कुश राखिएको दुई वटा भाँडामा "शं नो देवीरभिष्टये" मन्त्रले जल र "यवोसि धान्यराजोऽसि" मन्त्रले जौ हाल्नू ।



**या दिव्या इति मन्त्रेण हस्तेष्वर्घ्यं विनिक्षिपेत् ।**
**दत्त्वोदकं गन्धमाल्यं धूपदानं सदीपकम् ॥२३१॥**

त्यसपछि "या दिव्या आपः पयसा" मन्त्रले ब्राह्मणका हातमा अर्घ्य दिनू र चन्दन, माला आदि चढाउनू ।

**तथाच्छादनदानञ्च करशौचार्थमम्बु च ।**
**अपसव्यं ततः कृत्वा पितृणामप्रदक्षिणाम् ॥२३२॥**
**द्विगुणाँस्तु कुशान्दत्त्वा ह्युशन्तस्त्वेत्यृचा पितृन् ।**
**आवाह्य तदनुज्ञातो जपेदायन्तुनस्ततः ॥२३३॥**

ब्राह्मणका हातमा जल खसाले पछि हात धुने जल दिनू र चन्दन, फूल, आदि चढाउनू । हात पुछ्न कपडा र पुनः हात शुद्धिका लागि जल दिनू । वैश्वदेव पूजा पछि अपसव्य भई मोटक लिएर पितृको आवाहन गर्न ब्राह्मणसँग अनुमति लिनू । अनि "आयान्तु नः..." मन्त्रले आवाहन गरी "उशन्तस्त्वा..." मन्त्रले बस्ने आसन दिनू ।

**अपहता इति तिलान्विकीर्य च समन्ततः ।**
**यवार्थास्तु तिलैः कार्याः कुर्यादर्घ्यादि पूर्ववत् ॥२३४॥**

"अपहतः असुराः रक्षांसि" मन्त्रले चारैतिर तिल छर्कनू । वैश्वदेवमा जौले गरेका काम अब तिलले गर्नू । पहिले जसरी नै ब्राह्मणका हातमा अर्घ्य दिनू ।

**दत्त्वार्घ्यं संस्रवाँस्तेषां पात्रे कृत्वा विधानतः ।**
**पितृभ्यःस्थानमसीति न्युब्जं पात्रं करोत्यधः ॥२३५॥**

अर्घ्य दिँदा हातबाट झरेको जल विधिपूर्वक पितृपात्रमा हालेर "पितृभ्यः स्थानमसि.." मन्त्रले त्यो पात्र उल्टाउनू । अनी अर्घ्यपात्र र पवित्रलाई भूमिमा राख्नू ।

**अग्नौ करिष्यन्नादाय पृच्छत्यन्नं घृतप्लुतम् ।**
**कुरुष्वेत्यभ्यनुज्ञातो हुत्वाग्नौ पितृयज्ञवत् ॥२३६॥**

"अग्नौकरण" चाहने जजमानले घिउले मुछिएको अन्न लिई ब्राह्मणसँग "अग्नौ करिष्ये" भनी अनुमति लिनू र "कुरुष्व" भनी अनुमति पाएपछि "सोमाय पितृमते स्वधा नमः", "अग्नये कव्यवाहनाय स्वधा नमः" आदि मन्त्रले त्यो अन्न होम गर्नू ।



**हुतशेषं प्रदद्यातु भाजनेषु समाहितः ।**
**यथालाभोपपन्नेषु रौप्येषु च विशेषतः ॥२३७॥**

होम शेष अन्नलाई सुनचाँदीको (माटाको हुँदैन) पितृपात्रमा (वैश्वानर पात्रमा होइन) सावधानीपूर्वक राख्नू ।

**दत्त्वान्नं पृथिवीपात्रमिति पात्राभिमन्त्रणम् ।**
**कृत्वेदंविष्णुरित्यन्ते द्विजाङ्गुष्ठं निवेशयेत् ॥२३८॥**

भाँडाको अन्नलाई "पृथिवी ते पात्रम्" मन्त्रले मन्त्रेर "इदं विष्णुर्विचक्रमे" मन्त्र पढ्दै ब्राह्मणलाई बुढी औंलाले छुन अनुरोध गर्नू ।

**सव्याहृतिकां गायत्रीं मधुवाता इति त्र्यृचम् ।**
**जप्त्वा यथासुखं वाच्यं भुञ्जीरँस्तेऽपि वाग्यताः ॥२३९॥**

अनि ब्राह्मणलाई व्याहृतिसहित गायत्रीको वा "मधुवाता" आदि मन्त्र तीन पटक जपी खान अनुरोध गर्नू र ब्राह्मणले पनि आनन्दले खानू ।

**अन्नमिष्टं हविष्यञ्च दद्यादक्रोधनोऽत्वरः ।**
**आ तृप्तेस्तु पवित्राणि जप्त्वा पूर्वजपन्तथा ॥२४०॥**

अन्न र हवि नरिसाई खुवाउनू । नअघाएसम्म पुरुष सूक्त र अघाएपछि व्याहृति सहित गायत्री मन्त्र जप्नू ।

**अन्नमादाय तृप्ताः स्थ शेषञ्चैवानुमान्य च ।**
**तदन्नं विकिरेद्भूमौ दद्याच्चापः सकृत्सकृत् ॥२४१॥**

ब्राह्मणलाई थपीथपी खान अनुरोध गर्नू, अघाएपछि बाँकी सबै थरी भोजन थोरै हातमा लिई बाँकी भोजन के गरौं ? भनी सोध्नू । खानु भने हातको अन्न जमिनमा छर्नू र हात धुन जल दिनू ।

**सर्वमन्नमुपादाय सतिलं दक्षिणामुखः ।**
**उच्छिष्टसन्निधौ पिण्डान्दद्याद्वै पितृयज्ञवत् ॥२४२॥**



ब्राह्मण उठेपछि सबै पक्वान्न र तिल अलिअलि लिएर दक्षिण फर्की पितृयज्ञमा पिण्डदान गरेझैं ब्राह्मणको जुठो नजिकै छर्नू ।

**मातामहानामप्येवं दद्यादाचमनं ततः ।**
**स्वस्तिवाच्यं ततः कुर्यादक्षय्योदकमेव च ॥२४३॥**

मातामह आदिका श्राद्धमा पनि यही विधि जान्नू । चुठेपछि ब्राह्मणलाई आचमन दिई स्वस्तिवाचन सुन्नू, फेरी जल दिनू र अक्षयसुखको आशिर्वाद लिनू ।

**दत्त्वा तु दक्षिणां शक्त्या स्वधाकारमुदाहरेत् ।**
**वाच्यतामित्यनुज्ञातः प्रकृतेभ्यः स्वधोच्यताम् ॥२४४॥**

ब्राह्मणलाई यथाशक्ति दक्षिणा दिई स्वधावाचनको अनुमति माग्नू र पिता, पितामह वा मातामहका लागि स्वधावाचन गर्नू ।

**ब्रूयुरस्तु स्वधेत्युक्ते भूमौ सिञ्चेत्ततो जलम् ।**

**विश्वेदेवाश्च प्रीयन्तां विप्रैश्चोक्त इदं जपेत् ॥२४५॥**

ब्राह्मणले 'स्वधा अस्तु' भनेपछि जजमानले कमण्डलुले जल भूमिमा छर्कनू र 'विश्वेदेवाः प्रसीदयन्तु' भन्नू । ब्राह्मणले पनि त्यसै भनेपछि तलको प्रार्थना गर्नू ।

**दातारो नोऽभिवर्धन्तां वेदाः सन्ततिरेव च ।**
**श्रद्धा च नो मा व्यगमद्बहुदेयं च नोऽस्त्विवति ॥२४६॥**

प्रभु ! हाम्रो परिवार दानी र धनधान्यले पूर्ण होस् । ज्ञान र सन्तानले सम्पन्न होउन् । शुभकर्ममा हाम्रो श्रद्धा रहिरहोस् तथा हामी सुन, गाई, धन आदि सधैँ यथेष्ट मात्रामा प्रसन्नताले दान दिन पाई रहौँ ।

**इत्युक्त्वोक्त्वा प्रिया वाचः प्रणिपत्य विसर्जयेत् ।**
**वाजेवाज इति प्रीतः पितृपूर्वं विसर्जनम् ॥२४७॥**

यसरी बारम्बार प्रार्थना गरी पितृ देखि विश्वेदेव सम्मका सबै निमन्त्रितहरुलाई विसर्जन (बिदाई) गर्नु । यसो गर्दा प्रसन्न रहनू र 'वाजे वाजेवत वाजिनो नः' मन्त्र जपिरहनू ।



**यस्मिँस्तु संस्रवाः पूर्वमर्घ्यपात्रे निवेशिताः ।**
**पितृपात्रं तदुत्तानं कृत्वा विप्रान्विसर्जयेत् ॥२४८॥**

ब्राह्मणलाई अर्घ्य दिँदादेखिका घोप्ट्याइएका सबै पितृपात्र र जलपात्रहरु उत्तानो पार्नू र ब्राह्मणलाई बिदा गर्नू ।

**प्रदक्षिणमनुव्रज्य भुञ्जीत पितृसेवितम् ।**
**ब्रह्मचारी भवेत्तां तु रजनीं ब्राह्मणैः सह ॥२४९॥**

ब्राह्मणलाई सिमासम्म पुऱ्याई उनको अनुमतिले प्रदक्षिणा गरी फर्कनू । जजमानले सो रात ब्रह्मचर्य व्रत गरी ब्राह्मणहरुका समीपमा रहनू ।

**एवं प्रदक्षिणावृत्को वृद्धौ नान्दीमुखान्पितॄन् ।**
**यजेत दधिकर्कन्धुमिश्रान्पिण्डान्यवैः क्रियाः॥२५०॥**

अभ्युदय वा नान्दीमुखी श्राद्धमा पनि प्रदक्षिणा, पितृ-पूजा, पितृका निम्ति

दही-बयर मिश्रित पिण्ड र तिलको सट्टा जौ प्रयोग गर्नू ।

**एकोद्दिष्टं देवहीनमेकार्घ्यैकपवित्रकम् ।**
**आवाहनाग्नौकरणरहितं ह्यपसव्यवत् ॥२५१॥**

एकोद्दिष्ट श्राद्धमा देवता र विश्वेदेवाको पूजा हुन्न, एउटै अर्घ्य र पवित्रको प्रयोग हुन्छ, आवाहन र अग्नौकरण हुन्न र यो श्राद्ध अपसव्य भएर गरिन्छ ।

**उपतिष्ठतामक्षय्यस्थाने विप्रविसर्जने ।**
**अभिरम्यतामिति वदेद्ब्रूयुस्तेऽभिरताःस्म ह ॥२५२॥**

श्राद्धमा आएका ब्राह्मणलाई हातमा जल दिएर "उपतिष्ठताम्" (विराज हुनुहोस्) र बिदाई गर्दा "अभिरम्यताम्" (हजुर आनन्दित हुनु भयो) भन्नु पर्दछ भने ब्राह्मणले पनि "अभिरताःस्म" (प्रसन्न भएँ) भन्नु पर्दछ ।

**गन्धोदकतिलैर्युक्तं कुर्यात्पात्रचतुष्टयम् ।**
**अर्घ्यार्थं पितृपात्रेषु प्रेतपात्रं प्रसेचयेत् ॥२५३॥**

**ये समाना इति द्वाभ्यां शेषं पूर्ववदाचरेत् ।**
**एतत्सपिण्डीकरणमेकोद्दिष्टं स्त्रिया अपि ॥२५४॥**

पितृलाई अर्घ्य दिनका लागि चन्दन-फूल-जल र तिल हालिएका चार पात्र बनाउनू र "ये समाना" र "ये समनसः" यी दुई मन्त्र पढ्दै प्रेतपात्रको जल पितृपात्रमा हाल्नु । बाँकी कर्म सबै पूर्ववत् गर्नू । यसैलाई सपिण्डीकरण गर्नु भनिन्छ । एकोद्दिष्ट कर्म स्त्रीका लागि पनि गरिन्छ ।

**अर्वाक्सपिण्डीकरणं यस्य सम्वत्सराद्भवेत् ।**
**अस्याप्यन्नं सोदकुम्भं दद्यात्सम्वत्सरं द्विजे ॥२५५॥**

एकवर्ष अगाडि नै सपिण्डीकरण गरिए, एक वर्षसम्म प्रतिदिन वा प्रतिमहिना शक्तिअनुसार ब्राह्मणलाई अन्न र जलपूर्ण कलश दान गरिरहनु पर्दछ ।

**मृतेऽहनि प्रकर्तव्यं प्रतिमासं तु वत्सरम् ।**
**प्रतिसम्वत्सरञ्चैवमाद्यमेकादशेऽहनि ॥२५६॥**

एकोद्दिष्ट एक वर्षसम्म प्रत्येक महिनाको मृत्युतिथिमा र सपिण्डीकरण
पछि प्रत्येक वर्ष श्राद्ध गर्नू । पहिलो श्राद्ध मृत्यु भएको एघारौं दिनमा गर्नू ।

**पिण्डाँस्तु गोऽजविप्रेभ्यो दद्यादग्नौ जलेऽपि वा ।**
**प्रक्षिपेत्सत्सु विप्रेषु द्विजोच्छिष्टं न मार्जयेत् ॥२५७॥**

श्राद्ध सकिएपछिको पिण्ड गाई, बोका वा ब्राह्मणलाई खुवाउनू अथवा अग्नि वा
जलमा विसर्जन गर्नू । ब्राह्मणले खाएको जुठो तुरुन्त सफा गर्नु हुँदैन ।

**हविष्यान्नेन वै मासं पायसेन तु वत्सरम् ।**
**मात्स्यहारिणकौरभ्रशाकुनच्छागपार्षतैः ॥२५८॥**
**ऐणरौरववाराहशाशैर्मांसैर्यथाक्रमम् ।**
**मासवृद्ध्याभितृप्यन्ति दत्तैरिह पितामहाः ॥२५९॥**

पितृहरु श्राद्धमा ब्राह्मणलाई खुवाइएको हविष्यान्नले एक महिना, खीरले एक वर्ष, पाठीन माछा-
कृष्णसार मृग-भेडा-तित्रा-बोका-सेतो थोप्ले मृग-रतुवा मृग-रुरु मृग-बँदेल र खरायोको
मासुले क्रमैले एक-एक महिना बढी सन्तुष्ट हुन्छन् ।

**खड्गामिषं महाशल्कं मधु मुन्यन्नमेव वा ।**
**लौहामिषं महाशाकं मांसं वार्ध्रीणसस्य च ॥२६०॥**
**यद्ददाति गयास्थश्च सर्वमानन्त्यमश्नुते ।**
**तथा वर्षात्रयोदश्यां मघासु च विशेषतः ॥२६१॥**

गया आदि तीर्थमा गई भाद्रकृष्ण त्रयोदशीमा अझ मघा नक्षत्र समेत परेको बेलामा जसले
गैंडा वा महाशल्क माछाको मासु, मह, सिलान्न, रातो अथवा बुढो सेतो बोकाको र
कालशाक नामक पशुको मासुको पिण्ड प्रदान गर्दछ त्यसले अनन्त पुण्य पाउँदछ ।

**कन्यां कन्यावेदिनश्च पशुन्वै सत्सुतानपि ।**
**द्यूतं कृषि वणिज्याञ्च द्विशफैकशफाँस्तथा ॥२६२॥**
**ब्रह्मवर्चस्विनः पुत्रान्स्वर्णरूप्ये सकुप्यके ।**
**ज्ञातिश्रैष्ठ्यं सर्वकामानाप्नोति श्राद्धदः सदा ॥२६३॥**

श्राद्धमा पितृका लागि भनी ब्राह्मणलाई छोरी, ज्वाईं, पाठो आदि साना पशु, सुपुत्र, जुवामा
जितिएको धन, उत्तम उब्जनी, ब्यापारमा गरिएको लाभ, दुई वा एक खुरे जनावर,
वेदाध्ययनमा तेजी पुत्र, सुन, चाँदी, तामा र सीसा दान गर्नेले सम्मान र
इज्जत पाएर उसका सबै कामना पूरा हुन्छन् ।

**प्रतिपत्प्रभृतिष्वेकां वर्जयित्वा चतुर्दशीम् ।**
**शस्त्रेण तु हता ये वै तेभ्यस्तत्र प्रदीयते ॥२६४॥**

चतुर्दशीबाहेक परेवादेखि पूर्णिमा वा औंसीसम्मका सबै तिथिमा श्राद्ध गर्न सकिन्छ, चतुर्दशीमा शस्त्रले मारिएकाको श्राद्ध गर्नू ।

**स्वर्गं ह्यपत्यमोजश्च शौर्यं क्षेत्रं बलं तथा ।**
**पुत्रं श्रेष्ठ्यञ्च सौभाग्यं समृद्धिं मुख्यतां शुभम् ॥२६५॥**
**प्रवृत्तचक्रतां चैव वाणिज्यप्रभृतीनपि ।**
**अरोगित्वं यशो वीतशोकतां परमां गतिम् ॥२६६॥**
**धनं वेदान्भिषक्सिद्धिं कुप्यं गा अप्यजाविकम् ।**
**अश्वानायुश्च विधिवद्यः श्राद्धं सम्प्रयच्छति ॥२६७॥**
**कृत्तिकादिभरण्यन्तं स कामानाप्नुयादिमान् ।**
**आस्तिकः श्रद्धधानश्च व्यपेतमदमत्सरः ॥२६८॥**

कृत्तिका देखि भरणी सम्मका सत्ताइस वटै नक्षत्रमा श्रद्धाले अभिमान नगरी विधिपूर्वक श्राद्ध गर्ने व्यक्तिका स्वर्ग, रुप र गुणले सम्पन्न पुत्र, तेजस्विता र निर्भयता, शूरता र आत्मबल, कृषियोग्य जमिन, शारीरिक बल, श्रेष्ठ सन्तान, सौभाग्य, समृद्धि, यश, लोकप्रियता, व्यापार आदिमा लाभ र प्रगति,, समाजमा प्रतिष्ठा, शारीरिक सुख, उत्तम स्वास्थ्य, शोकको नाश, धनधान्यको वृद्धि, वेदको ज्ञान, औषधीमा सिद्धि, बहुमूल्य धातुको प्राप्ति, अजेयता, नेतृत्व, पशुधनमा वृद्धि जस्ता सबै मनोकामना पूर्ण भई मरणोपरान्त ब्रह्मलोकमा परमपद प्राप्त गर्न सरल हुन्छ ।



**वसुरुद्रादितिसुता पितरः श्राद्धदेवताः ।**
**प्रीणयन्ति मनुष्याणां पितृश्राद्धेन तर्पिताः ॥२६९॥**
**आयुः प्रजां धनं विद्यां स्वर्गं मोक्षं सुखानि च ।**
**प्रयच्छन्ति तया राज्यं प्रीता नृणां पितामहाः ॥२७०॥**

वसु, रुद्र, र आदित्यादि गरिएका श्राद्धका देवताहरु श्राद्धबाट तृप्त भएभने मनुष्यका पितृलाई तृप्त गर्दछन् । फेरी पितृ तृप्त भएपछि तिनले श्राद्धकर्ताको वंशलाई दीर्घायु, उत्तम सन्तान, धन, विद्या, सुख र मोक्ष प्रदान गर्दछन् ।

**इति श्राद्धप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत श्राद्धप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

## अथ गणपतिकल्पप्रकरणम् (११)

**विनायकः कर्मविघ्न सिद्ध्यर्थं विनियोजितः ।
गणानां आधिपत्ये च रुद्रेण ब्रह्मणा तथा ॥२७१॥**

रुद्र, ब्रह्मा र विष्णुले गणेशलाई (सबैबाट गरिने) कर्ममा बाधा पार्ने र त्यसलाई शान्त गर्ने गणको मालिकको रूपमा नियुक्त गरेका हुन् ।

**तेनोपसृष्टो यस्तस्य लक्षणानि निबोधत ।
स्वप्नेऽवगाहतेऽत्यर्थं जलं मुण्डाँश्च पश्यति ॥२७२॥**

ती गणेशबाट जो पिडीत भएको हुन्छ उसमा देखिने लक्षणहरू सुन । सपनामा बढी आफू पानीमा नुहाइरहेको वा कपाल खौरेका मनिसहरू देख्दछ ।

**काषायवाससश्चैव क्रव्यादाँश्चाधिरोहति ।
अन्त्यजैर्गर्दभैरुष्ट्रैः सहैकत्रावतिष्ठते ॥२७३॥**



गेरुवस्त्र लगाएका मानिस, आफू हिंसक जनावर माथि चढेको, अन्त्यज-गधा र ऊँटसँग कतै एकै ठाउँमा बसिरहेको सपना देख्दछ ।

**व्रजन्नपि तथात्मानं मन्यतेऽनुगतं परैः ।
विमना विफलारम्भः संसीदत्यनिमित्ततः ॥२७४॥**

सपनामा आफूलाई रिसाएका शत्रुहरूले लखेटिरहेको देख्दछ । जुनसुकै काम शुरु गरेपनि सफलता पाउँदैन । सधैं दुःखी रहन्छ ।

**तेनोपसृष्टो लभते न राज्यं राजनन्दनः ।
कुमारी च न भर्तारमपत्यं गर्भमङ्गना ॥२७५॥**

राजकुमार भए राज्य पाउँदैन । कन्या भए राम्रो खालको पति पाउँदिन । स्त्री भए गर्भधारण हुँदैन, सन्तान हुँदैनन् ।

**आचार्यत्वं श्रोत्रियश्च न शिष्योऽध्ययनं तथा ।**

**वणिग्लाभं न चाप्नोति कृषिं चापि कृषीवलः ॥२७६॥**

श्रोत्रिय भए आचार्य हुँदैन । शिष्य भए अध्ययनमा बाधा हुन्छ । ब्यापारी भए फाइदा हुँदैन । किसान भए उब्जनी राम्रो हुँदैन ।

**स्नपनं तस्य कर्तव्यं पुण्येऽह्नि विधिपूर्वकम् ।**
**गौरसर्षपकल्केन साज्येनोत्सादितस्य च ॥२७७॥**

यस्ता (गणेश भगवानले दुःख दिएका) मानिसले शुभ दिनमा विधिपूर्वक पहेँलो सर्सिउँमा घिउ मिसाई लेप बनाएर शरीरमा दल्नू । (विवाहमा पूर्वाङ्गका दिन दीदिबहिनीले दाजुभाईलाई बुकुवा दल्ने विधिका पछाडिको एक कारण विवाहमा र त्यसपछि बाधा नहोस् भनेर हो) ।

**सर्वौषधैः सर्वगन्धैर्विलिप्तशिरसस्तथा ।**
**भद्रासनोपविष्टस्य स्वस्तिवाच्या द्विजाः शुभाः ॥२७८॥**

सर्वौषध (कूठ, तालीशपत्र, हलेदो, कचुर, जटामसी, पत्थरकुङ्कुम, श्रीखण्ड, बोभ्मो, चाँपो र मोथे) र सर्वगन्ध (दुई भाग कस्तूरी, चार भाग श्रीखण्ड, तीन भाग पत्थरकुङ्कुम र चार सय भाग कपूर मिसाई बनाइने लेप) को लेप टाउकामा दल्नू । त्यसपछि भद्रासन (दुवै कुर्कुच्चा अण्डकोश मुनि उत्तानो पारेर राखी दुवै हातले दुवै गोडाको बूढी औंला समाती बसिने एक आसन) मा बसाएर विद्वान ब्राह्मणहरूबाट स्वस्तिवाचन गराउनु पर्दछ ।



**अश्वस्थानाद्गजस्थानाद्वल्मीकात्सङ्गमाद्ध्रदात् ।**
**मृत्तिकां रोचनां गन्धान्गुग्गुलुञ्चाऽप्सु निक्षिपेत् ॥२७९॥**

तबेला, हात्ती बाँध्ने ठाउँ, धमिराको गोलो, नदीको दोभान र दहबाट लेराइएको माटो तथा गोरोचन, चन्दन आदि सुगन्ध, गोकुलधूप त्यो जलमा हाल्नू...।

**या आहृता ह्येकवर्णैश्चतुर्भिः कलशैर्ह्रदात् ।**
**चर्मण्यानडुहे रक्ते स्थाप्यं भद्रासनं ततः ॥२८०॥**

जुन जल एकैवर्णका चार जनाले चारवटा कलशमा तलाउबाट लेराएर उसका (भद्रासनमा बसाइने व्यक्ति) चारतिर राखेका हुन्छन् । त्यसपछि साँढेको रातो छालामा भद्रासन बनाउनू ।

**सहस्राक्षं शतधारं ऋषिभिः पावनं कृतम् ।**

**तेन त्वां अभिषिञ्चामि पावमान्यः पुनन्तु ते ॥२८१॥**

पूर्वबाट क्रमैले एक एक वटा कलशको जलले मन्त्रसहित ब्राह्मणहरूले "जुन अनेक शक्ति र प्रवाहयुक्त जललाई ऋषिजनले पवित्र बनाएका छन् त्यो जलले हामी तिमीलाई अभिषेक गर्दछौं, पवित्रदायक यो जलले तिमीलाई पवित्र बनाओस्" भन्नू ।

**भगं ते वरुणो राजा भगं सूर्यो बृहस्पतिः ।**
**भगं इन्द्रश्च वायुश्च भगं सप्तर्षयो ददुः ॥२८२॥**

साथै, "तिमीलाई (जलका) राजा वरुण, सूर्य, बृहस्पति, इन्द्र, वायु र सप्तऋषिले कल्याण गरुन्...।

**यत्ते केशेषु दौर्भाग्यं सीमन्ते यच्च मूर्धनि ।**
**ललाटे कर्णयोरक्ष्णोरापस्तद् घ्नन्तु सर्वदा ॥२८३॥**

तिम्रा कपाल, सिउँदो, तालु, निधार, दुवै कान र दुवै आँखामा भएको दुर्भाग्यलाई यो जलले सधैं नाश गरोस्" पनि भन्नू ।



**स्नातस्य सार्षपं तैलं स्रुवेणौदुम्बरेण तु ।**
**जुहुयान्मूर्धनि कुशान्सव्येन परिगृह्य च ॥२८४॥**

यसरी नुहाई दिएपछि देब्रे हातले कुश टाएको माथि राखी डुम्रीको काठले बनेको सुरोले सर्सिउँको तेल होम गर्नू ।

**मितश्च सम्मितश्चैव तथा शालकटङ्कटौ ।**
**कूश्माण्डो राजपुत्रश्चेत्यन्ते स्वाहासमन्वितैः ॥२८५॥**

मित सम्मित, शाल, कटङ्कट, कूष्माण्ड र राजपुत्रका पछाडि स्वाहा भन्दै यो सर्सिउँको होम हाल्नू ।
(ॐ मिताय स्वाहा, ॐ सम्मिताय स्वाहा, ॐ शालाय स्वाहा, ॐ कङ्कटाय स्वाहा, ॐ कूष्माण्डाय स्वाहा, ॐ राजपुत्राय स्वाहा)

**नामभिर्बलिमन्त्रैश्च नमस्कारसमन्वितैः ।**
**दद्याच्चतुष्पथे शूर्पे कुशानास्तीर्य सर्वतः ॥२८६॥**

यसपछि बलिदानका मन्त्र र नमस्कार सहित (आगोमा चरु पकाएर त्यही आगोमा माथिका छ मन्त्रले होम गर्नू) बलि दिनू र चौबाटोमा नाङ्लोमा चारैतिर कुश ओछ्याई...।

**कृताकृतांस्तण्डुलाँश्च पललौदनमेव च ।**
**मत्स्यान्पक्वाँस्तथैवामान्मांसमेतावदेव तु ॥२८७॥**

धान, चामल, तिलचामलको भात, पकाएको र काँचो माछा, अन्य मासु...।

**पुष्पं चित्रं सुगन्धञ्च सुराञ्च त्रिविधामपि ।**
**मूलकं पूरिकापूपांस्तथैवोण्डेरकस्रजः ॥२८८॥**

अनेक थरीका फूल र चन्दन, तीनै किसिमका मदिरा (गौडी, माध्वी र पैष्टी), मूला, पुरी, मालपुवा, ससाना रोटीको माला,...।

**दध्यन्नं पायसञ्चैव गुडपिष्टं समोदकम् ।**
**एतान्सर्वान्समाहृत्य भूमौ कृत्वा ततः शिरः ॥२८९॥**



दही मिसिएको अन्न, खीर, सखर मिसाइएको पिठो र लड्डु-यी सबै हाली जमिनमा टाउको (निधार) राखी...

**विनायकस्य जननीं उपतिष्ठेत्ततोऽम्बिकाम् ।**
**दूर्वासर्षपपुष्पाणां दत्त्वार्घ्यं पूर्णमञ्जलिम् ॥२९०॥**

गणेशकी आमा अम्बिकालाई नमस्कार गर्नू । त्यसपछि दूबो, सर्सिउँ र फूलले अर्घ दिई (निम्न मन्त्रले) पूर्णाञ्जलि (पुष्पाञ्जलि) दिनू ।

**रूपं देहि यशो देहि भगं भववन् देहि मे ।**
**पुत्रान्देहि धनं देहि सर्वकामाँश्च देहि मे ॥२९१॥**

हे देवी ! मलाई रूप, यश, कल्याण, पुत्र र धन दिई मेरा सबै मनोकामना पूरा गरि दिनु होस् ।

**ततः शुक्लाम्बरधरः शुक्लमाल्यानुलेपनः ।**
**ब्राह्मणान्भोजयेद्दद्याद्वस्त्रयुग्मं गुरोरपि ॥२९२॥**

त्यसपछि सेतो वस्त्र र माला तथा चन्दन लगाई ब्राह्मणहरूलाई भोजन गराउनू र गुरूलाई एक जोर वस्त्र पनि दान गर्नू ।

**एवं विनायकं पूज्य ग्रहाँश्चैव विधानतः ।**
**कर्मणां फलमाप्नोति श्रियं चाप्नोत्यनुत्तमाम् ॥२९३॥**

यो विधिले गणेश तथा ग्रहको पूजा गर्नाले मानिसले आफूले गरेको (वा गर्न आँटेको) शुभकर्मको फल प्राप्त गर्दछ, धनसम्पत्ति चाहनेले प्रशस्त धनसम्पत्ति पाउँदछ ।

**आदित्यस्य सदा पूजां तिलकं स्वामिनस्तथा ।**
**महागणपतेश्चैव कुर्वन्सिद्धिं अवाप्नुयात् ॥२९४॥**

सूर्य, कुमार र गणेशको दिनहुँ पूजा गर्नाले यिनको सुन, चाँदी आदिको मूर्ति बनाउँदा वा जलप लगाउँदा वा चढाउँदा वा यी धातु मिश्रित जलले अभिषेक गर्दा, गर्ने व्यक्ति मोक्ष हुन्छ ।

इति गणपतिकल्पप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत गणपतिकल्पप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ ग्रहशान्तिप्रकरणम् (१२)

**श्रीकामः शान्तिकामो वा ग्रहयज्ञं समाचरेत् ।**
**वृष्ट्यायुःपुष्टिकामो वा तथैवाऽभिचरन्नपि ॥२९५॥**

धनसम्पत्ति चाहने वा शान्ति चाहने पनि ग्रहयज्ञ (ग्रहशान्ति) गर्नू । वर्षा, दीर्घायु र शरीरको पुष्टि चाहनले तथा अदृश्य तरिकाले गरिने पीडाबाट जोगिन चाहनेले पनि गर्नू ।

**सूर्यः सोमो महीपुत्रः सोमपुत्रो बृहस्पतिः ।**
**शुक्रः शनैश्चरो राहुः केतुश्चेति ग्रहाः स्मृताः ॥२९६॥**

सूर्य, चन्द्रमा, मङ्गल, बुध, बृहस्पति, शुक्र, शनि, राहु र केतु ःयी ग्रहहरू हुन् ।

**ताम्रकात्स्फटिकाद्रक्तचन्दनात्स्वर्णकादुभौ ।**
**राजतादयसः सीसात्काँस्यात्कार्या ग्रहाः क्रमात् ॥२९७॥**

नौ ग्रहका क्रमैले तामा, स्फटिक, रक्तचन्दन, सुन, सुन, चाँदी, फलाम,
सीसा र काँसका मूर्ति बनाउनू ।



**स्ववर्णैर्वा पटे लेख्या गन्धैर्मण्डलकेषु वा ।**
**इथावर्णं प्रदेयानि वासांसि कुसुमानि च ॥२९८॥**

मूर्ति बनाउन नसकिए यी ग्रहका आआफ्ना रङ्ग अनुसारका वस्त्रमा अथवा बाटुलो घेरामा चन्दन आदिले यिनको मूर्ति बनाउनू । ग्रहको रङ्ग अनुसारकै वस्त्र र फूल चढाउनू ।

**गन्धश्च बलयश्चैव धूपो देयश्च गुग्गुलुः ।**
**कर्तव्या मन्त्रवन्तश्च चरवः प्रतिदैवतम् ॥२९९॥**

चन्दन चढाउनू, बलि दिनू र गोकुलधूप बाल्नू । हरेक ग्रहका लागि (तलका) मन्त्र पढ्दै बेग्लाबेग्लै चरु होम गर्नू ।

**आकृष्णेन इमं देवा अग्निर्मूर्धा दिवः ककुत् ।**
**उद्बुध्यस्वेति च ऋचो यथासङ्ख्यं प्रकीर्तिताः ॥३००॥**

**बृहस्पते अतियदर्यस्तथैवान्नात्परिस्रुतः ।**
**शन्नो देवीस्तथा काण्डात्केतुं कृण्वन्निमाँस्तथा ॥३०१॥**

"आकृष्णेन..", "इमं देवा..", "अग्निर्मूर्धा..", "दिवः ककुत्..", "उद्बुध्यस्व..", "बृहस्पते अतियदर्य..", "अन्नात्परिस्रुत..", "शंनो देवी काण्डात्.." र "केतुं कृण्वन्.." : यी क्रमशः नौ ग्रहका होम गर्ने मन्त्र हुन् ।

**अर्कः पलाशः खदिर अपामार्गोऽथ पिप्पलः ।**
**उदुम्बरः शमी दूर्वा कुशाश्च समिधः क्रमात् ॥३०२॥**

होम गर्नका लागि क्रमशः आँक, पलाश, खयर, दतिवन, पीपल, डुम्री, शमी, दूबो र कुशका समिधा हुन्छन् ।

**एकैकस्यात्राष्टशतमष्टाविंशतिरेव वा ।**
**होतव्या मधुसर्पिर्भ्यां दध्ना क्षीरेण वा युताः ॥३०३॥**

प्रत्येक ग्रहका लागि एक सय आठ वा अठ्ठाईस पटक मह, घिउ, दही र दूध समेत मिसाइएको चरु होम गर्नू ।



**गुडौदनं पायसञ्च हविष्यं क्षीरषाष्टिकम् ।**
**दध्योदनं हविश्चूर्णं मांसं चित्रान्नमेव च ॥३०४॥**

सखर-भात, खीर, मुनि-अन्न, सठिया चामलको भात र दूध, दहीभात, घिउभात (वा चामल), तिलको धुलो मिसाइएको भात, मासुभात र अनेक रङ्का भातले..।

**दद्याद्ग्रहक्रमादेवं द्विजेभ्यो भोजनं बुधः ।**
**शक्तितो वा यथालाभं सत्कृत्य विधिपूर्वकम् ॥३०५॥**

गच्छे अनुसार र उपलब्धता हेरी नौ ग्रहका लागि विद्वानले क्रमैले ब्राह्मणहरुलाई विधिपूर्वक भोजन गराउनू ।

**धेनुः शङ्खस्तथानड्वान्हेम वासो हयः क्रमात् ।**
**कृष्णा गौरायसं छाग एता वै दक्षिणाः स्मृताः ॥३०६॥**

गाई, शङ्ख, साँढे, सुन, वस्त्र, घोडा, काली गाई, तरबार वा छुरी र बोको : यी क्रमशः ग्रहका लागि दक्षिणा हुन्छन् भनी बताइएको छ ।

**यश्च यस्य यदा दुःस्थः स तं यत्नेन पूजयेत् ।**
**ब्रह्मणैषां वरो दत्तः पूजिताः पूजयिष्यथ ॥३०७॥**

जसलाई जतिखेर जुन ग्रहले पीडा दिन्छ उसले त्यतिखेर त्यही ग्रहको प्रयत्नपूर्वक पूजा गर्नू । ब्रह्माले यी ग्रहलाई "जसले यिनको पूजा गर्दछ उसलाई यिनले राम्रो गर्दछन्" भनेका छन् ।

**ग्रहाधीना नरेन्द्राणामुच्छ्रायाः पतनानि च ।**
**भावाभावौ च जगतस्तस्मात्पूज्यतमा ग्रहाः ॥३०८॥**

राजाहरुको उत्थान र पतनमा ग्रहहरूको हात हुन्छ । संसारको उत्पत्ति र विनाशमा पनि यिनकै हात हुन्छ । यसैले यिनको राम्ररी पूजा गर्नुपर्दछ ।

**(ग्रहाणामिदमातिथ्यं कुर्यात्सम्वत्सरादपि ।**

**आरोग्यबलसम्पन्नो जीवेत्स शरदः शतम् ॥**

वर्षको एकपटक ग्रहको पूजा गर्ने मानिस आरोग्य र बल पाई सय वर्ष बाँच्दछ) ।

इति ग्रहशान्तिप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत ग्रहशान्तिप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

# अथ राजधर्मप्रकरणम् (१३)

**महोत्साहः स्थूललक्षः कृतज्ञो वृद्धसेवकः ।**
**विनीतः सत्वसम्पन्नः कुलीनः सत्यवाक्शुचिः ॥३०९॥**

अती उत्साही, महादानी, कृतज्ञ, वृद्धसेवी, नम्र, समृद्धिमा हर्ष र विनाशमा दुःखी नहुने, कुलीन, सत्यवादी, बाहिरी र भित्रीरूपमा शुद्ध,..।

**अदीर्घसूत्रः स्मृतिमानक्षुद्रोऽपरुषस्तथा ।**
**धार्मिकोऽव्यसनश्चैव प्राज्ञः शूरो रहस्यवित् ॥३१०॥**

जाँगरिलो, स्मरणशील, असल गुणको डाहा नगर्ने, अर्काको दोष नबताउने, धार्मिक, (अठार प्रकारका) खराब आदत नभएको, विद्वान्, निडर, गोप्य कुरा थाहा पाउने, ..।

**स्वरन्ध्रगोप्ताऽऽन्वीक्षिक्यां दण्डनीत्यान्तथैव च ।**
**विनीतस्त्वथवार्तायां त्रय्याञ्चैव नराधिपः ॥३११॥**



राज्य सञ्चालनका सात अङ्गमा हुने कमजोरीलाई लुकाउने, आत्मविद्या-दण्डनीति र अर्थनीतिमा उदार (वा नम्र), कृषि-ब्यापार र पशुपालनलाई प्राथमिकता दिन तथा ऋक्-साम र यजुर्वेदप्रति नरम हुने राजा हुनु पर्दछ ।

**स मन्त्रिणः प्रकुर्वीत प्राज्ञान्मौलान्स्थिरान्शुचीन् ।**
**तैः सार्धं चिन्तयेद्राज्यं विप्रेणाथ ततः स्वयम् ॥३१२॥**

(यस्तो) राजाले विद्वान्, कुलीन, धैर्यशाली र पवित्र मन्त्रीहरू अथवा ब्राह्मणहरूसँग राज्यसञ्चालनमा विचारविमर्श गरी (अन्तमा) आफैंले बुद्धि पुऱ्याई निर्णय गर्नु पर्दछ ।

**पुरोहितं प्रकुर्वीत दैवज्ञमुदितोदितम् ।**
**दण्डनीत्याञ्च कुशलमथर्वाङ्गिरसे तथा ॥३१३॥**

राजाले ज्योतिष जान्ने, विद्या-संस्कार-धर्मकर्मले समृद्ध, अर्थनीतिमा कुशल र शान्ति आदि कर्ममा दक्ष व्यक्तिलाई पुरोहितमा नियुक्त गर्नू ।

**श्रौतस्मार्तक्रियाहेतोर्वृणुयादेव चर्त्विजः ।**
**यज्ञाँश्चैव प्रकुर्वीत विधिवद्भूरिदक्षिणान् ॥३१४॥**

यज्ञयागादि र उपासनाका लागि ऋत्विज्‌हरु नियुक्त गर्नू र प्रशस्त दक्षिणा दिँदै विभिन्न किसिमका यज्ञहरू गर्नू ।

**भोगाँश्च दद्याद्विप्रेभ्यो वसूनि विविधानि च ।**
**अक्षयोऽयं निधी राज्ञां यद्विप्रेषूपपादितम् ॥३१५॥**

ब्राह्मणहरूलाई सुखभोगका साधन दान दिनू । सुन, जमिन आदि कुरा दान दिनू । राजाले ब्राह्मणहरूलाई दिइएको दान नाश हुँदैन (खेर जाँदैन) ।

**अस्कन्नमव्यथञ्चैव प्रायश्चित्तैरदूषितम् ।**
**अग्नेः सकाशाद्विप्राग्नौ हुतं श्रेष्ठमिहोच्यते ॥३१६॥**

कुनै यज्ञ गर्नुभन्दा ब्राह्मणलाई दान दिनु श्रेयस्कर हुन्छ किन कि यसमा विधि नपुग्ने डर पनि हुँदैन, पशु हत्याको पाप र प्रायश्चितको झन्झट पनि व्यहोर्नु पर्दैन ।



**अलब्धमिहेद्धर्मेण लब्धं यत्नेन पालयेत् ।**
**पालितं वर्धयेन्नीत्या वृद्धं पात्रेषु निक्षिपेत् ॥३१७॥**

नपाइएका कुरा (समृद्धि वा धन) धर्मपूर्वक प्राप्त गर्न प्रयत्न गर्नू, पाइएको उपलब्धी (धन) लाई जोगाउनू, जोगाइएको धनलाई नीतिपूर्वक बढाउनू र बढाइएको धन सत्पात्रलाई दान गर्नू (राम्रा काममा खर्च गर्नू) ।

**दत्त्वा भूमिं निबन्धं वा कृत्वा लेख्यं तु कारयेत् ।**
**आगामिभद्रनृपति परिज्ञानाय पार्थिवः ॥३१८॥**

जमिन दान दिए कागज गरी दिनू जसले गर्दा पछिका राजाहरूले त्यस विषयमा थाहा पाउने छन् ।

**पटे वा ताम्रपट्टे वा स्वमुद्रोपरिचिह्नितम् ।**
**अभिलेख्यात्मनो वंश्यानात्मानञ्च महीपतिः ॥३१९॥**

**प्रतिग्रहपरीमाणं दानच्छेदोपवर्णनम् ।**
**स्वहस्तकालसम्पन्नं शासनं कारयेत्स्थिरम् ॥३२०॥**

बलियो खालको कपडा वा ताम्रपत्रमा राजाले आफ्नो र दान पाउनेको तीन पुस्ते, योग्यता आदि सबै व्यक्तिगत विवरण, दान दिइएको कुराको परिमाण र (जमिन दानमा) सौँधसीमाना समेत खुलाई तल आफूले दस्तखत गर्नू र मिति लेख्नू । यसले गरिएको कागज पक्का हुन्छ ।

**रम्यं पशव्यमाजीव्यं जाङ्गलं देशं आवसेत् ।**
**तत्र दुर्गाणि कुर्वीत जनकोशात्मगुप्तये ॥३२१॥**

रमणीय, पशुपंक्षीका लागि योग्य, जाङ्गल देश (रुख, पानी र पर्वत सहितको जमिन) मा राजकोष राख्न र आफू सुरक्षित रहन राजाले किल्लाहरू बनाउनू ।

**तत्र तत्र च निष्णातानध्यक्षान्कुशलाञ्छुचीन् ।**
**प्रकुर्यादायकर्मान्तव्ययकर्मसु चोद्यतान् ॥३२२॥**

धर्म, अर्थ आदि काममा ती ती काममा योग्य, अरु काम नगर्ने, चतुर, शुद्ध, आयव्ययको हरहिसाबमा पोख्त व्यक्ति (अधिकारी) लाई नियुक्त गर्नू ।



**नातः परतरो धर्मो नृपाणां यद्रणार्जितम् ।**
**विप्रेभ्यो दीयते द्रव्यं प्रजाभ्यश्चाभयं सदा ॥३२३॥**

राजाका लागि आफूले युद्धमा जितेको (कमाएको) धनले ब्राह्मण एवं प्रजालाई अभय दान दिनु जत्तिको ठूलो धर्म अरु छैन ।

**य आहवेषु वध्यन्ते भूम्यर्थमपराङ्मुखाः ।**
**अकूटैरायुधैर्यान्ति ते स्वर्गं योगिनो यथा ॥३२४॥**

जो जमिन (देश) का लागि लड्दछन् र विषालु हतियारबाट मारिन्छन् ती योगि गएझैं स्वर्ग जान्छन् ।

**पदानि क्रतुतुल्यानि भग्नेष्वविनिवर्तिनाम् ।**
**राजा सुकृतमादत्ते हतानां विपलायिनाम् ॥३२५॥**

आफ्ना सहयोगी (सेना) सबै मारिएका बेलामा पनि शत्रुका अगिल्तिर लड्न बढिरहेका हरेक पाइलाले एउटा अश्वमेध यज्ञ बराबरको फल दिन्छ । यसको विपरीत युद्धमैदानबाट भागेका हरेक व्यक्तिले जीवनमा गरेका असल कर्मको फल राजालाई प्राप्त हुन्छ ।

**तवाहंवादिनं क्लीबं निर्हेतिं परसङ्गतम् ।**
**न हन्याद्विनिवृत्तञ्च युद्धप्रेक्षणकादिकम् ॥३२६॥**

"म तिम्रै हुँ" भन्ने, नपुंसक, निरस्त्र (हतियार नभएको), अरुसँग लडिरहेको, युद्धबाट फर्केर आइरहेको, र युद्ध हेर्न आएको व्यक्तिलाई नमार्नू ।

**कृतरक्षः समुत्थाय पश्येदायव्ययौ स्वयम् ।**
**व्यवहाराँस्ततो दृष्ट्वा स्नात्वा भुञ्जीत कामतः ॥३२७॥**

देश र आफ्नो रक्षा गर्दै दिनहुँ बिहान उठी राज्यको आय-व्यय आफैँले हेर्दै, दिनभर गर्नुपर्ने कामका विषयमा ध्यान दिँदै, नुहाएर रुचि अनुसार भोजन गर्नू ।

**हिरण्यं व्यापृतानीतं भाण्डागारेषु निक्षिपेत् ।**
**पश्येच्चाराँस्ततो दूतान्प्रेषयेन्मन्त्रिसङ्गतः ॥३२८॥**



सुन आदि लेराएर भण्डारमा राख्न नियुक्त व्यक्तिले लेराएका कुरा आफैँले जाँची अनि मात्र राख्न लगाउनू । गुप्तचरका कुरा आफ्नै कानले सुन्नू । कुरा सुनेपछि अन्य दूत वा मन्त्री पठाएर त्यो कुराको यकीन गर्नू ।

**ततः स्वैरविहारी स्यान्मन्त्रिभिर्वा समागतः ।**
**बलानां दर्शनं कृत्वा सेनान्या सह चिन्तयेत् ॥३२९॥**

दिनको तेश्रो प्रहरमा एक्लै वा आफ्ना मन्त्रीसँग आवश्यक घुमफिर गर्नू, सेनाको निरीक्षण गर्नू र सेनापतिसँग आवश्यक विषयमा छलफल गर्नू ।

**सन्ध्यामुपास्य शृणुयाच्चाराणां गूढभाषितम् ।**
**गीतनृत्यैश्च भुञ्जीत पठेत्स्वाध्यायमेव च ॥३३०॥**

सन्ध्योपासना गरी गुप्तचरका कुरा सुन्नू, त्यसपछि नाचगानमा संलग्न हुनू, खानू र शास्त्र पढ्नू ।

**सम्विशेत्तूर्यघोषेण प्रतिबुध्येत्तथैव च ।**
**शास्त्राणि चिन्तयेद्बुद्ध्या सर्वकर्तव्यतास्तथा ॥३३१॥**

त्यसपछि शङ्ख, भेरी आदि बाजाको आवाज सुन्दै सुत्नू र त्यस्तै बाजाको आवाज सुन्दै बिहान उठ्नू । अनि शास्त्र र आफ्ना कर्तव्यका बारेमा सोचविचार गर्नू ।

**प्रेषयेच्च ततश्चारान्स्वेष्वन्येषु च सादरान् ।**
**ऋत्विक्पुरोहिताचार्यैराशीर्भिरभिनन्दितः ॥३३२॥**

आदरपूर्वक देशभित्र र देश बाहिर गुप्तचरहरू पठाउनू । ऋत्विज्, पुरोहित र आचार्यको आशिर्वाले आनन्दित भई,..।

**दृष्ट्वा ज्योतिर्विदो वैद्यान्दद्याद्गां काञ्चनं महीम् ।**
**नैवेशिकानि च ततः श्रोत्रियेभ्यो गृहाणि च ॥३३३॥**

ज्योतिषी र वैद्यहरूबाट शुभ र अशुभ तथा आफ्नो शरीरको हालखबर (अवस्था) थाहा पाउनू ।



**ब्राह्मणेषु क्षमी स्निग्धेष्वजिह्मः क्रोधनोऽरिषु ।**
**स्याद्राजा भृत्यवर्गेषु प्रजासु च यथा पिता ॥३३४॥**

राजाले ब्राह्मणका लागि क्षमाशील, मित्रका लागि इमानदार, शत्रुका लागि रिसाहा र सेवक एवं प्रजाका लागि बाबुसमान हुनू ।

**पुण्यात्षड्भागमादत्ते न्यायेन परिपालयन् ।**
**सर्वदानाधिकं यस्मात्प्रजानां परिपालनम् ॥३३५॥**

प्रजालाई राम्ररी पालनपोषण गर्नु राजाका लागि सबै खाले दान गर्नुभन्दा उत्तम हुन्छ अतः न्यायपूर्वक प्रजापालन गर्नू । यसो गर्दा प्रजाले गर्ने सत्कर्मको छैटौं भागको राजा स्वतः हिस्सेदार हुन्छ ।

**चाटतस्करदुर्वृत्त महासाहसिकादिभिः ।**
**पीड्यमानाः प्रजा रक्षेत्कायस्थैश्च विशेषतः ॥३३६॥**

ठग, चोर, जालीफटाहा, डाँका आदिको पीडाबाट विशेषतः कायस्थको पीडाबाट प्रजालाई रक्षा गर्नू ।

व्याख्या : कायस्थलाई शब्दकोशहरूमा जाति विशेष भनी अर्थ लगाइएको छ । त्यसबेला यो जाति बदनाम भएर यो शब्दको प्रयोग गरिएको हुन सक्दछ । तर, यो स्मृतिका टीकाकारहरुले कायस्थको अर्थ लेखकहरु र अर्थसँग सम्बन्धित भएर काम गर्नेहरु वा ज्योतिषीहरू भनी लगाएका छन् ।

**अरक्ष्यमाणाः कुर्वन्ति यत्किञ्चित्किल्बिषं प्रजाः ।**
**तस्मात्तु नृपतेरर्धं यस्माद्गृह्णात्यसौ करान् ॥३३७॥**

कानुनको राम्ररी कार्यान्वयन नगर्दा प्रजाबाट हुने गरिने दुष्कर्म (पाप) को आधा पाप राजालाई लाग्दछ किन कि प्रजालाई रक्षा गर्न भनेर नै राजा प्रजाबाट कर लिने गर्दछ ।

**ये राष्ट्राधिकृतास्तेषां चारैर्ज्ञात्वा विचेष्टितम् ।**
**साधून्सम्मानयेद्राजा विपरीताँश्च घातयेत् ॥३३८॥**

राजकर्मचारीको आचरण गुप्तचरबाट थाहा पाउनू । असललाई सम्मान गर्नू र खराबलाई दण्ड दिनू ।



**उत्कोचजीविनो द्रव्यहीनान्कृत्वा विवासयेत् ।**
**सद्दानमानसत्कारान्श्रोत्रियान्वासयेत्सदा ॥३३९॥**

जसले घूस लिन्छ उसलाई सर्वस्व हरण गरी देशबाट निकाली दिनू । मान, दान र सत्कार गरी श्रोत्रिय (वेदपाठी विद्वान) लाई आफ्नो राज्यमा बसाउनू ।

**अन्यायेन नृपो राष्ट्रात्स्वकोशं योऽभिवर्धयेत् ।**
**सोऽचिराद्विगतश्रीको नाशमेति सबान्धवः ॥३४०॥**

जुन राजाले आफ्नो देश (वा प्रजा) बाट अन्यायपूर्वक धन सङ्ग्रह गर्दछ (वा कर असुल्दछ) उ चाँडै बन्धुबान्धव समेत कङ्गाल भई नष्ट हुन्छ ।

**प्रजापीडनसन्तापात्समुद्भूतो हुताशनः ।**
**राज्ञः कुलं श्रियं प्राणाँश्चादग्ध्वा न निवर्तते ॥३४१॥**

प्रजालाई दिइएको पीडाले उत्पन्न हुने आगो राजाको धन, शोभा, कुल र प्राण नलिई निभ्दैन ।

**य एव नृपतेर्धर्मः स्वराष्ट्रपरिपालने ।**
**तमेव कृत्स्नमाप्नोति परराष्ट्रं वशं नयन् ॥३४२॥**

जुन धर्मले आफ्नो राज्य राम्ररी चलाइएको छ त्यही धर्मले अरु देशलाई पनि सहजै वशमा पार्न राजा सक्षम हुन्छ ।

**यस्मिन्देशे य आचारो व्यवहारः कुलस्थितिः ।**
**तथैव परिपाल्योऽसौ यदा वशमुपागतः ॥३४३॥**

कुनै देश आफ्नो अधिनमा आए (वा पारिए) त्यो देशमा जेजस्ता आचारविचार, व्यवहार र कुलपरम्परा जसरी चलेका छन् तिनलाई त्यसरी नै चल्न दिनू ।

**मन्त्रमूलं यतो राज्यं तस्मान्मन्त्रं सुरक्षितम् ।**
**कुर्याद्यथास्य न विदुः कर्मणामाफलोदयात् ॥३४४॥**



सरसल्लाह (गोप्य छलफल र निर्णय) मा नै राज्यको स्थिरता टिकेको हुन्छ, त्यसैले गोप्य निर्णय (वा कार्य) नतिजा नदेखिँदासम्म बाहिर सार्वजनिक नगर्नू ।

**अरिर्मित्रमुदासीनोऽनन्तरस्तत्परः परः ।**
**क्रमशो मण्डलं चिन्त्यं सामादिभिरुपक्रमैः ॥३४५॥**

आफ्नो राज्यसँग सीमा जोडिएको, त्यसभन्दा परको र त्यसभन्दा पनि परको राज्य स्वाभाविकरूपमा क्रमशः शत्रु, मित्र र उदासीन (तटस्थ) राज्य हुने गर्दछन् ।

**उपायाः साम दानञ्च भेदो दण्डस्तथैव च ।**
**सम्यक्प्रयुक्ताः सिध्येयुर्दण्डस्त्वगतिका गतिः ॥३४६॥**

साम, दान, भेद र दण्ड : यी चार उपायलाई विचार गरेर प्रयोग गर्दा सफल हुन्छन् । अरु कुनै उपाय बाँकी नभएमा मात्र दण्ड नीतिको प्रयोग गर्नू ।

**सन्धिञ्च विग्रहं यानं आसनं संश्रयं तथा ।**

**द्वैधीभावं गुणानेतान्यथावत्परिकल्पयेत् ॥३४७॥**

सन्धि, सम्बन्ध विच्छेद, आक्रमण, उपेक्षा, आश्रय र सेना : यी छ राजाका (लागि) गुण (राज्य सञ्चालनका उपाय) हुन् ।

**यदा सस्यगुणोपेतं परराष्ट्रं तदा व्रजेत् ।
परश्च हीन आत्मा च हृष्टवाहनपूरुषः ॥३४८॥**

जब अर्को अनाज, जल र इन्धनले सम्पन्न भएको हुन्छ, जब शत्रु आफूभन्दा कमजोर हुन्छ, जब आफ्ना सैनिक र बाहन चुस्तदुरुस्त वा हर्षमा हुन्छन् तब अर्को देशमाथि आक्रमण गर्नू ।

**दैवे पुरुषकारे च कर्मसिद्धिर्व्यवस्थिता ।
तत्र दैवमभिव्यक्तं पौरुषं पौर्वदेहिकम् ॥३४९॥**

गरिने कार्यको सफलता भाग्य र परिश्रममा निर्भर हुन्छ । भाग्यको भरमा मात्र हुँदैन किन कि पूर्वजन्ममा जुन परिश्रम गरिएको थियो त्यही नै यो जन्ममा भाग्य भनेर चिनिन्छ ।



**केचिद्दैवात्स्वभावाद्वा कालात्पुरुषकारतः ।
संयोगे केचिदिच्छन्ति फलं कुशलबुद्धयः ॥३५०॥**

कोही भाग्यले गर्दा, कोही स्वतः र कोही मेहनतले सफलता पाइन्छ भन्दछन् । तर बुद्धिमानहरू यी तीन वटै कुरा अनुकूल भएमा मात्र सफलता पाइन्छ भन्ने गर्दछन् ।

**यथा ह्येकेन चक्रेण रथस्य न गतिर्भवेत् ।
एवं पुरुषकारेण विना दैवं न सिध्यति ॥३५१॥**

जसरी एउटा मात्र पाङ्गाले रथ गुड्दैन त्यसरी नै मेहनत नै नगरी भाग्य पनि सफल हुँदैन ।

**हिरण्यभूमिलाभेभ्यो मित्रलब्धिर्वरा यतः ।
अतो यतेत तत्प्राप्त्यै रक्षेत्सत्यं समाहितः ॥३५२॥**

सुन र जमिन पाउनुभन्दा मित्र पाउनु उत्तम हुन्छ, अतः असल मित्र पाउन प्रयाश गर्नू र सावधानीपूर्वक आफ्नो यथार्थतालाई बचाएर राख्नू ।

**स्वाम्यमात्या जनो दुर्गं कोशो दण्डस्तथैव च ।**
**मित्राण्येताः प्रकृतयो राज्यं सप्ताङ्गमुच्यते ॥३५३॥**

गुणवान् राजा, मन्त्री, प्रजा, किल्ला, राजकोष, चार प्रकारका सेना, र मित्र -यी सात अङ्ग राज्यका मूल कारण हुन् । यसैले राज्यलाई सप्ताङ्ग भन्ने गरिन्छ ।

**तदवाप्य नृपो दण्डं दुर्वृत्तेषु निपातयेत् ।**
**धर्मो हि दण्डरूपेण ब्रह्मणा निर्मितः पुरा ॥३५४॥**

यस्तो राज्य पाएपछि राजाले दुष्टलाई दण्ड दिनू, किन कि परापूर्वकालमा ब्रह्माले दण्डरूपबाट धर्मलाई रचेका हुन् ।

**स नेतुं न्यायतोऽशक्यो लुब्धेनाकृतबुद्धिना ।**
**सत्यसन्धेन शुचिना सुसहायेन धीमता ॥३५५॥**

जो लोभी र चञ्चल बुद्धिको छ त्यसले न्यायपूर्वक कानुन लागू गराउन सक्दैन । जो साँचो, पवित्र, असल सहायकले युक्त र बुद्धिमान् छ, उसले सक्दछ ।



**यथाशास्त्रं प्रयुक्तः सन् सदेवासुरमानवम् ।**
**जगदानन्दयेत्सर्वमन्यथा तत्प्रकोपयेत् ॥३५६॥**

शास्त्रसम्मत तरिकाले कानुन परिपालना गराइए देवता, असुर र मानव समेत सारा संसार आनन्दित हुन्छन् । नभए सबैतिर रिस र विद्रोह हुन्छ ।

**अधर्मदण्डनं स्वर्ग कीर्तिलोकविनाशनम् ।**
**सम्यक्तु दण्डनं राज्ञः स्वर्गकीर्तिजयावहम् ॥३५७॥**

अधर्मपूर्वक दण्ड दिए राजाका स्वर्ग, कीर्ति र इहलोक सबै नासिन्छ । विधिले दण्ड दिने गरे उसलाई स्वर्ग, कीर्ति र समुन्नति प्राप्त हुन्छ ।

**अपि भ्राता सुतोऽर्घ्यो वा श्वशुरो मातुलोऽपि वा ।**
**नादण्ड्यो नाम राज्ञोऽस्ति धर्माद्विचलितः स्वकात् ॥३५८॥**

दाजुभाई, छोरो, अर्घ दिन योग्य ससुरा वा मामा आदि नै किन नहुन्, यदि ती धर्मभ्रष्ट भए भने

राजाका लागि दण्डनीय हुन्छन् ।

**योदण्ड्यान्दण्डयेद्राजा सम्यग्वध्यांश्च घातयेत् ।**
**इष्टं स्यात्क्रतुभिस्तेन समाप्तवरदक्षिणैः ॥३५९॥**

जुन् राजाले दण्डनीयलाई दण्ड दिन्छ र मार्नुपर्नेलाई मार्दछ त्यो राजाले ठूलो यज्ञ गरेको फल प्राप्त गर्दछ ।

**इति सञ्चिन्त्य नृपतिः क्रतुतुल्यफलं पृथक् ।**
**व्यवहारान्स्वयं पश्येत्सभ्यैः परिवृतोऽन्वहम् ॥३६०॥**

ऋतु अनुसारका फल हुन्छन् (मुण्डमुण्ड बुद्धि हुन्छ) भन्ने सोची राजाले दिनहुँ बेग्लाबेग्लै तरिकाले न्यायाधीशहरूसँगै बसी मुद्दामामिला हेर्ने गर्नू ।

**कुलानि जातीः श्रेणीश्च गणान्जानपदानपि ।**
**स्वधर्माच्चलितान्राजा विनीय स्थापयेत्पथि ॥३६१॥**



कुल, जाति, श्रेणी, गण, उप-जाति आदि सबै जो आफ्ना धर्मबाट विचलित भएका हुन्छन् तिनलाई राजाले उचित दण्ड दिएर आफ्नो धर्ममा प्रतिस्थापित पार्नू ।

**जालसूर्यमरीचिस्थं त्रसरेणू रजः स्मृतम् ।**
**तेऽष्टौ लिक्षा तु तास्तिस्रो राजसर्षप उच्यते ॥३६२॥**

जालीबाट छिरेको सूर्यको किरणमा देखिने धुलाको कणलाई “त्रसरेणु” भनिन्छ । आठ त्रसरेणुको एक “लिक्षा” र तीन लिक्षाको एक “राजसर्षप” हुन्छ ।

**गौरस्तु ते त्रयः षट्ते यवो मध्यस्तु ते त्रयः ।**
**कृष्णलः पञ्च ते माषस्ते सुवर्णस्तु षोडश ॥३६३॥**

तीन राजसर्षको एक गौरसर्षप, छ गौरसर्षपको एक यव, तीन यवको एक कृष्णल, पाँच कृष्णलको एक माष र सोह्र माषको एक सुवर्ण हुन्छ ।

**पलं सुवर्णाश्चत्वारः पञ्च वापि प्रकीर्तितम् ।**
**द्वे कृष्णले रूप्यमाषो धरणं षोडशैव ते ॥३६४॥**

चार वा पाँच सुवर्णको एक पल (तोला), दुई कृष्णलको एक रूप्यमाष र सोह्र रूप्यमाषको एक धरण हुन्छ ।

**शतमानन्तु दशभिर्धरणैः पलमेव तु ।**
**निष्कं सुवर्णाश्चत्वारः कार्षिकस्ताम्रिकः पणः ॥३६५॥**

दश धरणको एक शतमान वा पल र चार सुवर्णको एक निष्क हुन्छ । एक कर्षको तामालाई पण भनिन्छ ।

**साशीतिपणसाहस्रो दण्ड उत्तमसाहसः ।**
**तदर्धं मध्यमः प्रोक्तस्तदर्धमधमः स्मृतः ॥३६६॥**

एक हजार पण उत्तम साहसमा दण्ड दिइन्छ । त्यसको आधा जरिवाना तिराउनुलाई मध्यम साहस र त्यसभन्दा आधा तिराउनुलाई अधम साहस भनिन्छ ।

**धिग्दण्डस्त्वथ वाग्दण्डो धनदण्डो वधस्तथा ।**
**योज्या व्यस्ताः समस्ता वा ह्यपराधवशादिमे ॥३६७॥**



धिग्दण्ड, वाग्दण्ड, धनदण्ड र वधदण्ड गरी चार प्रकारका दण्ड हुन्छन् । जसले जस्तो अपराध गर्दछ त्यसलाई उसले गरेको अपराधको प्रकृति हेरी जति दिण्ड दिन योग्य हुन्छ त्यति दण्ड दिनु पर्दछ ।

**ज्ञात्वाऽपराधं देशञ्च कालं बलमथापि वा ।**
**वयः कर्म च वित्तञ्च दण्डं दण्डयेषु पातयेत् ॥३६८॥**

अपराध, भूगोल, समय, बल, परिस्थिति र धन हेरेर अपराधीलाई दण्ड दिनु पर्दछ ।

**इति राजधर्मप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत राजधर्मप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

# अथ व्यवहाराध्यायः २

## अथ साधारणव्यवहारमातृकाप्रकरणम् (१)

**व्यवहारान्नृपः पश्येद्विद्वद्भिर्ब्राह्मणैस्सह ।**
**धर्मशास्त्रानुसारेण क्रोधलोभविवर्जितः ॥१॥**

विद्वान ब्राह्मणहरुसँग बसी क्रोध र लोभलाई त्यागी धर्मशास्त्र अनुसार राजाले कानुनी कारवाहीहरू हेर्नू । (स्वामित्वका सम्बन्धमा हुने विवादलाई व्यवहार भनिन्छ ।)

**श्रुताध्ययनसंपन्ना धर्मज्ञाः सत्यवादिनः ।**
**राज्ञा सभासदः कार्या रिपौ मित्रे च ये समाः ॥२॥**

राजाले वेद एवं न्यायशास्त्र र व्याकरण आदि पढेका, धर्मज्ञ (धर्मशास्त्रका ज्ञाता), साँचो बोल्ने तथा शत्रु र मित्रमा भेदभाव नगर्ने मनिसलाई न्यायाधिशमा नियुक्त गर्नु पर्दछ ।

**अपश्यता कार्यवशाद्व्यवहारान्नृपेण तु ।**
**सभ्यैः सह नियोक्तव्यो ब्राह्मणः सर्वधर्मवित् ॥३॥**



कुनै काममा व्यस्त भई कानुनी कारवाही हेर्न राजाले नभ्याए (यस्ता) न्यायाधिश र सबै धर्म जान्ने ब्राह्मणलाई सो कार्यमा नियुक्त गर्नू ।

**रागाल्लोभाद्भयाद्वापि स्मृत्यपेतादिकारिणः ।**
**सभ्याः पृथक्पृथग्दण्ड्या विवादाद्द्विगुणं दमम् ॥४॥**

कुनै सभ्य नागरिक (मुद्दा फैसला गर्न बनाइएको इजलाशका वा समितिका न्यायाधिश वा ब्राह्मण) ले मायाले वा लोभले वा डरले धर्मशास्त्र विरुद्ध काम गरेमा हरेक न्यायाधिशलाई तिनले हेरिरहेको मुद्दामा दाबी गरिएको बिगो रकमको दोब्बर रकम दण्ड तिराउनू ।

**स्मृत्याचारव्यपेतेन मार्गेणाधर्षितः परैः ।**
**आवेदयति चेद्राज्ञे व्यवहारपदं हि तत् ॥५॥**

धर्मशास्त्र र सदाचार विरोधी तरिकाले अर्कोबाट पिडीत भएँ भनी राजामा जाहेरी परे वा भए त्यो कानुनी उपचार (व्यवहार पद) भनी जानिन्छ ।

**प्रत्यर्थिनोऽग्रतो लेख्यं यथावेदितमर्थिना ।**
**समामासतदर्धाहर्नामजात्यादिचिह्नितम् ॥६॥**

वादीले दिएको जाहेरी (वा उजुरी)मा वर्ष, महिना, नाम, जाति आदि विवरण प्रतिवादीका सामु खुलाई लेख्नू ।

**श्रुतार्थस्योत्तरं लेख्यं पूर्वावेदकसन्निधौ ।**
**ततोऽर्थी लेखयेत्सद्यः प्रतिज्ञातार्थसाधनम् ॥७॥**

प्रतिवादीले दिएको जवाफ वादीका सामु लेख्नू, यसपछि वादीले आफूले लगाएको आरोप प्रमाणित हुने कुरा बयानमा छिटो लेख्नू ।

**तत्सिद्धौ सिद्धिमाप्नोति विपरीतमतोऽन्यथा ।**
**चतुष्पाद्व्यवहारोऽयं विवादेषूपदर्शितः ॥८॥**

वादीको जाहेरी सही सावित भए उसले मुद्दा जित्दछ नत्र हार्दछ । कानुनी प्रक्रियामा बयानको भाषा, दिइएका उत्तर, गरिएको कर्म साध्य (अनुमानबाट प्रमाणित गरिने कुरा) गरी चार पाउ हुन्छन् भनी देखिएको छ ।



इति साधारणव्यवहारमातृकाप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत साधारण विवाद प्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ असाधारणव्यवहारमातृकाप्रकरणम् (२)

**अभियोगमनिस्तीर्य नैनं प्रत्यभियोजयेत् ।**
**अभियुक्तं च नान्येन नोक्तं विप्रकृतिं नयेत् ॥९॥**

नालिश दिनेलाई उसले जवाफ नदिई उल्टो नालिश नहाल्नू । अरु कसैले नालिश हालेको भएपनि उसलाई उल्टो नालिश नहाल्नू । पटकपटक बयान नफेर्नू ।

**कुर्यात्प्रत्यभियोगञ्च कलहे साहसेषु च ।**
**उभयः प्रतिभूर्ग्राह्यः समर्थः कार्यनिर्णये ॥१०॥**

झगडा र लुटपाटमा भने नालिश दिनेमाथि पनि उल्टो नालिश हाल्न सकिन्छ । यस्तो एकआपसमा नालिश हालिएको अवस्थामा मुद्दा फैसला गर्न सहज होस् भन्ने उद्देश्यले दुवै पक्षबाट जमानत लिनु पर्दछ ।

**निह्नवे भावितो दद्याद्धनं राज्ञे च तत्समम् ।**
**मिथ्याभियोगी द्विगुणं अभियोगाद्धनं वहेत् ॥११॥**



शङ्का गरिएको कुरा (आरोप) प्रमाणित भए राजाले प्रतिवादीबाट त्यो कुरा लिन लगाई वादीलाई दिन लगाउनू । त्यति नै बराबरको जरिवाना राजाले लिनू । झूटो आरोप लगाइएको पाइए जति रकम बराबरको झूटो आरोप लगाइएको हो त्यसको दोब्बर रकम नालिश दिनेबाट असुल्नू ।

**साहसस्तेयपारुष्य गोभिशापात्यये स्त्रियाम् ।**
**विवादयेत्सद्य एव कालोऽन्यत्रेच्छया स्मृतः ॥१२॥**

लुटपाट, चोरी, गालिगलौच, गाईलाई लडाउने कार्य, जिउ-धन नाशगर्ने कार्य र स्त्री-हरण सम्बन्धी मुद्दाको फैसला चाँडो गर्नू । अरु मुद्दाको फैसला वादी र प्रतिवादीले चाहेको समयमा गर्नू ।

**देशाद्देशान्तरं याति सृक्किणी परिलेढि च ।**
**ललाटं स्विद्यते चास्य मुखं वैवर्ण्यमेति च ॥१३॥**

जो यताउता (लुकेर) घुमिरहन्छ, मुखका कुना (ओठतालु सुकाएर) चाटिरहन्छ, निधारबाट ( चिटचिट) पसिना निकाल्दछ, अनुहारको रङ्ग बदल्दछ,..।

**परिशुष्यत्स्खलद्वाक्यो विरुद्धं बहु भाषिते ।**
**वाक्चक्षुः पूजयति नो तथौष्ठौ निर्भुजत्यपि ॥१४॥**

बोल्दाबोल्दै मुख सुकाउँदछ, बोल्दा हडबडाउँदछ, छिनछिनमा आफ्नो कुरा आफैंले काट्दछ, आँखा जुधाएर कुरा गर्दैन, बोल्न मन गर्दैन, ओठ टोकिरहन्छ,...।

**स्वभावाद्विकृतिं गच्छेन्मनोवाक्कायकर्मभिः ।**
**अभियोगे च साक्ष्ये वा दुष्टः स परिकीर्तितः ॥१५॥**

जसका मन-वचन र कर्म (एक्कासी) आफैं बदलिएका छन्-यी सबै लक्षण अभियोग र साछीमा हुने दुष्ट लक्षण मानिन्छन् ।

**सन्दिग्धार्थं स्वतन्त्रो यः साधयेद्यश्च निष्पतेत् ।**
**न चाहूतो वदेत्किञ्चिद्धीनो दण्ड्यश्च स स्मृतः ॥१६॥**

जो वादी प्रतिवादीले स्वीकार नगर्दा नगर्दै पनि उसँग मनोमानी ढङ्गले (मोलतोल गरी) धन माग्न थाल्दछ, जो आफूले कबोल गरेको वा आफूले लिएको भनी प्रमाणित भएको वस्तु माग्दा भाग्दछ, जो इजलाशमा बोल्दैन-यी सबैले मुद्दा हार्दछन् र दण्डनीय हुन्छन् ।



**साक्षिषूभयतः सत्सु साक्षिणः पूर्ववादिनः ।**
**पूर्वपक्षेऽधरीभूते भवन्त्युत्तरवादिनः ॥१७॥**

वादी र प्रतिवादी दुवै पक्षका साछी उपस्थित हुँदा पहिले वादीपक्षका साछीको बयान लिनू । (त्यसपछि) त्यो कमजोर भए प्रतिवादी पक्षका साछीको बयान लिनू ।

**सपणश्चेद्विवादः स्यात्तत्र हीनन्तु दापयेत् ।**
**दण्डञ्च स्वपणञ्चैव धनिने धनमेव च ॥१८॥**

यदि बाजी थापिएको मुद्दा भए हार्नेसँग बाजी थापे बराबरको रकम असुली राजाले अर्को पक्षलाई भराउनू ।

**छलं निरस्य भूतेन व्यवहारान्नयेन्नृपः ।**

**भूतमप्यनुपन्यस्तं हीयते व्यवहारतः ॥१९॥**

कपटी कुरालाई छाडी मुख्य कुरा हेरेर राजाले मुद्दाको फैसला गर्नू, किन कि साँचो कुरा पनि भनिएन भने हार हुन पुग्दछ ।

**निह्नुते लिखितं नैकमेकदेशे विभावितः ।**
**दाप्यः सर्वं नृपेणार्थं न ग्राह्यस्त्वनिवेदितः ॥२०॥**

वादीले उजुरीमा लेखेका कुरा प्रमाणित भए प्रतिवादीबाट वादीलाई दिलाउनू, नलेखेका कुरा (पछि प्रमाणित भएपनि) त्यसलाई नमान्नू, नदिलाउनू ।

**स्मृत्योर्विरोधे न्यायस्तु बलवान्व्यवहारतः ।**
**अर्थशास्त्रात्तु बलवद्धर्मशास्त्रमिति स्थितिः ॥२१॥**

स्मृतिका बीचमा मतभिन्नता देखिएमा व्यवहारलाई जोड दिनू । अर्थशास्त्रभन्दा धर्मशास्त्र बलियो हुन्छ, यही नै मर्यादा हो ।



**प्रमाणं लिखितं भुक्तिः साक्षिणश्चेति कीर्तितम् ।**
**एषामन्यतमाभावे दिव्यान्यतममुच्यते ॥२२॥**

लिखत, धनवस्तुको उपभोग र साछी :यी मुद्दामा प्रमाण हुन्छन् भनिएको छ । यी कुनै पनि प्रमाण नहुँदा शपथको सहयोग लिनू ।

**सर्वेष्वर्थविवादेषु बलवत्युत्तराक्रिया ।**
**आधौ प्रतिग्रहे क्रीते पूर्वा तु बलवत्तरा ॥२३॥**

धनसम्बन्धी सबैखालका मुद्दामा पछिल्लो बयान बलियो हुन्छ । धितो, दान र खरिदबिक्रीका मुद्दामा शुरुको बयान बलियो हुन्छ ।

**पश्यतोऽब्रुवतो भूमेर्हानिर्विंशतिवार्षिकी ।**
**परेण भुज्यमानाया धनस्य दशवार्षिकी ॥२४॥**

यदि कुनै अर्कै मानिस कसैको धन र जग्गा उपभोग गर्दछ र त्यो धन र स्वामीको मालिक केही बोल्दैन भने धनमा दश वर्षमा र जमिनमा बीस वर्षमा (वास्तविक) स्वामीको स्वामित्व नष्ट हुन्छ ।

**आधिसीमोपनिक्षेप जडबालधनैर्विना ।**
**तथोपनिधिराजस्त्रीश्रोत्रियाणां धनैरपि ॥२५॥**

धितो, सीमा, गनेर वा तौलेर राखिएको धरौटी, मूर्ख-लाटो-बेहोसी एवं बालकको धन, नासो, राज-धन, स्त्री-धन र श्रोत्रिय-धन भए अरु कसैले दश वा बीस वर्षसम्म उपभोग गरेपनि, दाबी गरिएन भन्दैमा त्यो धनमाथिको यिनको स्वामित्व नष्ट हुँदैन ।

**आध्यादीनां विहर्तारं धनिने दापयेद्धनम् ।**
**दण्डञ्च तत्समं राज्ञे शक्त्यपेक्षमथापि वा ॥२६॥**

धितो मासेमा वा सीमा मिचेमा राजाले त्यसको धनीलाई त्यो धन दिलाउनू र त्यति नै बराबरको जरिवाना तिराउनू अथवा उसको सामर्थ्य हेरेर जरिवाना तिराउनू ।



**आगमोऽभ्यधिको भोगाद्विना पूर्वक्रमागतात् ।**
**आगमेऽपि बलं नैव भुक्तिः स्तोकापि यत्र नो ॥२७॥**

तीन पुस्तादेखि भोगचलन गर्दै आएको छ भने त्यसले लिखत पनि बलियो हुन्छ । तर भोगचलन ठ्याम्मै छैंदै छैन भने लिखत बलियो हुँदैन ।

**आगमस्तु कृतो येन सोऽभियुक्तस्तं उद्धरेत् ।**
**न तत्सुतस्तत्सुतो वा भुक्तिस्तत्र गरीयसी ॥२८॥**

जसले लिखत लेख्न लगाएको हो लिखत माथि विवाद हुँदा त्यो लिखत उसैले देखाउनू, छोरा-नातीले नदेखाउनू किन कि तिनका लागि भोगचलन नै बलियो हुन्छ ।

**योऽभियुक्तः परेतः स्यात्तस्य रिक्थी तमुद्धरेत् ।**
**न तत्र कारणं भुक्तिरागमेन विनाकृता ॥२९॥**

लिखत बनाउने माथि नै अभियोग लागेको छ वा लिखत नष्ट भएको छ भने हकदारहरूले लिखतलाई प्रमाणित गर्नू । लिखत प्रमाण नै नभई उपभोग भइरहेको अवस्था

व्यवहारमा (सामान्यतः) देखिन्न ।

**नृपेणाधिकृताः पूगाः श्रेणयोऽथ कुलानि च ।**
**पूर्वं पूर्वं गुरु ज्ञेयं व्यवहारविधौ नृणाम् ॥३०॥**

कानुनी अधिकार प्राप्त व्यक्ति (राजाको अधिकारी), सङ्घ-सङ्गठन, श्रमिकको सङ्गठन र कुल : यिमध्ये क्रमशः पछिल्लाबाट लेखिएका लिखत मुद्दा फैसला गर्न कम श्रेष्ठ हुन्छन् ।

**बलोपाधिविनिर्वृत्तान्व्यवहारान्निवर्तयेत् ।**
**स्त्रीनक्तमन्तरागार बहिःशत्रुकृताँस्तथा ॥३१॥**

बलजफ्ती (बलात्कार) गरेर वा डराएर गरिएका विवाद अनि स्त्रीबाट भएका, रातमा भएका, घरभित्र भएका, गाउँबाहिर (एकान्तमा) भएका र शत्रुबाट भएका घटनाको विवाद (मुद्दा) दोहोऱ्याएर हेर्नू ।

**मत्तोन्मत्तार्तव्यसनि बालभीतादियोजितः ।**
**असम्बद्धकृतश्चैव व्यवहारो न सिध्यति ॥३२॥**



नसामा भएको, मानसिक सन्तुलन नभएको, रोग आदिले पीडित, कुनै भवितव्य परेर अती दुःखमा परेको, बालक र डराएर गरिएका घटनामा तथा असम्बन्धित (असंलग्न) घटनामा आरोप प्रमाणित हुँदैन ।

**प्रनष्टाधिगतं देयं नृपेण धनिने धनम् ।**
**विभावयेन्न चेल्लिङ्गैस्तत्समं दण्डमर्हति ॥३३॥**

कसैको हराएको कुनै वस्तु अरु कसैले राजासमक्ष लेराए राजाले त्यो वस्तुलाई त्यसको वास्तविक मालिकलाई दिनू । जो राम्ररी दाबी गर्न सक्दैन त्यस्तो झूटो दाबी गर्न आउनेलाई त्यो वस्तुको मूल्य बराबर दण्ड तिराउनू ।

**राजा लब्ध्वा निधिं दद्याद्द्विजेभ्योऽर्धं द्विजः पुनः ।**
**विद्वानशेषमादद्यात्स सर्वस्य प्रभुर्यतः ॥३४॥**

राजाले गाढधन पाए आधा ब्राह्मणलाई दान गर्नू, ब्राह्मणले पाए यदि उ विद्वान छ भने सबै आफैं लिनू किन कि उ सबैको स्वामी हो ।

**इतरेण निधौ लब्धे राजा षष्ठांशमाहरेत् ।**
**अनिवेदितविज्ञातो दाप्यस्तं दण्डमेव च ॥३५॥**

अरुले गाढधन पाए राजाले उसलाई छैटौं भाग दिएर बाँकी सबै आफैं लिनू । गाढधन पाएर राजालाई बताइएन र पछि राजाले कतैबाट थाहा पाए भने त्यो धन सबै लिई उसलाई जरिवाना पनि तिराउनू ।

**देयं चौरहृतं द्रव्यं राज्ञा जानपदाय तु ।**
**अददद्धि समाप्नोति किल्बिषं यस्य तस्य तत् ॥३६॥**

जसको धनमाल चोरी भएको छ उसलाई राजाले जसरी भएपनि त्यो धनमाल दिनू । जुन् राजा दिँदैन त्यो सबै पाप उसैले बोक्नु पर्दछ ।

**इति असाधारणव्यवहारमातृकाप्रकरणम्**

✷

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत असाधारण विवाद प्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

✷

## अथ ऋणादानप्रकरणम् (३)

**अशीतिभागो वृद्धिः स्यान्मासि मासि सबन्धके ।**
**वर्णक्रमाच्छतं द्वित्रिचतुष्पञ्चकमन्यथा ॥३७॥**

धितोमा दिइने ऋणको प्रतिमहिना असीमा एकका दरले ब्याज लिनू । बिनाधितोमा वर्णानुसार क्रमशः दुई, तीन, चार र पाँच प्रतिशत ब्याज लिनू ।

**कान्तारगास्तु दशकं सामुद्रा विंशकं शतम् ।**
**दद्युर्वा स्वकृतां वृद्धिं सर्वे सर्वासु जातिषु ॥३८॥**

ऋणलिई कमाउन घना जङ्गल छिर्नेसँग दश र समुद्रपारी जानेसँग बीस प्रतिशत वा सबैसँग निर्धारित ब्याज लिनू ।

**सन्ततिस्तु पशुस्त्रीणां रसस्याष्टगुणा परा ।**
**वस्त्रधान्यहिरण्यानां चतुस्त्रिद्विगुणा परा ॥३९॥**



पशु र स्त्री बन्धकीको ब्याज उपभोग र जन्मने सन्तान हुन्छन् । तरल वस्तुको धितोमा आठ, कपडामा चार, धानमा तीन र सुनमा दुई गुणासम्म ब्याज लिन सकिन्छ ।

**प्रपन्नं साधयन्नर्थं न वाच्यो नृपतेर्भवेत् ।**
**साध्यमानो नृपं गच्छन्दण्ड्यो दाप्यश्च तद्धनम् ॥४०॥**

धर्म अनुसार आफ्नो धन असूल गर्नेको काममा राजाले हस्तक्षेप नगर्नु, नतिर्नेलाई शिकायत आएमा दण्ड दिनू र ऋण असुलीमा सहायक बन्नू ।

**गृहीतानुक्रमाद्दाप्यो धनिनामधमर्णिकः ।**
**दत्त्वा तु ब्राह्मणायैव नृपतेस्तदनन्तरम् ॥४१॥**

समान जातका धेरैसँग ऋण लिनेबाट क्रमैले र विभिन्न जातसँग लिएको भए ब्राह्मण आदि वर्णक्रम अनुसार ऋण उठाइदिनू ।

**राज्ञाधमर्णिको दाप्यः साधिताद्दशकं शतम् ।**
**पञ्चकञ्च शतं दाप्यः प्राप्तार्थो ह्युत्तमर्णिकः ॥४२॥**

ऋण असुली गराए बापत राजाले साहुसँग पाँच र ऋणीसँग दश प्रतिशत कमिशन लिनू ।

**हीनजातिं परिक्षीणमृणार्थं कर्म कारयेत् ।**
**ब्राह्मणस्तु परिक्षीणः शनैर्दाप्यो यथोदयम् ॥४३॥**

ऋणी ऋण दिनेभन्दा तल्लो जातको र तिर्न नसक्ने भए राजाले उसको जाति र व्यवसाय अनुसार दाताको काम गर्ने व्यवस्था गर्नू । ऋणी ब्राह्मण भए अलिअलि गरी ऋण तिर्ने व्यवस्था मिलाई दिनू ।

**दीयमानं न गृह्णाति प्रयुक्तं यः स्वकं धनम् ।**
**मध्यस्थस्थापितश्चेत्स्याद्वर्धते न ततः परम् ॥४४॥**

ब्याजको लोभमा तिरेको ऋण नलिने (लिन नमान्ने) ऋण र मध्यस्त कर्तालाई दिइसकेको ऋणमा ब्याज तिर्नु पर्दैन ।

**अविभक्तैः कुटुम्बार्थे यदृणन्तु कृतं भवेत् ।**
**दद्युस्तद्रिक्थिनः प्रेते प्रोषिते वा कुटुम्बिनी ॥४५॥**



सगोलमा हुँदा परिवारको कुनै सदस्यले परिवारको गर्जो टार्न लिएको ऋण उसको मृत्युपछि उसको उत्तराधिकारी तिर्न बाध्य हुन्छ ।

**न योषित्पतिपुत्राभ्यां न पुत्रेण कृतं पिता ।**
**दद्यादृते कुटुम्बार्थान्न पतिः स्त्रीकृतं तथा ॥४६॥**

व्यक्तिगत उद्देश्यले पति, पुत्र र पत्नीले लिएको ऋण तिर्न (क्रमशः) पत्नी, मातापिता र पति बाध्य हुने छैनन् ।

**सुराकामद्यूतकृतं दण्डशुल्कावशिष्टकम् ।**
**वृथादानं तथैवेह पुत्रो दद्यान्न पैतृकम् ॥४७॥**

सुरा, सुन्दरी, जुवा, दण्ड-जरिवाना र व्यर्थका दानमा बाबुले लिएको ऋण तिर्नु पुत्रको दायित्व हुँदैन ।

**गोपशौण्डिकशैलूषरजकव्याधयोषिताम् ।**

**ऋणं दद्यात्पतिस्तेषां यस्माद्वृत्तिस्तदाश्रया ॥४८॥**

ग्वाला, भट्टीवाल, अभिनेता, रङ्गकर्मी र शिकारी-यी पत्नीमा आश्रित हुने हुनाले पत्नीले लिएको ऋण तिर्न बाध्य हुन्छन् ।

**प्रतिपन्नं स्त्रिया देयं पत्या वा सह यत्कृतम् ।**
**स्वयङ्कृतं वा यदृणं नान्यत्स्त्री दातुमर्हति ॥४९॥**

मरणासन्न वा विदेशिन लागेको पतिले "तिर्नु" भनेको तथा पत्नी एक्लैले लिएको वा पतिपत्नी दुवैले लिएको ऋण तिर्न पत्नी बाध्य हुन्छे, अन्य ऋण तिर्न उ बाध्य हुन्न ।

**पितरि प्रोषिते प्रेते व्यसनाभिप्लुतेऽपि वा ।**
**पुत्रपौत्रैर्ऋणं देयं निह्नवे साक्षिभावितम् ॥५०॥**

बाबु ऋण नतिरी मरे, विदेश गए वा थला परे त्यो ऋण छोरानातीले तिर्नू । थाहा नपाएको (ऋणसम्बन्धी) कुरामा साक्षीलाई आधार मान्नू ।



**रिक्थग्राह ऋणं दाप्यो योषिद्ग्राहस्तथैव च ।**
**पुत्रोऽनन्याश्रितद्रव्यः पुत्रहीनस्य रिक्थिनः ॥५१॥**

अंशबण्डा गर्दा सगोलको र परस्त्री विवाह गर्दा पूर्वपतिको ऋण तिर्नू । छोरो भए छोराले र नभए अपुताली खानेले ऋण तिर्नू ।

**भ्रातृणामथ दम्पत्योः पितुः पुत्रस्य चैव हि ।**
**प्रातिभाव्यमृणं साक्ष्यमविभक्ते न तु स्मृतम् ॥५२॥**

दाजुभाई, पतिपत्नी र बाबुछोरा यदि सगोलमा छन् भने ती ऋणको कागज गर्दा जमानी बस्न योग्य हुँदैनन् ।

**दर्शने प्रत्यये दाने प्रातिभाव्यं विधीयते ।**
**आद्यौ तु वितथे दाप्यावितरस्य सुता अपि ॥५३॥**

आसामीलाई लेराउनु, दातालाई विश्वास दिनु र नतिरे म छु भन्नु जमानी बस्नु हो । आसामी लेराउन वा दातालाई विश्वास दिन नसके जमानीबाटै र तिर्नेगरी जमानी बसको भए

उसको छोराबाट भएपनि ऋण असुल्नू ।

**दर्शनप्रतिभूर्यत्र मृतः प्रात्ययिकोऽपि वा ।**
**न तत्पुत्रा ऋणं दद्युर्दद्युर्दानाय यः स्थितः ॥५४॥**

आसामी उभ्याउने र विश्वास दिलाउने जमानी बस्ने व्यक्ति मरेमा, उसका छोरालाई दायित्व हुँदैन । तर, तिर्नेगरी जमानी बसेको व्यक्ति मरेमा त राजाले छोराबाट पनि ऋण असुल्नू ।

**बहवः स्युर्यदि स्वांशैर्दद्युः प्रतिभुवो धनम् ।**
**एकच्छायाश्रितेष्वेषु धनिकस्य यथारुचि ॥५५॥**

जमानी बस्ने मानिस धेरै भए तिनले दामासाहीले वा तिमध्ये कुनै एक जमानी एक्लैले ऋण तिर्न खोजे साहु स्वेच्छाले ऋण असुल गर्न स्वतन्त्र छ ।

**प्रतिभूर्दापितो यत्तु प्रकाशं धनिनो धनम् ।**
**द्विगुणं प्रतिदातव्यमृणिकैस्तस्य तद्भवेत् ॥५६॥**



सबैका सामु ऋण तिर्ने जमानीलाई आसामीले त्यसको दोब्बर रकम तिर्ने व्यवस्था गर्नु पर्दछ ।

**सन्ततिः स्त्रीपशुष्वेव धान्यं त्रिगुणमेव च । व**
**स्त्रं चतुर्गुणं प्रोक्तं रसश्चाष्टगुणस्तथा ॥५७॥**

जमानीबाट स्त्री र पशु लिइएको छ भने आसामीबाट सन्तती सहित स्त्री वा पशु दिलाउनू । यसरी नै धान, वस्त्र र द्रव्य तिरेको छ भने क्रमशः तीन, चार र पाँच गुणा असुल्नू ।

**आधिः प्रणश्येद् द्विगुणे धने यदि न मोक्ष्यते ।**
**काले कालकृतो नश्येत्फलभोग्यो न नश्यति ॥५८॥**

साँवा बराबर ब्याज हुँदा पनि धितो नछुटाए, धितोमा राख्नेको अधिकार सकिन्छ । तर जमिन, पशु, घर आदि धितो राखिएको भए त्यसबाट प्राप्त हुने फलमा अधिकार रहिरहन्छ ।

**गोप्याधिभोगे नो वृद्धिः सोपकारे च हापिते ।**
**नष्टो देयो विनष्टश्च दैवराजकृतादृते ॥५९॥**

गोप्यरुपमा राखिएको धितो वा बन्धकी चलाए वा उपयोग हुने जमिन आदि धितोमा हानी पुऱ्याए आसामीले ब्याज तिर्नु पर्दैन । दैवी विपत्ति र सरकारी हस्तक्षेप बाहेकका सामान्य स्थितिमा धितो हराएमा साहूले पूरा क्षतिपूर्ति दिनुपर्दछ ।

**आधेः स्वीकरणात्सिद्धी रक्ष्यमाणोऽप्यसारताम् ।**
**यातश्चेदन्य आधेयो धनभाग्वा धनी भवेत् ॥६०॥**

धितो राखिएको वस्तुको सुरक्षा गर्दागर्दै पनि सावाँ-ब्याज नखाम्ने स्थिति भए आसामीले धितो थप्नु पर्दछ वा पहिलेको धितो निफन्नु पर्दछ ।

**चरित्रबन्धककृतं स वृद्ध्या दापयेद्धनम् ।**
**सत्यङ्कारकृतं द्रव्यं द्विगुणं प्रतिदापयेत् ॥६१॥**

खुशीले कम वा बढी मूल्यको धितो राखिएको भएपनि ऋणदातालाई साउँब्याज दिलाउनू । साँवाब्याज गरेर धितोको डबल भएपनि साहुको अधिकार नहुने गरी सम्झौता गरिएको भए धितोमा उसको अधिकार हुँदैन । आसामीले सम्झौता बमोजिमको रकम मात्र तिरेर धितो छुटाउन सक्दछ ।



**उपस्थितस्य मोक्तव्य आधिः स्तेनोऽन्यथा भवेत् ।**
**प्रयोजकेऽसति धनं कुले न्यस्याधिमाप्नुयात् ॥६२॥**

आसामीले सामान छुटाउन अनुरोध गर्दा साहूले ब्याजको लोभले आनाकानी नगर्नू । साहु नपाए उसका परिवारलाई भएपनि साँवाब्याज तिरी धितो छुटाउनू ।

**तत्कालकृतमूल्यो वा तत्र तिष्ठेदवृद्धिकः ।**
**विना धारणकाद्वापि विक्रीणीत ससाक्षिकम् ॥६३॥**

ऋण तिर्न नसक्ने स्थितिमा प्रचलित मूल्यमा हिसाब गरी धितो साहूलाई दिनू । नियम अनुसार धितो लिन ऋणी नआए साक्षी राखी बेचबिखन (लिलाम) गर्नू ।

**यदा तु द्विगुणीभूतमृणमाधौ तदा खलु ।**
**मोच्य आधिस्तदुत्पन्ने प्रविष्टे द्विगुणे धने ॥६४॥**

बन्धकीमा भोग्य वस्तु राखिएको भए सँवाब्याज गरेर डबल पुगे सो मूल्य लिएर भएपनि साहूले ती वस्तु फिर्ता दिनू ।

**इति ऋणदानप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत ऋण लेनदेन प्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

## अथ उपनिधिप्रकरणम् (४)

**वासनस्थमनाख्याय हस्तेऽन्यस्य यदर्प्यते ।**
**द्रव्यं तदौपनिधिकं प्रतिदेयं तथैव तत् ॥६५॥**

केही नभनी भाँडो सहितै राख्न दिएको वस्तुलाई उपनिधि भनिन्छ र
यस्ता वस्तु जस्ताको तस्तै फर्काउनु पर्दछ ।

**न दाप्योऽपहृतं तन्तु राजदैविकतस्करैः ।**
**भ्रेषश्चेन्मार्गितेऽदत्ते दाप्यो दण्डञ्च तत्समम् ॥६६॥**

उपनिधि चोरिए वा राजाले लगे दिनु पर्दैन । तर मागेको बेलामा बहाना गरी पछि नासिए
त्यसको मूल्य र त्यति नै दण्ड पनि तिर्नू ।

**आजीवन्स्वेच्छया दण्ड्यो दाप्यस्तं चापि सोदयम् ।**
**याचितान्वाहितन्यासनिक्षेपादिष्वयं विधिः ॥६७॥**



दिनेको आज्ञाबिना उपनिधि चलाउनेलाई न्यायाधिशले पूरा मूल्य र जरिवाना गर्नू । यस्तै नियम
मागिएको, कसैलाई दिनु भनी दिइएको, परिवारबाट लुकाएर वा बताएर
दिएको वस्तुमा पनि जान्नू ।

**इति उपनिधिप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत**
**उपनिधिप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

## अथ साक्षिप्रकरणम् (५)

**तपस्विनो दानशीलाः कुलीनाः सत्यवादिनः ।**
**धर्मप्रधाना ऋजवः पुत्रवन्तो धनान्विताः ॥६८॥**

तपस्वी, दानशील, कुलीन, सत्यवादी, धार्मिक, सज्जन, छोरा भएका, धनी,..।

**त्र्यवराः साक्षिणो ज्ञेयाः श्रौतस्मार्तक्रियापराः ।**
**यथाजाति यथावर्णं सर्वे सर्वेषु वा स्मृताः ॥६९॥**

तथा वेद एवं स्मृति अनुसार चल्ने तीन जना वा (त्यसभन्दा बढी) लाई साछी बनाउनु पर्दछ । साछी सवर्णका वा  अरु जाति वा वर्णका पनि हुन सक्दछन् ।

**स्त्रीबालवृद्धकितव मत्तोन्मत्ताभिशस्तकाः ।**
**रङ्गावतारिपाखण्डि कूटकृद्विकलेन्द्रियाः ॥७०॥**

स्त्री, बालक, वृद्ध, जुवाडे, जँड्याहा, उन्मत्त, अभियुक्त, नौटङ्कीको पेसा भएका, पाखण्डी, कपटी (वा कपटपूर्ण लेख लेख्ने), विकलाङ्ग,..।

**पतिताप्तार्थसंबन्धि सहायरिपुतस्कराः ।**
**साहसी दृष्टदोषश्च निर्धूताद्यास्त्वसाक्षिणः ॥७१॥**

पतित, हितैषी, लेनदेनमा सहभागी भएको, सेवक, शत्रु, तस्कर, दुस्साहसी, दोष देखिएका र बन्धुबान्धवबाट परित्यक्त व्यक्तिलाई साछी बनाइन्न ।

**उभयानुमतः साक्षी भवत्येकोऽपि धर्मवित् ।**
**सर्वः साक्षी सङ्ग्रहणे चौर्यपारुष्यसाहसे ॥७२॥**

वादी र प्रतिवादी दुबै सहमत भएका एक जना धर्मनिष्ठ व्यक्ति मात्र पनि साछी हुन सक्दछ । गोप्य अपराध, चोरी, बलात्कार र जघन्य अपराधमा सबै साछी हुन (वा बस्न) सक्दछन् ।

**साक्षिणः श्रावयेद्वादि प्रतिवादिसमीपगान् ।**
**ये पातककृतॉंल्लोका महापातकिनान्तथा ॥७३॥**

सभासद (न्यायाधिश) ले साछीलाई वादी र प्रतिवादीका सामुन्ने लगी बयान लिनू । जो पापी र महापापी हुन्छन्, जो...।

**अग्निदानाञ्च ये लोका ये च स्त्रीबालघातिनाम् ।**
**स तान्सर्वानवाप्नोति यः साक्ष्यमनृतं वदेत् ॥७४॥**

आगो लगाउँदछन् अनि जो स्त्री वा बालकलाई मार्दछन् त्यस्तालाई लाग्ने सबै पाप झूटो साछी बस्नेलाई लाग्दछ ।

**सुकृतं यत्त्वया किञ्चिज्जन्मान्तरशतैः कृतम् ।**
**तत्सर्वं तस्य जानीहि यं पराजयसे मृषा ॥७५॥**

जुन पुण्य तिमीले सैयौं पूर्वजन्ममा कमाएको छौ, त्यो सबै पुण्य त्यसैको हुन्छ जसलाई तिमीले झूटो बोलेर हराएका छौ ।

**अब्रुवन्हि नरः साक्ष्यं ऋणं सदशबन्धकम् ।**
**राज्ञा सर्वं प्रदाप्यः स्यात्षट्चत्वारिंशकेऽहनि ॥७६॥**



जो साछी बसेर पनि इजलाशमा बोल्दैन, उसँग राजाले दशौं भाग जरिवाना सहित छयालीस दिनभित्र सम्पूर्ण ऋण असूलउपर गर्नू ।

**न ददाति हि यः साक्ष्यं जानन्नपि नराधमः ।**
**स कूटसाक्षिणां पापैस्तुल्यो दण्डेन चैव हि ॥७७॥**

जो नीच व्यक्ति थाहा पाएर पनि साछी बस्दैन त्यस्तो कपटी साछी पाप र दण्डका लागि योग्य हुन्छ ।

**द्वैधे बहूनां वचनं समेषु गुणिनान्तथा ।**
**गुणिद्वैधे तु वचनं ग्राह्यं ये गुणवत्तमाः ॥७८॥**

धेरै साछीको बयान उस्तै भई दोधार भए गुणी साछीको कुरो मान्नू । गुणी साछीमा पनि दोमन भए अधिक गुण भएको साछीको कुरा मान्नू ।

**यस्योचुः साक्षिणः सत्यां प्रतिज्ञां स जयी भवेत् ।**
**अन्यथा वादिनो यस्य ध्रुवस्तस्य पराजयः ॥७९॥**

जसको कुरा सही हो भनेर साछीले भन्दछ उ जित्दछ, जसको कुरालाई साछी गलत हो भन्दछ उ निश्चय नै हार्दछ ।

**उक्तेऽपि साक्षिभिः साक्ष्ये यद्यन्ये गुणवत्तमाः ।**
**द्विगुणा वान्यथा ब्रूयुः कूटाः स्युः पूर्वसाक्षिणः ॥८०॥**

साछीको बयान लिएपछि उसका कुरा गलत हुन् भनी कुनै अर्को उभन्दा गुणी मानिसले भन्दछ भने पहिलो साछीलाई कपटी साछी भनिन्छ ।

**पृथक्पृथग्दण्डनीयाः कूटकृत्साक्षिणस्तथा ।**
**विवादाद्द्विगुणं दण्डं विवास्यो ब्राह्मणः स्मृतः ॥८१॥**

जसले साछीलाई कपटी बनाउँदछ अनि जो साछी कपटी हुन्छ ती प्रत्येकले विवादित विषयमा दोब्बर दण्ड दिनु पर्दछ । यदि उ ब्राह्मण हो भने उसलाई देशबाट निकाला गर्नु पर्दछ ।



**यः साक्ष्यं श्रावितोऽन्येभ्यो निह्नुते तत्तमोवृतः ।**
**स दाप्योऽष्टगुणं दण्डं ब्राह्मणन्तु विवासयेत् ॥८२॥**

जो पहिले साछी बस्न तयार भई पछि कुनै कारणले मान्दैन उसलाई हार्नेले तिर्ने दण्डको आठ गुना बढी दण्ड तिराउनू । ब्राह्मण भए देशनिकाला गर्नू ।

**वर्णिनां हि वधो यत्र तत्र साक्ष्यनृतं वदेत् ।**
**तत्पावनाय निर्वाप्यश्चरुः सारस्वतो द्विजैः ॥८३॥**

साँचो कुरा भन्दा कोही मारिन्छ भने साछीले झूटो बोल्नू । यो दोषबाट हुने पापबाट जोगिन उसले सरस्वतीको नाममा चरु होम गर्नू ।

इति साक्षिप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत साछीप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ लेख्यप्रकरणम् (६)

**यः कश्चिदर्थो निष्णातः स्वरुच्या तु परस्परम् ।**
**लेख्यन्तु साक्षिमत्कार्यं तस्मिन्धनिकपूर्वकम् ॥८४॥**

ऋणको लेनदेनमा सहमति भएपछि साछीको उपस्थितिमा लिखत (तमसुक) बनाई दुवैले सही गरी प्रामाणिक बनाउनू र त्यसमा दिनेको नाम अवश्य लेख्नू ।

**समामासतदर्धाहर्नामजातिस्वगोत्रकैः ।**
**सब्रह्मचारिकात्मीयपितृनामादिचिह्नितम् ॥८५॥**

तमसुकमा लेनदेनको वर्ष, महिना, पक्ष, दिन तथा दुवैको नाम, जाति, गोत्र, वेद शाखा एवं पिताको नाम लेख्नू ।

**समाप्तेऽर्थे ऋणी नाम स्वहस्तेन निवेशयेत् ।**
**मतं मेऽमुकपुत्रस्य यदत्रोपरि लेखितम् ॥८६॥**



अन्तमा ऋणीले पिताको र आफ्नो नाम लेखी उल्लेखित व्यहोरामा म मञ्जुर छु भनी हस्ताक्षर गर्नू ।

**साक्षिणश्च स्वहस्तेन पितृनामकपूर्वकम् ।**
**अत्राहमुकः साक्षी लिखेयुरिति ते समाः ॥८७॥**

साक्षीहरुले पनि स्थान, समय र पिताको नाम लेखी हस्ताक्षर गर्नू । साक्षी जोर संख्याका हुनु पर्दछ ।

**उभयाभ्यर्थितेनैतन्मया ह्यमुकसूनुना ।**
**लिखितं ह्यमुकेनेति लेखकोऽन्ते ततो लिखेत् ॥८८॥**

अन्तमा लिनेदिनेको सहमति र अनुरोधमा मैले यो तमसुक लेखिदिएको हुँ भनी बाबुको नाम सहित लेखनदासले आफ्नो नाम लेख्नू ।

**विनापि साक्षिभिर्लेख्यं स्वहस्तलिखितन्तु यत् ।**
**तत्प्रमाणं स्मृतं लेख्यं बलोपधिकृतादृते ॥८९॥**

कुनै पक्षको दवाब, कर, धोखा र छल बिना लेखिएको शपथ पत्र (तमसुक) छ
भने साछि नभए भनि त्यो प्रामाणिक हुन्छ ।

**ऋणं लेख्यकृतन्देयं पुरुषैस्त्रिभिरेव तु ।**
**आधिस्तु भुज्यते तावद्यावत्तन्न प्रदीयते ॥९०॥**

तमसुक तीन पुस्तासम्म मान्य हुन्छ । तर, उपभोग्य वस्तु बन्धकी राखेर दिइएको
ऋणमा ऋण नतिरेसम्म साहूले सामान उपभोग गर्न सक्दछ ।

**देशान्तरस्थे दुर्लेख्ये नष्टोन्मृष्टे हृते तथा ।**
**भिन्ने दग्धेऽथवा छिन्ने लेख्यमन्यत्तु कारयेत् ॥९१॥**

तमसुक अन्यत्र छुटे, पढ्न नसकिने भए, अक्षर मेटिए, चोरिए, गले, जले वा
च्यातिए अर्को कागज (तमसुक) बनाउनू ।

**संदिग्धलेख्यशुद्धिः स्यात्स्वहस्तलिखितादिभिः ।**
**युक्तिप्राप्तिक्रियाचिह्नसंबन्धागमहेतुभिः ॥९२॥**

तमसुक जाँज गर्नु परेमा त्यो तमसुक लेख्नेले लेखेको अरु अक्षरसँग तमसुकमा लेखिएका
अक्षर भिडाउनू । लेख्दाखेरीको समय, स्थान, वस्तु आदिको जाँच गर्नू, साक्षी बुझ्नू, लेख्नमा
प्रयोग गरिएका वस्तुको जाँच गर्नू र लिनेदिनेको सम्बन्धको बारेमा बिचार गर्नू ।

**लेख्यस्य पृष्ठेऽभिलिखेद्दत्त्वा दत्त्वर्णिको धनम् ।**
**धनी वोपगतं दद्यात्स्वहस्तपरिचिह्नितम् ॥९३॥**

बेलाबेलामा तिरेको साँवाब्याजको ऋणपत्रको पछाडि ऋणीले विवरण
लेख्ने गर्नू र साहूले त्यसमा सही गर्ने गर्नू ।

**दत्त्वर्णं पाटयेल्लेख्यं शुद्धयै वान्यत्तु कारयेत् ।**
**साक्षिमच्च भवेद्यद्वा तद्दातव्यं ससाक्षिकम् ॥९४॥**

ऋण तिरेपछि तमसुकलाई काट्नू, च्यात्नू वा ऋणीलाई फिर्ता दिनू वा
अर्को चुक्ताको कागज गर्नू ।

**इति लेख्यप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत**
**लिखतप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

## अथ दिव्यप्रकरणम् (७)

**तुलाग्न्यापो विषं कोशो दिव्यानीह विशुद्धये ।**
**महाभियोगेष्वेतानि शीर्षकस्थेऽभियोक्तरि ॥९५॥**

जब सत्यतथ्य पत्ता लगाउन अरु उपाय कुनै बाँकी हुँदैन तब अभियुक्तलाई तुला, अग्नि, जल, विष र कोश-यी पाँच उपाय (दिव्य शपथ) ले शपथ खुवाउनू ।

**रुच्या वान्यतरः कुर्यादितरो वर्तयेच्छिरः ।**
**विनापि शीर्षकात्कुर्यान्नृपद्रोहेऽथ पातके ॥९६॥**

अपसमा सहमती गरी अरु कुनै प्रतिवादीले पनि यी दिव्य शपथ गर्न सक्दछ । वादी यदि धन लिएर वा प्रतिवादीलाई कुनै शारीरिक दण्ड दिएर मान्दछ भने यो दिव्य शपथ गर्न आवश्यक हुँदैन । राजद्रोह र महापापमा भने हारजित नहुँदा पनि यी दिव्य गराउन सकिन्छ ।

**सचैलं स्नातं आहूय सूर्योदय उपोषितम् ।**
**कारयेत्सर्वदिव्यानि नृपब्राह्मणसंनिधौ ॥९७॥**



शपथ लिनेलाई पहिलो दिन उपवास बसाई भोलिपल्ट सवस्त्र नुहाउन लगाई बोलाउनू र त्यसपछि सभासद्, ब्राह्मण र राजाका सामु यी सबै खालका शपथ खुवाउनु (दिव्य गराउनु) पर्दछ ।

**तुलास्त्रीबालवृद्धान्ध पङ्गुब्राह्मणरोगिणाम् ।**
**अग्निर्जलं वा शूद्रस्य यवाः सप्त विषस्य वा ॥९८॥**

स्त्री, बालक (सोह्र वर्ष मुनिका), वृद्ध (असी वर्ष माथिका), अन्धा, लुला, ब्राह्मण र रोगीलाई तुला-शपथ खुवाउनू । क्षत्रियलाई अग्नि-शपथ, वैश्यलाई जल-शपथ र शूद्रलाई सात यव जति विष दिएर शपथ खुवाउनू ।

**नासहस्राद्धरेत्फालं न विषं न तुलां तथा ।**
**नृपार्थेष्वभिशापे च वहेयुः शुचयः सदा ॥९९॥**

हजार पणभन्दा कम रकमका विवादमा अग्नि, विष, तुला र जलको शपथ नखुवाउनू । तर, राजा-द्रोह र महापापको अभियोगमा भने जतिसुकै रकमको विवादमा पनि शुद्ध भई यी शपथ खुवाउनु पर्दछ ।

**तुलाधारणविद्वद्भिरभियुक्तस्तुलाश्रितः ।**
**प्रतिमानसमीभूतो रेखां कृत्वावतारितः ॥१००॥**

जोख्नमा जो कुशल छ उसले शपथ लिनेलाई दराजुमा हाली यव बराबर
तौल लिई चिनो लगाउनू र उसलाई तराजूबाट तल उतार्नू ।

**त्वं तुले सत्यधामासि पुरा देवैर्विनिर्मिता ।**
**तत्सत्यं वद कल्याणि संशयान्मां विमोचय ॥१०१॥**

अनि तराजुलाई "हे तराजु ! तिमी सत्यको ठाउँ हौ, देवताले सृष्टिको शुरुमा तिमीलाई बनाए ।
यसैले हे कल्याणी ! तिमी साँचो कुरा बताइ देउ, मलाई यो आशङ्काबाट पार लगाई देउ... ।

**यद्यस्मि पापकृन्मातस्ततो मां त्वमधो नय ।**
**शुद्धश्चेद्गमयोर्ध्वं मां तुलां इत्यभिमन्त्रयेत् ॥१०२॥**

हे माता ! यदि म पापी भए मलाई तलतिर लैजाउ, साँचो भए माथि लैजाउ" भनी प्रार्थना गर्नू ।



**करौ विमृदितव्रीहेर्लक्षयित्वा ततो न्यसेत् ।**
**सप्ताश्वत्थस्य पत्राणि तावत्सूत्रेण वेष्टयेत् ॥१०३॥**

अग्निको शपथ लिनेका हातमा पहिले जौ हालेर माड्न लगाउनू । उसका हातमा जे जे चिह्न
देखिन्छन् तिनलाई रङ्गाउनू । यसपछि उसका हातमा पीपलका सात वटा पात राखिदिनू र काँचो
धागोले सात पटक बाँधिदिनू ।

**त्वमग्ने सर्वभूतानां अन्तश्चरसि पावक ।**
**साक्षिवत्पुण्यपापेभ्यो ब्रूहि सत्यं कवे मम ॥१०४॥**

यसपछि "हे अग्नि ! हजुर सबै जीवका अन्तस्करणमा बास गर्नु हुन्छ, शुद्धकर्ता हुनुहुन्छ, यसैले
हाम्रा पापपुण्य हेरी साछीसरह साँचो साँचो देखाई दिनु हवस्" भनी प्रार्थना गर्नू ।

**तस्येत्युक्तवतो लौहं पञ्चाशत्पलिकं समम् ।**
**अग्निवर्णं न्यसेत्पिण्डं हस्तयोरुभयोरपि ॥१०५॥**

शपथ लिनेले यति भनिसके पछि, उसका दुवै हातमा पचास पल तौल भएका फलामका तताएर रातो पारिएका डल्ला राखिदिनू ।

**स तमादाय सप्तैव मण्डलानि शनैर्व्रजेत् ।**
**षोडशाङ्गुलकं ज्ञेयं मण्डलं तावदन्तरम् ॥१०६॥**

यसपछि उ बिस्तारै बिस्तारै सात मण्डल हिँडोस् । सोह्र अमलको एक मण्डल हुन्छ र हरेक मण्डलको बीचमा फरक पनि यति नै हुन्छ ।

**मुक्त्वाग्निं मृदितव्रीहिरदग्धः शुद्धिमाप्नुयात् ।**
**अन्तरा पतिते पिण्डे संदेहे वा पुनर्हरेत् ॥१०७॥**

(त्यति हिँडेपछि) त्यो डल्लो त्यही फाली फेरी त्यो हातले जौ मलोस् । कहिँ पोलेको रहेनछ भने शुद्ध हुन्छ । डल्लो बीचमै खसे अथवा हात पोलेको नपोलेको शङ्का भए फेरी यो कार्य गराउनू ।

**सत्येन माभिरक्ष त्वं वरुणेत्यभिशाप्य कम् ।**
**नाभिदघ्नोदकस्थस्य गृहीत्वोरू जलं विशेत् ॥१०८॥**



" हे वरुण ! सत्यतापूर्वक मलाई रक्षा गर" भन्ने मन्त्रले जललाई प्रार्थना गरी, नाइटोसम्म डुब्ने गरी जलमा उभिएको मानिसको तिघ्रा समातेर (अभियुक्त) जलमा डुबोस् ।

**समकालमिषुं मुक्तमानीयान्यो जवी नरः ।**
**गते तस्मिन्निमग्नाङ्गं पश्येच्चेच्छुद्धिमाप्नुयात् ॥१०९॥**

ठिक यही बेला बाण हान्नू र कुनै छिटो दौडने मानिसलाई त्यो बाण लिन पठाउनू । जबसम्म उ बाण लिएर आउँदैन तबसम्म शपथ खाने मानिस पानीमा डुबि नै रहन सके उ शुद्ध वा निर्दोष मानिन्छ ।

**त्वं विष ब्रह्मणः पुत्रः सत्यधर्मे व्यवस्थितः ।**
**त्रायस्वास्मादभीशापात्सत्येन भव मेऽमृतम् ॥११०॥**

"हे विष ! तिमी ब्रह्माका पुत्र हौ  र सत्यधर्ममा स्थापित भएका छौ । मलाई यो कलङ्कबाट जोगाऊ । सबै कुरा जानी मेरा लागि तिमी अमृतसमान बन" ।

**एवमुक्त्वा विषं शार्ङ्गं भक्षयेद्धिमशैलजम् ।**
**यस्य वेगैर्विना जीर्येच्छुद्धिं तस्य विनिर्दिशेत् ॥१११॥**

यसो भनी शपथ लिनेलाई सिङमा हालिएको हिमपर्वतको विष खान दिनू । विषको कुनै प्रभाव नदेखिई पचाए उ शुद्ध (निर्दोष) हो भनी जान्नू ।

**देवानुग्रान्समभ्यर्च्य तत्स्नानोदकमाहरेत् ।**
**संस्राव्य पाययेत्तस्माज्जलन्तु प्रसृतित्रयम् ॥११२॥**

उग्र देवता (दुर्गा, सूर्य आदि) लाई विधिपूर्वक पूजा गरी तिनलाई नुहाएको जल (निर्मल) लेराउनू । त्यो जललाई “तोय त्वं प्राणिनां प्राणः” आदि मन्त्रले अभिमन्त्रित गरी अर्को भाँडामा हाली “सत्येन माभिरक्ष त्वं वरुण” भन्ने मन्त्रले पुनः अभिमन्त्रित गरी तीन पसर जल शपथ लिनेलाई पियाउनू ।

**अर्वाक् चतुर्दशादह्नो यस्य नो राजदैविकम् ।**
**व्यसनञ्जायते घोरं स शुद्धः स्यान्न संशयः ॥११३॥**



उसलाई चौध दिनभित्र राजा वा दैवबाट कुनै आपद नआए उ शुद्ध हो भनी निश्चय गर्नू ।

इति दिव्यप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत दिव्य-शपथ प्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ दायविभागप्रकरणम् (८)

**विभागश्चेत्पिता कुर्यादिच्छया विभजेत्सुतान् ।**
**ज्येष्ठं वा श्रेष्ठभागेन सर्वे वा स्युःसमांशिनः ॥११४॥**

अंश लाउने बाबु छोराहरुलाई इच्छा अनुसार अंश दिन स्वतन्त्र छ । जेठाक आदि दिन पनि सक्दछ, सबैलाई बराबर भाग लगाउन पनि सक्दछ ।

**यदि कुर्यात्समानांशान् पत्न्यः कार्याः समांशिकाः ।**
**न दत्तं स्त्रीधनं यासां भर्त्रा वा श्वशुरेण वा ॥११५॥**

बाबुले सबैलाई बराबर अंश भाग लगाउने हो भने लोग्ने र ससुराबाट स्त्रीधन नपाउने बुहारीलाई पनि समान भाग दिनु पर्दछ ।

**शक्तस्यानीहमानस्य किञ्चिद्दत्त्वा पृथक् क्रिया ।**
**न्यूनाधिकविभक्तानां धर्म्यः पितृकृतः स्मृतः ॥११६॥**



समर्थ भई लिन नचाहने छोरालाई पनि करले केही न केही दिएर छुट्याउनू । बाबुले खुशीले घटीबढी भाग लगाई दिएको अंश यदि धर्मसम्मत छ भने त्यो कुनै पनि परिस्थितिमा बदल्न सकिँदैन ।

**विभजेरन्सुताः पित्रोरूर्ध्वं रिक्थमृणं समम् ।**
**मातुर्दुहितरः शेषमृणात् ताभ्य ऋतेऽन्वयः ॥११७॥**

अंशबण्डा नभई बाबुआमा बितेमा सम्पत्ति र ऋण दुवै सबै छोराले बराबर भाग लगाउनू । आमाको धनमा केवल छोरीको अधिकार हुन्छ । छोरी नभए छोराले बराबर भाग लगाउनू ।

**पितृद्रव्याविरोधेन यदन्यत्स्वयमर्जितम् ।**
**मैत्रमौद्वाहिकञ्चैव दायादानन्न तद्भवेत् ॥११८॥**
**क्रमादभ्यागतं द्रव्यं हृतमप्युद्धरेत्तु यः ।**
**दायादेभ्यो न तद्दद्याद्विद्यया लब्धमेव च ॥११९॥**

पैत्रिक धन प्रयोग नगरी कमाएको धन, मित्रले दिएको धन, दाइजो, अर्काले पचाइसकेको तर आफ्नो बुद्धिले फिर्ता ल्याएको पैत्रिक धन र आफ्नो विद्या, शक्ति र प्रभावले

कमाएको धन अंशबण्डा गर्नु पर्दैन ।

**सामान्यार्थसमुत्थाने विभागस्तु समः स्मृतः ।**
**अनेकपितृकाणां तु पितृतो भागकल्पना ॥१२०॥**

सगोलको पेशाको लाभमा समान भाग लाग्दछ । नातीलाई बाजेको सम्पत्तिमा बाबुले पाउने अंशमध्ये जति भाई छन् ती सबैलाई बराबर भाग लाग्छ ।

**भूर्या पितामहोपात्ता निबन्धो द्रव्यमेव वा ।**
**तत्र स्यात्सदृशं स्वाम्यं पितुः पुत्रस्य चैव हि ॥१२१॥**

जुन जमिन, दैनिक ज्याला वा कमाई र धन हजुरबाले कमाएको हुन्छ त्यसमा,
पिता र पुत्र दुवैको बराबर हक-अधिकार हुन्छ ।

**विभक्तेषु सुतो जातो सवर्णायां विभागभाक् ।**
**दृश्याद्वातद्विभागः स्यादायव्ययविशोधितात् ॥१२२॥**

पिता जीवित छँदै अंशबण्डा भइसकेको अवस्थामा आफ्नै जातकी माताले अर्को छोरो पाइन् भने उसले आफ्ना आमाबाबुको भाग पाउँदछ । (अथवा पिता बितेपछि दाजुभाईले आपसमा भाग लगाउनू । अंशबण्डा पछि बाउबाटै गर्भ बोकाइएको तर तिनलाई थाहा नभएको कुनै पुत्र आमाबाट जन्मिए) आयव्यय हिसाब गरी बाँकी रकमबाट त्यो पुत्रलाई पनि भाग दिनू ।

**पितृभ्यां यस्य यद्दत्तं तत्तस्यैव धनं भवेत् ।**
**पितुरूर्ध्वं विभजतां माताप्यंशं समं हरेत् ॥१२३॥**

मातापिताले अंशमा जसलाई जे दिएका छन् त्यसमा त्यसैको अधिकार हुन्छ । बाबुको शेषपछि अंश लगाइए आमालाई पनि छोरासरह अंश दिनु पर्दछ ।

**असंस्कृतास्तु सँस्कार्या भ्रातृभिः पूर्वसंस्कृतैः ।**
**भगिन्यश्च निजादंशाद्दत्त्वांशं तु तुरीयकम् ॥१२४॥**

अंशबण्डा अघि अविवाहित भाईबहिनीको विवाह भाग छुट्ट्याउनू, सानै भए बराबर खर्च व्यहोर्ने वा पाएको अंशको चार भागको एक भाग दिने शर्तमा अंश लगाउनू ।

**चतुस्त्रिद्व्येकभागाः स्युर्वर्णशो ब्राह्मणात्मजाः ।**
**क्षत्रजास्त्रिद्व्येकभागा विड्जास्तु द्व्येकभागिनः ॥१२५॥**

ब्राह्मणका ब्राह्मणी आदि पत्नीबाट जन्मिएका पुत्रहरूले वर्णक्रम अनुसार चार, तीन, दुई र एक भाग लिनू । क्षत्रियका क्षत्रिया आदि पत्नीबाट जन्मने पुत्रले क्रमशः तीन, दुई र एक भाग लिनू । वैश्यका वैश्या आदि स्त्रीबाट जन्मने पुत्रले दुई र एक भाग लिनू ।

**अन्योन्यापहृतं द्रव्यं विभक्ते यत्तु दृश्यते ।**
**तत्पुनस्ते समैरंशैर्विभजेरन्निति स्थितिः ॥१२६॥**

अंशबण्डा हुँदा थाहा नभएको र पछि थाहा भएको धन फेरी सबै भाईमा बराबर भाग लगाउनू ।

**अपुत्रेण परक्षेत्रे नियोगोत्पादितः सुतः ।**
**उभयोरप्यसौ रिक्थी पिण्डदाता च धर्मतः ॥१२७॥**

नियोग विधिबाट जन्मिएको पुत्रको बाबु र गर्भाधान गराउने बाबु दुबैको सम्पत्तिमा र पिण्डदानमा अधिकार हुन्छ ।



**औरसो धर्मपत्नीजस्तत्समः पुत्रिकासुतः ।**
**क्षेत्रजः क्षेत्रजातस्तु स गोत्रेणेतरेण वा ॥१२८॥**

सवर्ण पत्नीबाट जन्मिएको औरस हुन्छ र सवर्ण पत्नीबाट छोरी नै छोरी जन्मी छोरीबाट जन्मिएको पुत्र अर्थात नाती औरस पुत्र समान हुन्छ । सगोत्रीबाट नियोग विधिले जन्मिएकोलाई 'क्षेत्रज' वा 'क्षेत्रजात पुत्र' भनिन्छ ।

**गृहेप्रच्छन्न उत्पन्नो गूढजस्तु सुतः स्मृतः ।**
**कानीनः कन्यकाजातो मातामहसुतो मतः ॥१२९॥**

लोग्ने भएकै घरमा परपुरुषको गोप्य संसर्गबाट जन्मिने पुत्र 'गूढज' हुन्छ । अविवाहित कन्याले गोप्यरुपले जन्माउने र मामा घरको हजूरबाबुको मानिने पुत्र 'कानीन' हुन्छ ।

**अक्षतायां क्षतायां वा जातःपौनर्भवःसुतः ।**
**दद्यान्माता पिता वा यं स पुत्रो दत्तको भवेत् ॥१३०॥**

क्षता-अक्षता विवाहिताले सवर्णमा दोश्रो विवाहगरी जन्मिएको पुत्र 'पौनर्भव' हुन्छ ।
खुशी वा बाध्यताले अरु कसैलाई दिइएको पुत्र 'दत्तक' हुन्छ ।

**क्रीतश्च ताभ्यां विक्रीतः कृत्रिमः स्यात्स्वयङ्कृतः ।**
**दत्तात्मा तु स्वयंदत्तो गर्भे विन्नः सहोढजः ॥१३१॥**

माता वा पिता वा दुबैले धन लिएर बेचिएको पुत्र 'क्रीत' हुन्छ । मातापिता नभएको बालकलाई इच्छाले ल्याई बनाइएको पुत्र 'कृत्रिम' हुन्छ । आफैंले कसैलाई मातापिता बनाई पुत्रको रुपमा समर्पित गर्ने पुत्र 'दत्तात्मा' हुन्छ । गर्भवतीलाई विवाहगरी जन्मिने पुत्र 'सहोढज' हुन्छ ।

**उत्सृष्टो गृह्यते यस्तु सोपविद्धो भवेत्सुतः ।**
**पिण्डदोंऽशहरश्चैषां पूर्वाभावे परः परः ॥१३२॥**

मातापिताद्वारा परित्यक्त र अन्यद्वारा ग्रहित पुत्र 'अपविद्ध' हुन्छ । बाह्र थरी पुत्रहरुलाई प्रथमको अभावमा दोश्रो-तेश्रोको क्रमशः अंश र पिण्डदानमा अधिकार हुन्छ ।

**सजातीयेष्वयं प्रोक्तस्तनयेषु मया विधिः ।**
**जातोऽपि दास्यां शूद्रेण कामतोंऽशहरो भवेत् ॥१३३॥**

यो समान जातीमा मात्र लागु हुन्छ । शूद्रले आफ्नो दासीपुत्रलाई अंश दिन सक्छ ।

**मृते पितरि कुर्युस्तं भ्रातरस्त्वर्धभागिकम् ।**
**अभ्रातृको हरेत्सर्वं दुहितृणां सतादृते ॥१३४॥**

पिता बितेपछि शूद्र भाईहरुले आनो दासीपत्निको भाईलाई आफूले पाउने अंशको आधा भाग दिनू । शूद्रको विवाहिता पत्नीको छोरा नभई छोरीछोरी मात्र भएमा र ती छोरीको पनि विवाह पछि छोरा नभएमा शूद्रको सम्पत्तिमा दासीपुत्रको अधिकार हुन्छ ।

**पत्नी दुहितरश्चैव पितरौ भ्रातरस्तथा ।**
**तत्सुता गोत्रजा बन्धुशिष्यसब्रह्मचारिणः ॥१३५॥**
**एषामभावे पूर्वस्य धनभागुत्तरोत्तरः ।**
**स्वर्यातस्य ह्यपुत्रस्य सर्वेवर्णेष्वयं विधिः ॥१३६॥**

कुनै पनि किसिमका पुत्र नहुनेको मृत्युपछि उसको सम्पत्तिमा क्रमशः पत्नी, छोरी, मातापिता, दाजुभाई, भतिजा, सगोत्री, नातेदार, शिष्य र ब्रह्मचारीको (एउटा नहुँदा अर्कोको) अधिकार हुन्छ । यो नियम सबै वर्णका लागि समान हुन्छ ।

**वानप्रस्थयतिब्रह्मचारिणां रिक्थभागिनः ।**
**क्रमेणाचार्यसच्छिष्यधर्मभ्रात्रेकतीर्थिनः ॥१३७॥**

वानप्रस्थ, सन्यासी र ब्रह्मचारीको सम्पत्तिको उत्तराधिकारी क्रमशः धर्मभाई, सन्यासी, सहपाठी, घनिष्ठ मित्र, उत्तम शिष्य र मनपर्ने आचार्य हुन्छन् ।

**संसृष्टिनस्तु संसृष्टी सोदरस्य तु सोदरः ।**
**दद्यादपहरेच्चांशं जातस्य च मृतस्य च ॥१३८॥**

भिन्न भएपछि संयुक्त लगानीमा गरेको कुनै पेसामा, लगानीकर्ता र तिनका पुत्रको अधिकार हुन्छ । निसन्तान मरे बाँकी साझेदारको र पछि पुत्र जन्मे उसको पनि अधिकार कायम हुन्छ ।

**अन्योदर्यस्तु संसृष्टी नान्योदर्यो धनं हरेत् ।**

**असंसृष्टयपि वाऽऽदद्यात्संसृष्टो नान्यमातृजः ॥१३९॥**

सौतेलो भाई साझेदार भए लाभांश दिनू, नत्र पर्दैन । सौतेलेलो अरु साझेदार भाईको भाग पनि लिन हुँदैन ।

**क्लीबोऽथ पतितस्तज्जः पङ्गुरुन्मत्तको जडः ।**
**अन्धोऽचिकित्स्यरोगाद्या भर्तव्याः स्युर्निरंशकाः ॥१४०॥**

नपुंसक, पतित, पतित-पुत्र, पङ्गु, पागल, मूर्ख, अन्धो र दीर्घरोगी दाजुभाईलाई अंश नदिनू (एक्लै नराख्नू), तिनलाई आफैंसँग राखी हेरचाह गर्नू ।

**औरसाः क्षेत्रजास्त्वेषां निर्दोषा भागहारिणः ।**
**सुताश्चैषां प्रभर्तव्या यावद्वै भर्तृसात्कृताः ॥१४१॥**

यस्ता दोष नहुने औरस र क्षेत्रज दाजुभाई अंशका हकदार हुन्छन् भने दोष हुनेका छोराछोरीहरुको विवाह नभएसम्म वा आत्मनिर्भर नभएसम्म हेरचाह गर्नु पर्दछ ।

**अपुत्रा योषितश्चैषां भर्तव्याः साधुवृत्तयः ।**
**निर्वास्या व्यभिचारिण्यः प्रतिकूलास्तथैव च ॥१४२॥**

यस्ता कमजोरका श्रीमतिलाई पनि सदाचारी भए हेरचाह र दुराचारी भए घरबाट निकाल्नु पर्दछ ।

**पितृमातृपतिभ्रातृदत्तमध्यग्न्युपागतम् ।**
**आधिवेदनिकाद्यञ्च स्त्रीधनं परिकीर्तितम् ॥१४३॥**

बाबुआमा, पति वा भाईले दिएको, विवाहमा नातेदारले दिएको र सौता हाल्दा खुशी पार्न पतिले दिएको धनलाई स्त्रीधन भनिन्छ ।

**बन्धुदत्तं तथा शुल्कमन्वाधेयकमेव च ।**
**अतीतायामप्रजसि बान्धवास्तदवाप्नुयुः ॥१४४॥**

माइती कुटुम्बले दिएको र आसुर विवाहको शुल्क पनि स्त्रीधन हो । निसन्तान स्त्रीको मृत्युपछि स्त्रीधन पतिले र पति नभए देवरादिले लिने अधिकार हुन्छ ।



**अप्रजस्त्रीधनं भर्तुर्ब्राह्मादिषु चतुर्ष्वपि ।**
**दुहितृणां प्रसूता चेच्छेषेषु पितृगामि तत् ॥१४५॥**

ब्राह्म, दैव, आर्ष र प्राजापत्य विधिले विवाहिताको स्त्रीधनमा पतिको र अन्य विधिमा पिताको अधिकार हुन्छ तर छोरी भए उसैको अधिकार हुन्छ ।

**दत्त्वा कन्यां हरन्दण्ड्यो व्ययं दद्याच्च सोदयम् ।**
**मृतायां दत्तमादद्यात् परिशोध्योभयव्ययम् ॥१४६॥**

टिकाटालो पछि कन्यापक्षले कुरो नमाने वरपक्षले गरेको खर्च ब्याज र जरिवाना सहित असुल गर्नू । कन्या बितेमा दुवैतिरको खर्च हिसाब गरी बढी खर्च हुनेलाई तिर्नू ।

**दुर्भिक्षे धर्मकार्ये च व्याधौ सम्प्रतिरोधके ।**
**गृहीतं स्त्रीधनं भर्ता न स्त्रियै दातुमर्हति ॥१४७॥**

अकालमा, व्यवहार टार्न, दीर्घरोगको उपचार गर्न र जरिवाना तिर्न लिइएको स्त्रीधन पतिले फर्काउनु पर्दैन ।

**अधिविन्नस्त्रियै दद्यादाधिवेदनिकं समम् ।**
**न दत्तं स्त्रीधनं यस्यै दत्ते त्वर्ध्वं प्रकल्पयेत् ॥१४८॥**

जेठी नमरी अर्की बिहे गर्नेले स्त्रीधन नपाएकी जेठीलाई दोश्रो विवाहमा हुने खर्चको आधा स्त्रीधन दिई खुशी पार्नू ।

**विभागनिह्नवे ज्ञातिबन्धुसाक्ष्यभिलेखितैः ।**
**विभागभावना ज्ञेया गृहक्षेत्रैश्च यौतकैः ॥१४९॥**

अनुपस्थितिको अंशबण्डा नमान्ने भाईलाई त्यसबेलामा उपस्थित हुने आफन्त, साक्षी, लिखत, छुट्ट्याइएका भवन, खेत, दाइजो आदि देखाई सन्तुष्ट पार्नू ।

**इति दायविभागप्रकरणम्**

✷

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत अंशबण्डा प्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

✷

## अथ सीमाविवादप्रकरणम् (९)

**सीम्नो विवादे क्षेत्रस्य सामन्ताः स्थविरादयः ।**
**गोपाः सीमाकृषाणा ये सर्वे च वनगोचराः ॥१५०॥**

सीमाको विवादमा गाउँमा भएका जमिन्दार वा सरदार, पाका मानिस, गोठाला, सीमानामा भएका जग्गामा खेतीपाती गर्ने मानिस र वनतिर घुमफिर गरिरहने मानिस (वनपाले आदि)..।

**नयेयुरेते सीमानं स्थलाङ्गारतुषद्रुमैः ।**
**सेतुवल्मीकनिम्नास्थि चैत्याद्यैरुपलक्षिताम् ॥१५१॥**

यी सबैले राजालाई ढिस्को, अँगार, भुष, रुख, पुल, धमिराको गोलो, खाल्टो, हाड, चैत्य (चौतारो आदि ढुङ्गा चिनेर बनाएका संरचना) आदि मार्फत सीमाको चिनो बताउनू ।

**सामन्ता वा समग्रामाश्चत्वारोऽष्टौ दशापि वा ।**
**रक्तस्रग्वसनाः सीमां नयेयुः क्षितिधारिणः ॥१५२॥**



यस्ता कुनै चिनो नपाइए सम्बन्धित गाउँमा बस्दै आएका चार, आठ वा दश मानिस रातो माला र वस्त्र लगाई टाउकामा माटाका टुक्रा लिएर जुन ठाउँलाई सीमा निर्धारण गर्दछन्, त्यही नै सीमा हो भनी निश्चित गर्नू ।

**अनृते तु पृथग्दण्ड्या राज्ञा मध्यमसाहसम् ।**
**अभावे ज्ञातृचिह्नानां राजा सीम्नः प्रवर्तिता ॥१५३॥**

यसलाई नमान्ने हरेकलाई राजाले पाँच सय चालीस पण जरिवाना गर्नू । सीमा छुट्याउन त्यस्ता मानिस छैनन् भने राजा आफैँले उपस्थित भई सीमा निर्धारण गरी दिनू ।

**आरामायतनग्रामनिपानोद्यानवेश्मसु ।**
**एष एव विधिर्ज्ञेयो वर्षाम्बुप्रवहादिषु ॥१५४॥**

बाटिका, ठूला भवन, गाउँ, पानीघाट, बगैंचा, घर आदिको साँध-सीमानाको विवादमा तथा खहरे, खोल्सा, कुला आदि वर्षाको पानी बहने स्थलको विवादमा पनि यही विधि गर्नू ।

**मर्यादायाः प्रभेदे च सीमातिक्रमणे तथा ।**

**क्षेत्रस्य हरणे दण्डा अधमोत्तममध्यमाः ॥१५५॥**

धर्मसीमा (खेतबारीका बीचमा रहेको सार्वजनिक स्थल), सीमा र जग्गा मिचिएमा राजाले अधम, उत्तम र मध्यम साहसको दण्ड दिनू ।

**न निषेध्योऽल्पबाधस्तु सेतुः कल्याणकारकः ।**
**परभूमिं हरन्कूपः स्वल्पक्षेत्रो बहूदकः ॥१५६॥**

कुनै मानिस अर्काको जग्गामा पुल, कुवा आदि बनाउन चाहन्छ भने जग्गाधनीले विरोध नगर्नू किनकी यसले हानी कम र फाइदा बढी हुन्छ ।

**स्वामिने योऽनिवेद्यैव क्षेत्रे सेतुं प्रवर्तयेत् ।**
**उत्पन्ने स्वामिनो भोगस्तदभावे महीपतेः ॥१५७॥**

कसैले जग्गाधनीको अनुमती नलिई अरुको जग्गामा पुल बनाउँदछ भने त्यो पुलबाट हुने लाभ जग्गाधनीले भोग गर्नू । जग्गाधनी नभए राजाले भोग गर्नू, बनाउनेलाई कुनै हालतमा पनि भोग गर्न नदिनू ।



**फालाहतमपि क्षेत्रं न कुर्याद्यो न कारयेत् ।**
**स प्रदाप्यः कृष्टफलं क्षेत्रमन्येन कारयेत् ॥१५८॥**

कसैको खेतबारी खनजोत गर्दछु भनी एकदुई पटक अलिअलि खनजोत गरेर छाड्दछ र अरुलाई पनि खनजोत गर्न दिँदैन भने त्यो खेतबारी उसँग खोसेर अरुलाई खनजोत गर्न दिनू । पहिले खनजोत गर्न दिइएकोसँग त्यहाँ उब्जनी हुनेजति अनाज लिनू ।

इति सीमाविवादप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत सीमा-विवाद प्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ स्वामिपालविवादप्रकरणम् (१०)

**माषानष्टौ तु महिषी सस्यघातस्य कारिणी ।**
**दण्डनीया तदर्धन्तु गौस्तदर्धमजाविकम् ॥१५९॥**

भैंसी, गाई र भेडाबाख्राले अरुको बाली नष्ट गरे क्रमशः आठ, चार र दुई माष जरिवाना गर्नू ।

**भक्षयित्वोपविष्टानां यथोक्ताद् द्विगुणो दमः ।**
**सममेषां विवीतेऽपि खरोष्ट्रं महिषीसमम् ॥१६०॥**

बाली खाई त्यहीँ बसेको भए डबल जरिवाना गर्नू । भैंसी आदि पसे पनि बाली नष्ट गरेकै मानिन्छ र गधा र ऊँटको पनि भैंसी सरह नै जरिवाना हुन्छ ।

**यावत्सस्यं विनश्येत्तु तावत्स्यात्क्षेत्रिणः फलम् ।**
**गोपस्ताड्यश्च गोमी तु पूर्वोक्तं दण्डमर्हति ॥१६१॥**

चरिचरन नजिकै नष्ट पारेको बालीको मात्रा अनुसार पशु धनीले क्षतिपूर्ति तिर्नू ।

गोठालोलाई पिट्नू ।

**पथि ग्रामविवीतान्ते क्षेत्रे दोषे न विद्यते ।**
**अकामतः कामचारे चौरवद्दण्डमर्हति ॥१६२॥**

चरिचरन सँगैको वा गाउँ नजिकै बाटोमा पर्ने खेतमा अचानक पशु छिरेमा कुनै दोष नहुने हुनाले जरिवाना तिर्नु पर्दैन तर जानीजानी पशु हुल्नेलाई चाहिँ चोरेको बराबर दण्ड तिराउनू ।

**महोक्षोत्सृष्टपशवः सूतिकागन्तुकादयः ।**
**पालो येषां न ते मोच्या दैवराजपरिप्लुताः ॥१६३॥**

साँढे, यज्ञमा चढाइएको पशु, नचोखिएकी लैनु गाई, बथानबाट एक्लिएको, त्यागिएको, रोगी र अङ्गभङ्ग भएको पशुले बाली खाए दण्ड नदिनू ।

**यथार्पितान्पशून्गोपः सायम्प्रत्यर्पयेत्तथा ।**
**प्रमादमृतनष्टाँश्चप्रदाप्यः कृतवेतनः ॥१६४॥**

गाईवस्तु बिहान गनेर चराउन लगी बेलुका गनेर फर्काउनू । गोठालोको असावधानीले पशु हराए वा मारिए उसलाई दिइने तलबबाट हराएको पशुको मूल्य असुल्नू ।

**पालदोषविनाशे तु पाले दण्डो विधीयते ।**
**अर्धत्रयोदशपणः स्वामिनो द्रव्यमेव च ॥१६५॥**

चरिचरन-नियम नमानेर पशु क्षति भए पशु धनीलाई गोठालोबाट उचित मूल्य तिराउनू र साडे तेह्र पण जरिवाना गर्नू ।

**ग्राम्येच्छया गोप्रचारो भूमिराजवशेन वा ।**
**द्विजस्तृणैधः पुष्पाणि सर्वतः सर्वदा हरेत् ॥१६६॥**

गाऊँलेको सहमति र राजाज्ञामा पशु चराउने जमिनको व्यवस्था मिलाउनू । द्विजलाई कसैको खेतबारीबाट (नसोधी) बाल्न दाउरा र पूजा गर्न फूल लिने अधिकार छ ।

**धनुःशतं परीणाहो ग्रामे क्षेत्रान्तरं भवेत् ।**
**द्वे शते खर्वटस्य स्यान्नगरस्य चतुःशतम् ॥१६७॥**



गाउँको चारैतिर सय धनुष बाँभो जग्गा छाडी खेतबारी बनाउनू । हरेक चार सय गाउँका सीमानामा वा हरेक पहाडी गाउँका बीचमा दुई सय धनुष तथा हरेक शहरका बीचमा चार सय धनुष खाली जग्गा राख्नू ।
(एक धनुमा चार हात वा ३.३१ देखि ५.२८ फिट हुन्छ) ।

इति स्वामिपालविवादप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत पशुपालन-विवाद प्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ अस्वामिविक्रयप्रकरणम् (११)

**स्वं लभेतान्यविक्रीतं क्रेतुर्दोषोऽप्रकाशिते ।**
**हीनाद्रहो हीनमूल्ये बेलाहीने च तस्करः ॥१६८॥**

आफ्नो सामान कसैकोमा बिक्री भएको देखे सबै कुरा बताई किन्नू । गुपचुप सामान किन्नु गलत हो । वस्तुको अवास्तविक स्वामीसँग, कममूल्यमा र कुबेलामा सामान किन्नु चोर्नु सरह हो ।

**नष्टापहृतमासाद्य हर्तारं ग्राहयेन्नरम् ।**
**देशकालातिपत्तौ च गृहीत्वा स्वयमर्पयेत् ॥१६९॥**

आफ्नो हराएको सामान कसैसँग देखिए उसलाई समाउनू, भाग्न खोजे जनसमुदायको सहयोग लिनू र समाएपछि अधिकारी कहाँ जिम्मा लगाउनू ।

**विक्रेतुर्दर्शनाच्छुद्धिः स्वामी द्रव्यं नृपो दमम् ।**
**क्रेता मूल्यमवाप्नोति तस्माद्यस्तस्य विक्रयी ॥१७०॥**



सामानको स्रोत खुलाउनेलाई नसमाउनू । चोरिएको सामान वास्तविक धनीलाई दिलाउनू र किन्नेलाई बेच्नेबाट मूल्य उठाइदिनू ।

**आगमेनोपभोगेन नष्टं भाव्यमतोऽन्यथा ।**
**पञ्चबन्धो दमस्तस्य राज्ञे तेनाविभाविते ॥१७१॥**

सामान दाबी गर्नेले प्रमाण पेश गर्नू, नगर्नेलाई सामानको मूल्यको पाँच भागको एक भाग दण्ड तिराउनू ।

**हृतं प्रनष्टं यो द्रव्यं परहस्तादवाप्नुयात् ।**
**अनिवेद्य नृपे दण्ड्यः स तु षण्णवतिं पणान् ॥१७२॥**

आफ्नो चोरिएको सामान प्रहरीमा जाहेरी नगरी सोझै अर्काको हातबाट लिनेलाई छयान्नब्बे पण दण्ड तिराउनू ।

**शोल्किकैः स्थानपालैर्वा नष्टापहृतमाहृतम् ।**

**अर्वाक्संवत्सरात्स्वामी हरेत परतो नृपः ॥१७३॥**

अधिकारीले, हराएको सामान खोजी लेराएको एक वर्षसम्म पनि कसैले दाबी नगरे त्यो सामान सरकारी कोषमा दाखिला गर्नू ।

**पणानेकशफे दद्याच्चतुरः पञ्च मानुषे ।**
**महिषोष्ट्रगवां द्वौ द्वौ पादं पादमजाविके ॥१७४॥**

हराएका एकखुरे जनावर, मानिस, भैंसी, ऊँट, गाई आदि जनावर भेटिएमा धनीले सरकारलाई मूल्यको एक चौथाई पारिश्रमिक तिर्नु ।

**इति अस्वामिविक्रयविवादप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत आफ्नो स्वामित्वमा नरहेका सामानको किनबेच सम्बन्धी विवाद प्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

## अथ दत्ताप्रदानिकप्रकरणम् (१२)

**स्वं कुटुम्बाविरोधेन देयं दारसुतादृते ।**
**नान्वये सति सर्वस्वं यच्चान्यस्मै प्रतिश्रुतम् ॥१७५॥**

कुटुम्बको विरोधको दान नगर्नू, पुत्र र स्त्री दान नगर्नू तथा छोरा नाती भएपछि सबैथोक दानमा नसिद्ध्याउनू । एउटालाई दिन्छु भनेको कुरा (अर्कोलाई) दान नदिनू ।

**प्रतिग्रहः प्रकाशः स्यात्स्थावरस्य विशेषतः ।**
**देयं प्रतिश्रुतश्चैव दत्त्वा नापहरेत्पुनः ॥१७६॥**

सबैका सामु दान लिनू (गोप्यरूपमा नगर्नू), विशेषतः भूमिदान गोप्यरूपमा गर्दै नगर्नू । दिन्छु भनी बचन नफेर्नू र दिएको दान फिर्ता नलिनू ।

इति दत्ताप्रदानिकप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत दान सम्बन्धी कुरा लेखिएको दत्ताप्रदानिकप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ क्रीतानुशयप्रकरणम् (१३)

**दशैकपञ्चसप्ताहमासत्र्यहार्धमासिकम् ।**
**बीजायोवाह्यरत्नस्त्रीदोह्यपुंसां परीक्षणम् ॥१७७॥**

अनाजको बीउ, फलाम, परिवहन योग्य पशु, रत्न, दासी, लैनु पशु र दासको क्रमशः दश, एक, पाँच, सात, तीस, तीन र पन्ध्र दिन परीक्षण काल हुन्छ (यति दिनभित्र फर्काउन सकिन्छ) ।

**अग्नौ सुवर्णमक्षीणं रजते द्विपलं शते ।**
**अष्टौ त्रपुणि सीसे च ताम्रे पञ्च दशायसि ॥१७८॥**

तताउनाले सुन घट्दैन, चाँदी दुई, पीतल र सीसा आठ, तामा पाँच र फलाम दश प्रतिशत कम हुन्छ ।

**शते दशपला वृद्धिरौर्णे कार्पाससौत्रिके ।**
**मध्ये पञ्चपला वृद्धिःसूक्ष्मे तु त्रिपला मता ॥१७९॥**

धेरै मोटो धागोले कपास र सूतको लुगा बनाउँदा दश, ठीकैकोले पाँच र मसिनुले बनाउँदा तीन प्रतिशत वजन बढ्दछ ।

**कार्मिके रोमबद्धे च त्रिंशद्भागः क्षयो मतः ।**
**न क्षयो न च वृद्धिश्च कौशेये वाल्कलेषु च ॥१८०॥**

कपडामा बुट्टा भर्दा वा किनारामा रौं बाँध्दा तीस प्रतिशत सूत घट्दछ तथा रेशम र रुखका बोक्राको कपडा बनाउँदा केही घटबढ हुँदैन ।

**देशं कालं च भोगं च ज्ञात्वा नष्टे बलाबलम् ।**
**द्रव्याणां कुशला ब्रूयुर्यत्तद्दाप्यमसंशयम् ॥१८१॥**

कुनै वस्तु नष्ट भई विवाद भएमा राजाले देश, काल, उपभोग र वस्तुको महत्व हेरी विशेषज्ञको परामर्शमा कटौती स्वीकार गरी शिल्पकारलाई छुटको अनुमति दिनू ।

इति क्रीतानुशयप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत किनबेच सम्बन्धी कुरा लेखिएको क्रीतानुशय प्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथाभ्युपेत्याशुश्रूषाप्रकरणम् (१४)

**बलाद्दासीकृतश्चौरैर्विक्रीतश्चापि मुच्यते ।**
**स्वामिप्राणप्रदो भक्त त्यागात्तन्निष्क्रयादपि ॥१८२॥**

बलजफ्ती दास बनाइएको र मानवतस्करबाट बेचिएको त्यो मानिस, जसले आफ्नो मालिकको ज्यान जोगाएको हुन्छ, जसले मालिकको ऋण तिरेको हुन्छ र जसले आफू जतिमा बेचिएको हो त्यति पैसा दिएको हुन्छ, उ दासताबाट मुक्त हुन्छ ।

**प्रव्रज्यावसितो राज्ञो दास आमरणान्तिकम् ।**
**वर्णानामानुलोम्येन दास्यं न प्रतिलोमतः ॥१८३॥**

सन्यासाश्रमबाट भ्रष्ट भई प्रायश्चित नगर्ने व्यक्ति आजीवन राजाको दास हुन्छ ।
निम्न वर्णहरू उच्च वर्णका दास हुन्छन्, उल्टो हुँदैन ।

**कृतशिल्पोऽपि निवसेत्कृतकालं गुरोर्गृहे ।**
**अन्तेवासी गुरुप्राप्तभोजनस्तत्फलप्रदः ॥१८४॥**



गुरुका आश्रममा निश्चित अवधिसम्म रहने गरी करारमा बसेको शिष्यले अध्ययन सकेपनि त्यहाँ बस्नू र गुरुलाई खाना खुवाउनु । कुनै शिल्प-व्यवसाय आदि गरी कमाएको धन गुरुलाई समर्पण गर्नू ।

इति अभ्युपेत्याशुश्रूषाप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत दासदासी सम्बन्धी कुरा लेखिएको अभ्युपेत्याशुश्रूषा प्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ संविद्व्यतिक्रमप्रकरणम् (१५)

**राजा कृत्वा पुरे स्थानं ब्राह्मणान्न्यस्य तत्र तु ।**
**त्रैविद्यं वृत्रिमद्ब्रूयात्स्वधर्मः पाल्यतामिति ॥१८५॥**

राजाले सम्पन्न दरबारमा तीन जना वेदका विद्वान ब्राह्मणलाई पेटपाल्ने चिन्ताबाट मुक्त गरी धर्ममा पूरा ध्यान दिने गरी तयारी अवस्थामा राख्नू ।

**निजधर्माविरोधेन यस्तु सामयिको भवेत् ।**
**सोऽपि यत्नेन संरक्ष्यो धर्मो राजकृतश्च यः ॥१८६॥**

तलब खाने यी ब्राह्मणले पनि धर्म अनुकुल सामूहिक धर्म (सार्वजनिक हीत) र राज-निर्दिष्ट धर्मको प्रयत्नपूर्वक रक्षा गर्नू ।

**गणद्रव्यं हरेद्यस्तु सम्विदं लङ्घयेच्च यः ।**
**सर्वस्वहरणं कृत्वा तं राष्ट्राद्विप्रवासयेत् ॥१८७॥**



सार्वजनिक सम्पत्ति हिनामिना गर्ने र सामुदायिक व्यवस्था उल्लङ्घन गर्नेलाई सर्वस्वसहित देश निकाला गर्नू ।

**कर्तव्यं वचनं सर्वैः समूहहितवादिनाम् ।**
**यस्तत्र विपरितः स्यात्स दाप्यः प्रथमं दमम् ॥१८८॥**

गणका सबै सदस्यले सार्वजनिक हीतका बारेमा सोच्नू र त्यससम्बन्धी निर्णयको पालना गर्नू । हीत विपरित बोल्नेलाई प्रथम साहसिक दण्ड दिनू ।

**समूहकार्य आयातान्कृतकार्यान्विसर्जयेत् ।**
**स दानमानसत्कारैः पूजयित्वा महीपतिः ॥१८९॥**

राजाले पनि जनप्रतिनिधिको कुरा सुन्नू, तिनको सम्मान गर्नू र सन्तुष्ट पारी बिदा गर्नू ।

**समूहकार्यप्रहितो यल्लभेत् तदर्पयेत् ।**
**एकादशगुणं दाप्यो यद्यसौ नार्पयेत्स्वयम् ॥१९०॥**

समूहलाई प्राप्तहुने उपहार आदि समूहमै दिनू, नदिनेलाई त्यसको
एघार गुणा जरिवाना तिराउनू ।

**धर्मज्ञाः शुचयोऽलुब्धा भवेयुः कार्यचिन्तकाः ।**
**कर्तव्यं वचनं तेषां समूहहितवादिनाम् ॥१९१॥**

सार्वजनिक पदमा श्रुतिस्मृतिका ज्ञाता, शुद्ध आचारका, निर्लोभी र राम्रो सोच राख्नेलाई नियुक्त गर्नू । समूहको हितका कुरा गर्नेबाट प्राप्त हुने सुझावलाई महत्व दिनू ।

**श्रेणिनैगमपाखण्डिगणानामप्ययं विधिः ।**
**भेदञ्चैषान्नृपो रक्षेत्पूर्ववृत्तिञ्च पालयेत् ॥१९२॥**

शिल्पकार, व्यापारी, एकवेदज्ञ, वेदलाई प्रमाण नमान्ने र हतियार निर्माण गरी जीवन चलाउने आदि सबैलाई यही नियम लागू हुन्छ ।

॥ इति अभ्युपेत्याशुश्रूषाप्रकरणम् ॥

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत अभ्युपेत्याशुश्रूषा प्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ वेतनादानप्रकरणम् (१६)

**गृहीतवेतनः कर्म त्यजन्द्विगुणमावहेत् ।**
**अगृहीते समं दाप्यो भृत्यै रक्ष्य उपस्करः ॥१९३॥**

बैना लिई काम नगर्ने वा अधुरो छोड्नेलाई दिएको बैनाको दोबर र गर्दछु भनेर नगर्नेलाई तोकिएको पारिश्रमिक बराबर दण्ड तिराउनू । नोकरले स्वामीका उपकरणको स्याहारसम्भार गर्नू ।

**दाप्यस्तु दशमं भागं वाणिज्यपशुसस्यतः ।**
**अनिश्चित्य भृतिं यस्तु कारयेत्स महीक्षिता ॥१९४॥**

तलब नतोकी पशुपालन-खेती आदि काम लगाउनेबाट लाभको दशमांश श्रमिकलाई दिन लगाउनू ।

**देशं कालं च योऽतीयाल्लाभं कुर्याच्च योऽन्यथा ।**
**तत्र स्यात्स्वामिनश्छन्दोऽधिकन्देयं कृतेऽधिके ॥१९५॥**



उचित स्थान र समय नसोची व्यापार गरी नोक्सान पुऱ्याउने नोकरको तलबका सम्बन्धमा निर्णय गर्न स्वामी स्वतन्त्र हुन्छ तर विचार पुऱ्याउनेलाई बढी तलब दिनू ।

**यो यावत्कुरुते कर्म तावत्तस्य तु वेतनम् ।**
**उभयोरप्यसाध्यं चेत्साध्ये कुर्याद्यथाश्रुतम् ॥१९६॥**

सुम्पिएको काम बाध्यताले पूरा गर्न नसके, सके जति कामको पारिश्रमिक दिनू । तर, पछि आएर काम सके पूरा पारिश्रमिक दिनू ।

**अराजदैविकं नष्टं भाण्डं दाप्यस्तु वाहकः ।**
**प्रस्थानविघ्नकृच्चैव प्रदाप्यो द्विगुणां भृतिम् ॥१९७॥**

विवाह आदिमा आपद् नपरी सामान क्षती गरे वा " म गर्दछु" भनी कुनै काम नगरे वा काममा कुनै बाधा पुऱ्याए उसलाई दिने ज्यालाको दोबर दण्ड तिराउनू ।

**प्रक्रान्ते सप्तमं भागं चतुर्थं पथि संत्यजन् ।**

भृतिमर्धपथे सर्वां प्रदाप्यस्त्याजकोऽपि च ॥१९८॥

यात्रा आदिमा बीचैमा अलपत्र पार्नेलाई ज्यालाको सात भागको एक भाग र आधा बाटोमा छोड्नेलाई चार भागको एक भाग काटेर ज्याला दिनू । यसो गर्न उक्साउने नोकरलाई केही दिनु पर्दैन ।

॥ इति वेतनादानप्रकरणम् ॥

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत ज्याला, तलब आदि कुरा उल्लेख भएको वेतनादानप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ द्यूतसमाह्वयप्रकरणम् (१७)

**ग्लहे शतिकवृद्धेस्तु सभिकः पञ्चकं शतम् ।**
**गृह्णीयाद्धूर्तकितवादितराद्दशकं शतम् ॥१९९॥**

जुवा चलाउनेले जित्नेसँग दश र हार्नेसँग जुवामा दाउमा लगाएको धनको पाँच प्रतिशत शुल्क लिनू ।

**स सम्यक्पालितो दद्याद्राज्ञे भागं यथाकृतम् ।**
**जितमुद्ग्राहयेज्जेत्रे दद्यात्सत्यं वचः क्षमी ॥२००॥**

नियमले जुवाघर चलाउनेले आयको केही अंश राजालाई दिनू, जित्नेलाई जितेको रकम दिनू र क्षमाशील र सत्यनिष्ठ बनी विश्वास जित्नू र सद्भाव बनाई राख्नू ।

**प्राप्ते नृपतिना भागे प्रसिद्धे धूर्तमण्डले ।**
**जितं ससभिके स्थाने दापयेदन्यथा न तु ॥२०१॥**

कर दिने जुवाघरका विवादमा राजाले सञ्चालकको भनाइलाई साक्षी मानी हार्नेबाट जित्नेलाई सार्वजनिकरुपमा धन दिलाउनू । कर नतिरे मतलब नगर्नू ।



**द्रष्टारो व्यवहाराणां साक्षिणश्च त एव हि ।**
**राज्ञा सचिह्नं निर्वास्याः कूटाक्षोपधिदेविनः ॥२०२॥**

जुवा खेल्ने सरह खेलेको हेर्ने र सुझाव दिनेलाई जुवाडे हुन्छ । खेलमा कपटीलाई शरीरमा कुकुरको चिह्न डाम्नू ।

**द्यूतमेकमुखं कार्यं तस्करज्ञानकारणात् ।**
**एष एव विधिर्ज्ञेयः प्राणिद्यूते समाह्वये ॥२०३॥**

जुवामा कपट पत्ता लगाउन चलाख जुवाडेलाई अध्यक्ष बनाउनू । जनावरको खेलमा पनि यही नियम गर्नू ।

इति द्यूतसमाह्वयप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत जुवासम्बन्धी कुरा उल्लेख भएको द्यूतसमाह्वयप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ वाक्पारुष्यप्रकरणम् (१८)

**सत्यासत्यान्यथास्तोत्रैर्न्यूनाङ्गेन्द्रियरोगिणाम् ।**
**क्षेपं करोति चेद्दण्ड्यः पणानर्धं त्रयोदशान् ॥२०४॥**

अपाङ्गआदिलाई निन्दागरी मनमा चोट पुर्‍याउनेलाई साढे तेह्र पण दण्ड तिराउनू ।

**अभिगन्तास्मि भगिनीं मातरं वा तवेति ह ।**
**शपन्तं दापयेद्राजा पञ्चविंशतिकं दमम् ॥२०५॥**

आफूलाई कसैको आमा वा दीदिबहिनीको उप-पति (जार) भनी उसलाई गालीगरी
अपमान गर्नेलाई पच्चीस पण दण्ड तिराउनू ।

**अर्धोऽधमेषु द्विगुणः परस्त्रीषूत्तमेषु च ।**
**दण्डप्रणयनं कार्यं वर्णजात्युत्तराधरैः ॥२०६॥**



निम्न वर्णकालाई गाली गरे आधा र उच्चवर्णकालाई गाली गरे दोब्बर जरिबाना
तिराउनू । दण्ड तिराउँदा वर्ण र जात हेर्नू ।

**प्रातिलोम्यापवादेषु द्विगुणत्रिगुणा दमाः ।**
**वर्णानामानुलोम्येन तस्मादर्धार्धहानितः ॥२०७॥**

माथ्लोले तल्लो वर्णलाई गाली गरे आधा र तल्लोले माथ्लो वर्णलाई
गाली गरे दण्ड क्रमशः एक, दुई र तीन गुणा हुन्छ ।

**बाहुग्रीवानेत्रसक्थिविनाशे वाचिके दमः ।**
**शत्यस्तदर्धिकः पादनासाकर्णकरादिषु ॥२०८॥**

पाखुरा, जिब्रो, आँखा र हाडमा हानी गर्ने धम्की दिए सय पण तथा नाक, कान,
हात र गोडामा हानी गर्ने धम्की दिए पचास पण दण्ड तिराउनू ।

**अशक्तस्तु वदन्नेवं दण्डनीयः पणान्दश ।**
**तथा शक्तःप्रतिभुवं दाप्यः क्षेमाय तस्य तु ॥२०९॥**

अशक्तको धम्कीलाई उसको पागलपन सम्झी दश पण मात्र दण्ड तिराउनू ।

**पतनीयकृते क्षेपे दण्डो मध्यमसाहसः ।**
**उपपातकयुक्ते तु दाप्यः प्रथमसाहसम् ॥२१०॥**

कसैलाई अती अपमानित र पतित गर्ने तथा ब्रह्महत्या आदि महापापको दोष लगाउनेलाई मध्यम साहसको एवं गोहत्या आदि उपपापको आरोप लगाउनेलाई प्रथम साहसको दण्ड तिराउनू ।

**त्रैविद्यनृपदेवानां क्षेप उत्तमसाहसः ।**
**मध्यमो जातिपूगानां प्रथमो ग्रामदेशयोः ॥२११॥**

तीनै वेदका पारङ्गत, राजा र देवतालाई आक्षेप लगाएमा उत्तमसाहस, जाति र समूदायलाई आक्षेप लगाउनेलाई मध्यम साहस र गाऊँ वा देशलाई आरोप लगाउनेलाई प्रथम साहस दण्ड गर्नू ।

**इति वाक्पारुष्यप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत गालीगलोच सम्बन्धी कुरा उल्लेख भएको वाक्पारुष्यप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

## अथ दण्डपारुष्यप्रकरणम् (१९)

**असाक्षिकहते चिह्नैर्युक्तिभिश्चागमेन च ।**
**द्रष्टव्यो व्यवहारस्तु कूटचिह्नकृते भयात् ॥२१२॥**

एकान्तमा कसैले नदेख्ने गरी कुटिएको मुद्दामा चिह्नहरु हेर्नू तर यादराख्नु की चिह्न नक्कली पनि हुन सक्दछ ।

**भस्मपङ्करजःस्पर्शे दण्डो दशपणः स्मृतः ।**
**अमेध्यपार्ष्णिनिष्ठ्यूतस्पर्शने द्विगुणस्ततः ॥२१३॥**

कसैलाई खरानी, हिलो र धूलो फ्याँकेमा दश पण तथा शरीरजन्य विकार फ्याँकेमा वा कुर्कुचाले हिर्काएमा बीस पण जरिवाना गर्नू ।

**समेष्वेवं परस्त्रीषु द्विगुणस्तूत्तमेषु च ।**
**हीनेष्वर्धदमो मोहमदादिभिरदण्डनम् ॥२१४॥**



समान जातमा माथिको नियम लागू हुन्छ तर उत्तमवर्ण र परस्त्रीलाई यसो गरे दण्ड दुई गुणा र निम्न वर्णलाई गरे आधा हुन्छ । भूलले वा नशामा गरिएको भए माफ हुन्छ ।

**विप्रपीडाकरं छेद्यमङ्गमब्राह्मणस्य तु ।**
**उद्गूर्णे प्रथमो दण्डः संस्पर्शे तु तदर्धिकः ॥२१५॥**

ब्राह्मण आदिको अङ्गभङ्ग हुने गरी दुःख पुऱ्याउने निम्नवर्णको त्यो अङ्ग काट्नू । उच्च वर्णलाई मारे प्रथम साहस र हतियारले छोए त्यसको आधा दण्ड तिराउनू ।

**उद्गूर्णे हस्तपादे तु दशविंशतिकौ दमौ ।**
**परस्परन्तु सर्वेषां शस्त्रे मध्यमसाहसः ॥२१६॥**

समान वर्णकोलाई मारपिट गर्न हात उठाए दश, गोडा उठाए बीस र हतियार प्रयोग गरे मध्यम साहसको दण्ड दिनू ।

**पादकेशांशुककरोल्लुञ्चनेषु पणान्दश ।**
**पीडाकर्षांशुकावेष्टपादाध्यासे शतं दमः ॥२१७॥**

समान वर्णकालाई गोडा, कपाल र कपडा समाती झ्याँगलझुँगल पारे दश तथा दुःख दिँदै कपडामा बेरी लात्तले भकुर्नेलाई सय पण जरिवाना गर्नू ।

**शोणितेन विना दुःखं कुर्वान्काष्ठादिभिर्नरः ।**
**द्वात्रिंशतं पणान्दण्ड्यो द्विगुणं दर्शनेऽसृजः ॥२१८॥**

रगत निकाली लौरेले मरणासन्न हुने गरी पिटेमा बत्तीस पण र पिटी रगत निकालेमा त्यसको दोब्बर जरिबाना गर्नू ।

**करपाददतो भङ्गे छेदने कर्णनासयोः ।**
**मध्यो दण्डो व्रणोद्भेदे कृतकल्पहते तथा ॥२१९॥**

हात, गोडा र दाँत भाँचे; नाक, कान काटे; घाऊ फोरे वा पिटीपिटी बेहोस बनाए मध्यम साहसको दण्ड दिनू ।

**चेष्टाभोजनवाग्रोधे नेत्रादिप्रतिभेदने ।**

**कन्धराबाहुसक्थ्नाञ्च भङ्गे मध्यमसाहसः ॥२२०॥**

हिँडडुल, खानपान र बोल्न रोक लगाए वा आँखा, जिब्रो आदि फोरे-काटे वा जिब्रो, पाखुरा र तिघ्रा भाँचे मध्यम साहसको दण्ड दिनू ।

**एकं घ्नतां बहूनाञ्च यथोक्ताद् द्विगुणो दमः ।**
**कलहापहृतं देयं दण्डश्च द्विगुणस्ततः ॥२२१॥**

एउटालाई धेरैले मिलेर पिटेमा डबल जरिवाना गर्नू, खोसेको सामान फिर्ता गराउनू र खोसेबापत दुई गुणा जरिवाना तिराउनू ।

**दुःखमुत्पादयेद्यस्तु स समुत्थानजं व्ययम् ।**
**दाप्यो दण्डञ्च यो यस्मिन्कलहे समुदाहृतः ॥२२२॥**

मारपिट गर्नेले उपचार खर्च व्यहोर्नु पर्दछ र झगडाको तोकिएको दण्ड पनि तिर्नु पर्दछ ।

**अभिघाते तथा खेदे भेदे कुड्यावपातने ।**

**पणान्दाप्यः पञ्च दश विंशतिं तदद्व्ययन्तथा ॥२२३॥**

पर्खाल तोडफोड गरे, प्वाल पारे वा भत्काए क्रमशः पाँच, दश र बीस पण
तिराउनू तथा मर्मत खर्च पनि भराउनू ।

**दुःखोत्पादि गृहे द्रव्यं क्षिपन्प्राणहरन्तथा ।**
**षोडशाद्यः पणान्दाप्यो द्वितीयो मध्यमं दमम् ॥२२४॥**

अर्काको घरमा दुःख दिन काँडा, मशानको हाड आदि राख्नेलाई सोह्र पण र विष
आदिले मार्न खोज्नेलाई मध्यम साहस तिराउनू ।

**दुःखे च शोणितोत्पादे शाखाङ्गच्छेदने तथा ।**
**दण्डः क्षुद्रपशूनां तु द्विपणप्रभृतिः क्रमात् ॥२२५॥**

साना जनावरलाई पिटे, मारे, रगत निकाले र सिङ आदि काटे
क्रमशः दुई, चार, छ र आठ पण तिराउनू ।



**लिङ्गस्य छेदने मृत्यौ मध्यमो मूल्यमेव च ।**
**महापशूनामेतेषु स्थानेषु द्विगुणो दमः ॥२२६॥**

साना जनावरको लिङ्ग काटे वा मारे मध्यम साहसको र ठूला जनावरका मर्मस्थलमा चोट
पुऱ्याए जनावरको मूल्यको दोब्बर जरिवाना तिराउनू ।

**प्ररोहिशाखिनां शाखास्कन्धसर्वविदारणे ।**
**उपजीव्यद्रुमाणां च विंशतेर्द्विगुणो दमः ॥२२७॥**

कोपिला लागेको हाँगा, आजीविका दिने फलफूलका हाँगा र रुखै काट्नेलाई क्रमशः बीस,
चालीस र असी पण तिराउनू ।

**चैत्यश्मशानसीमासु पुण्यस्थाने सुरालये ।**
**जातद्रुमाणां द्विगुणो दमो वृक्षे च विश्रुते ॥२२८॥**

धार्मिकस्थल, मसान, सिमाना वा पवित्रस्थानमा उम्रेका रुखविरुवा
काट्नेलाई अरु स्थानको भन्दा दोब्बर तिराउनू ।

गुल्मगुच्छक्षुपलताप्रतानौषधिवीरुधाम् ।
पूर्वस्मृतादर्धदण्डः स्थानेषूक्तेषु कर्तने ॥२२९॥

यी स्थानमा उम्रेका साना लता (मालती), गुच्छा, फैलने लहरा (करवीर), ठूला लहरा (अंगूर), सोभ्मो बढ्ने लहरा, वनस्पति र जडिबूटी काट्नेलाई रुख काटेको आधा दण्ड तिराउनू ।

इति दण्डपारुष्यप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत मारपिट आदि सम्बन्धी कुरा उल्लेख भएको दण्डपारुष्यप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ साहसप्रकरणम् (२०)

**सामान्यद्रव्यप्रसभहरणात्साहसं स्मृतम् ।**
**तन्मूल्याद् द्विगुणो दण्डो निह्नवे तु चतुर्गुणः ॥२३०॥**

अर्काको सामान बलजफ्ती खोस्नुलाई साहस भनिन्छ र यस्तो गर्नेलाई वस्तुको मूल्यको दोब्बर जरिवाना गर्नू । अपराध कबुल नगरे चौगुना तिराउनू ।

**यः साहसं कारयति स दाप्यो द्विगुणं दमम् ।**
**यश्चैवमुक्त्वाहं दाता कारयेत्स चतुर्गुणम् ॥२३१॥**

साहस गर्न अभिप्रेरित गर्नेलाई साहस गर्नेको भन्दा दोब्बर
र गल्ती नमाने आठ गुणा दण्ड तिराउनू ।

**अर्घ्याक्षेपातिक्रमकृद्भ्रातृभार्याप्रहारकः ।**
**सन्दिष्टस्याप्रदाता च समुद्रगृहभेदकृत् ॥२३२॥**



आचार्य आदि मान्यजनलाई भूटो दोष लगाउने, भाईबुहारी पिट्ने, तोकिएको व्यक्तिसम्म सन्देश (वा सामान) नपुऱ्याउनेलाई र घर फोर्नेलाई पचास पण दण्ड तिराउनू ।

**सामन्तकुलिकादीनामपकारस्य कारकः ।**
**पञ्चशत्पणिको दण्ड एषामिति विनिश्चयः ॥२३३॥**

सँधियार वा दाजुभाईको नोक्सान गर्नेलाई पचास पण दण्ड तिराउनू ।

**स्वच्छन्दं विधवागामी विक्रुष्टे नाभिधावकः ।**
**अकारणे च विक्रोष्टा चण्डालश्चोत्तमान्पृशेत् ॥२३४॥**

थाहा पाई पाई विधवालाई गमन गर्ने, समर्थ भएर पनि कसैको गुहारमा मद्दत नगर्नेलाई, बिनाकारण गुहार माग्नेलाई, उच्च जातलाई छुने चाण्डाललाई,...।

**शूद्रः प्रव्रजितानाञ्च दैवे पित्र्ये च भोजकः ।**
**अयुक्तं शपथं कुर्वन्नयोग्यो योग्यकर्मकृत् ॥२३५॥**

श्राद्ध वा यज्ञमा शूद्र र सन्यासीलाई खुवाउनेलाई, भूटो किरिया खानेलाई, वर्णविरुद्धको कार्यगर्नेलाई,...।

**वृषक्षुद्रपशूनाञ्च पुंस्त्वस्य प्रतिघातकृत् ।**
**साधारणस्यापलापी दासीगर्भविनाशकृत् ॥२३६॥**

(पशु धनीको अनुमती नलिई) बहर-बोको आदि सुमर्नेलाई, सानातिना वस्तु (तर धेरैको स्वामित्व भएको) दमपच पार्ने (वा लुकाउने) लाई, दासीको गर्भपात गराउनेलाई,..।

**पितृपुत्रस्वसृभ्रातृदम्पत्याचार्यशिष्यकाः ।**
**एषामपतितान्योन्यत्यागी च शतदण्डभाक् ॥२३७॥**

तथा निर्दोष बाबु, छोरा, दिदीबहिनी, भाई, पति, पत्नी, आचार्य र शिष्यलाई अकारण त्याग्नेलाई सय पण तिराउनू ।

**वसानस्त्रीन्पणान्दण्ड्यो नेजकस्तु परांशुकम् ।**

**विक्रयावक्रयाधानयाचितेषु पणान्दश ॥२३८॥**

धुन दिएका कपडा धोबीले आफैं लगाए तीन तथा बेचे, भाडामा दिए, बन्धकी राखे वा आफन्तले माग्दा दिए दश पण जरिवाना गर्नू ।

**पितापुत्रविरोधे तु साक्षिणं त्रिपणे दमः ।**
**अन्तरे च तयोर्यः स्यात्तस्याप्यष्टगुणो दमः ॥२३९॥**

बाउछोराको विवादमा साछी बस्नेलाई तीन पण जरिवाना गर्नू । मध्यस्थकर्तालाई चौबीस पण जरिवाना गर्नू ।

**तुलाशासनमानानां कूटकृन्नाणकस्य च ।**
**एभिश्च व्यवहर्ता यः स दाप्यो दममुत्तमम् ॥२४०॥**

तराजुमा गडबडी गर्ने, राजाज्ञाको मनमानी अर्थ लगाउने, तराजुको पल्लामा बदमासी गर्ने र नक्कली पैसा चलाउनेलाई उत्तम साहसको दण्ड गर्नू ।

**अकूटं कूटकं ब्रूते कूटं यश्चाप्यकूटकम् ।**
**स नाणकपरीक्षी तु दाप्य उत्तमसाहसम् ॥२४१॥**

असलीलाई नक्कली र नक्कलीलाई सक्कली भन्ने मुद्रा जाँजकीलाई उत्तम साहस दण्ड गर्नू ।

**भिषिङ्मिथ्याचरन्दण्ड्यस्तिर्यक्षु प्रथमं दमम् ।**
**मानुषे मध्यमं राजपुरुषेषूत्तमं दमम् ॥२४२॥**

नजानीकनै : पशुपक्षीको औषधी गरे प्रथम, मनुष्यको औषधी गरे मध्यम र राजपुरुषको औषधी गरे उत्तम साहस दण्ड गर्नू ।

**अबध्यं यश्च बध्नाति बद्धं यश्च प्रमुञ्चति ।**
**अप्राप्तव्यवहारं च स दाप्यो दममुत्तमम् ॥२४३॥**

निर्दोषलाई बाँध्ने र अपराधीलाई मुद्दाको छिनोफानो नभई छोड्नेलाई उत्तम साहस दण्ड दिनू ।

**मानेन तुलया वापि योऽशमष्टमकं हरेत् ।**



**दण्डं स दाप्यो द्विशतं वृद्धौ हानौ च कल्पितम् ॥२४४॥**

तौलमा चलाखी गरी आठौं भाग खान पल्केकालाई दुई सय पण र धेरथोर वस्तु चोर्नेलाई वस्तुको मूल्य अनुरुप दण्ड गर्नू ।

**भेषजस्नेहलवणगन्धधान्यगुडादिषु ।**
**पण्येषु प्रक्षिपन्हीनं पणान्दाप्यस्तु षोडश ॥२४५॥**

लोभले औषधी, तरल पदार्थ, नुन, धान र सुगन्ध आदिमा मिसावट गर्नेलाई सोह्र पण जरिवाना तिराउनू ।

**मृच्चर्ममणिसूत्रायः काष्ठवल्कलवाससाम् ।**
**अजातौ जातिकरणे विक्रेयाष्टगुणो दमः ॥२४६॥**

कमसल माटो, छाला, मणि, कपडा, फलाम, काठ र बोक्राका कपडालाई राम्रो भनी बेच्नेलाई मूल्यको आठ दोब्बर तिराउनू ।

**समुद्गपरिवर्तं च सारभाण्डञ्च कृत्रिमम् ।**
**आधानं विक्रयं वापि नयतो दण्डकल्पना ॥२४७॥**
**भिन्ने पणे च पञ्चाशत्पणे तु शतमुच्यते ।**
**द्विपणे द्विशतो दण्डो मूल्यवृद्धौ च वृद्धिमान् ॥२४८॥**

छोपीएको वस्तुलाई हातको सफाई गरी एउटाको अर्कै बताई वा नक्कली कस्तूरीलाई सक्कली बताई बेच्ने वा धितो राख्नेलाई वस्तुको मूल्य अनुसार एक पण पनि नजाने भए पचास पण, एक पण जाने भए सय पण र दुई पण जाने भए दुई सय पण गरी सय गुणा दण्ड तिराउनू ।

**संभूय कुर्वतामर्घं सम्बाधं कारुशिल्पिनाम् ।**
**अर्घस्य ह्रासं वृद्धिं वा जानतो दम उत्तमः ॥२४९॥**

राजाले तोकेको कमबढी तलब थाहा पाएर पनि धोबी, शिल्पकार आदिलाई आफूखुशी तलब दिने व्यापारीलाई उत्तम साहस दण्ड गर्नू ।

**संभूय वणिजां पण्यमनर्घेणोपरुन्धताम् ।**
**विक्रीणतां वा विहितो दण्ड उत्तमसाहसः ॥२५०॥**



आयातीत वस्तु रोक्ने वा बढी मूल्यमा वस्तु बेच्नेलाई उत्तम साहस दण्ड गर्नू ।

**राजनि स्थाप्यते योऽर्घः प्रत्यहं तेन विक्रयः ।**
**क्रयो वा निःस्रवस्तस्माद्वणिजां लाभकृत्स्मृतः ॥२५१॥**

ब्यापारीले सरकारले तोकेको मूल्यमै वस्तु किनबेच गर्नु र त्यसबाट आउने आयलाई नाफा मान्नु पर्दछ ।

**स्वदेशपण्ये तु शतं वणिग्गृह्णीत पञ्चकम् ।**
**दशकं पारदेश्ये तु यः सद्यः क्रयविक्रयी ॥२५२॥**

स्वदेशी सामान किनी तुरुन्तै बेच्नेले पाँच र विदेशी सामान बेच्ने ब्यापारीले दश प्रतिशत नाफा लिनू ।

**पण्यस्योपरि संस्थाप्य व्ययं पण्यसमुद्भवम् ।**
**अर्घोऽनुग्रहकृत्कार्यः क्रेतुर्विक्रेतुरेव च ॥२५३॥**

राजाले पनि बिक्रीयोग्य आयातीत वस्तुको मूल्यमा आयात खर्च र व्यापारीको श्रममूल्य आदि जोडी बिक्रीमूल्य तोक्नू ।

**इति साहसप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत विभिन्न अपराध सम्बन्धी कुरा उल्लेख भएको साहसप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

# अथ विक्रीयासंप्रदानप्रकरणम् (२१)

**गृहीतमूल्यं यः पण्यं क्रेतुर्नैव प्रयच्छति ।**
**सोदयं तस्य दाप्योऽसौ दिग्लाभं वा दिगागते ॥२५४॥**

पैसा लिई सामान नदिने बिक्रेताबाट ब्याज सहित पैसा फिर्ता गराउनू । विदेशी क्रेता भए किनिएको वस्तुको विक्रीबाट हुने लाभ पनि दिलाई दिनू ।

**विक्रीतमपि विक्रेयं पूर्वक्रेतर्यगृह्णति ।**
**हानिश्चेत्क्रेतृदोषेण क्रेतुरेव हि सा भवेत् ॥२५५॥**

किन्ने निश्चय गरी सामान नकिन्ने क्रेतालाई त्यही सामान अर्कोलाई बेच्दा हुने हानी तिराउनू ।

**राजदैवोपघातेन पण्ये दोषमुपागते ।**
**हानिर्विक्रेतुरेवासौ याचितस्याप्रयच्छतः ॥२५६॥**

क्रेताले पैसा दिएर किनेको वस्तु माग्दा दिन आलटाल गरेर पछि सरकार वा दैवी कारणले हुने हानीमा विक्रेताको दोष हुन्छ ।



**अन्यहस्ते च विक्रीय दुष्टं वाऽदुष्टवद्यदि ।**
**विक्रीणीते दमस्तत्र मूल्यात्तु द्विगुणो भवेत् ॥२५७॥**

एउटालाई बेचेको सामान अर्कोलाई र दोष भएको सामानलाई दोष छैन भनी बेच्नेलाई मूल्यको दोब्बर तिराउनू ।

**क्षयं वृद्धिञ्च वणिजा पण्यानामविजानता ।**
**क्रीत्वा नानुशयः कार्यः कुर्वन्षड्भागदण्डभाक् ॥२५८॥**

लाभहानीको अनुभव नहुनेले किन्ने बचन दिई कुनै सामान नलिनु हुँदैन, नलिए मूल्यको छ भागको एक भाग दण्ड तिराउनू ।

इति विक्रीयासम्प्रदानप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत खरिदबिक्री सम्बन्धी कुरा उल्लेख भएको विक्रीयासम्प्रदानप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ संभूयसमुत्थानप्रकरणम् (२२)

**समवायेन वणिजां लाभार्थं कर्म कुर्वताम् ।**
**लाभालाभौ यथाद्रव्यं यथा वा सम्विदा कृतौ ॥२५९॥**

साझा व्यापारमा, लगानी वा सम्झौता अनुसार लाभहानी वितरण गर्नू ।

**प्रतिषिद्धमनादिष्टं प्रमादाद्यच्च नाशितम् ।**
**स तद्दद्याद्विप्लवाच्च रक्षिताद्दशमांशभाक् ॥२६०॥**

निषिद्ध वस्तु बेच्ने, निषिद्ध लेनदेन गर्ने र प्रमादमा कुनै वस्तु नष्ट गर्नेलाई क्षतीपूर्ति तिराउनू र राजा र चोरबाट पैसा जोगाउनेलाई मूल्यको दश भागको एक भाग पुरस्कार दिनू ।

**अर्घप्रक्षेपणाद्विंशं भागं शुल्कं नृपो हरेत् ।**
**व्यासिद्धं राजयोग्यं च विक्रीतं राजगामि तत् ॥२६१॥**

राजालाई मूल्य निर्धारण शुल्क वापत मूल्यको पाँच प्रतिशत लिने र बिक्री गर्न नहुने तथा आफ्नो उपभोग्य वस्तु बिक्री हुँदा जफत गर्ने अधिकार छ ।

**मिथ्यावदन्परीमाणं शुल्कस्थानादपासरन् ।**
**दाप्यस्त्वष्टगुणं यश्च स व्याजक्रयविक्रयी ॥२६२॥**

सामानमा तौल कम बताए, चुँगी करबाट भागे र विवादास्पद सामान खरिदबिक्री गरे मूल्यको आठ गुणा दण्ड तिराउनू ।

**तरिकः स्थलजं शुल्कं गृह्णन्दाप्यः पणान्दश ।**
**ब्राह्मणप्रातिवेश्यानामेतदेवानिमन्त्रणे ॥२६३॥**

डुङ्गा तारेको शुल्क लिनेले स्थलमार्गको पनि शुल्क लिनेलाई तथा योग्य ब्राह्मणलाई पनि श्राद्ध आदिमा ननिम्त्याउनेलाई दश पण दण्ड तिराउनू ।

**देशान्तरगते प्रेते द्रव्यं दायादबान्धवाः ।**
**ज्ञातयो वा हरेयुस्तदागतास्तैर्विना नृपः ॥२६४॥**

विदेश गएको साझेदारको धन सुरक्षित राखी फर्केपछि दिनू, मरेमा हकदारलाई दिनू, हकदार नभए राजकोषमा जम्मा गर्नू ।

**जिह्मं त्यजेयुर्निर्लाभमशक्तोऽन्येन कारयेत् ।**
**अनेन विधिराख्यात ऋत्विक्कर्षककर्मिणाम् ॥२६५॥**

बेइमानलाई उसको भाग नदिई अलग गर्नू, भागमा परेको काम गर्न नसक्नेले काम गर्ने मानिस राख्नु वा सो बराबरको रकम तिर्नु । ऋत्विज, कृषक र कालिगढमा पनि यही नियम लागु गर्नू ।

**इति संभूयसमुत्थानप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत लाभांश आदि सम्बन्धी कुरा उल्लेख भएको संभूयसमुत्थानप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

## अथ स्तेयप्रकरणम् (२३)

**ग्राहकैर्गृह्यते चौरो लोप्त्रेणाथ पदेन वा ।**
**पूर्वकर्मापराधी च तथा चाशुद्धवासकः ॥२६६॥**

आरोपित व्यक्तिलाई समात्नू । चोरिएको वस्तु, चिह्न र आचरण मिलेमा वा उसले ठेगाना आदि ढाँटेमा पनि चोर मानी थुनी राख्नू ।

**अन्येऽपि शङ्कया ग्राह्या जातिनामादिनिह्नवैः ।**
**द्यूतस्त्रीपानसक्ताश्च शुष्कभिन्नमुखस्वराः ॥२६७॥**
**परद्रव्यगृहाणाञ्च पृच्छका गूढचारिणः ।**
**निराया व्ययवन्तश्च विनष्टद्रव्यविक्रयाः ॥२६८॥**

वास्तविकता लुकाउने, जुवा-वेश्या-जाँडको दुर्व्यशनी, सोद्धा आत्तिने, मुख छोप्ने, घाँटी सुक्ने, बोली अड्किने, भाग्न खोज्ने, अर्काको धनसम्पत्तिको जानकारीमा रुची राख्ने, वेशभूषा र बस्ने ठाउँ बदलिरहने, आयभन्दा व्यय बढी गर्ने र हराएका वस्तुको खरिदबिक्री गर्नेलाई चोरको शङ्कामा समाउनू ।



**गृहीतः शङ्कया चौर्ये नात्मानं चेद्विशोधयेत् ।**
**दापयित्वा हृतं द्रव्यं चौरदण्डेन दण्डयेत् ॥२६९॥**

शङ्कामा समातिएको व्यक्तिले आफू निर्दोष भएको प्रमाणित नगरे चोरको सजायँ दिनू र उसँग सामानको मूल्य पनि असुल्नू ।

**चौरं प्रदाप्यापहृतं घातयेद्विविधैर्वधैः ।**
**सचिह्नं ब्राह्मणं कृत्वा स्वराष्ट्राद्विप्रवासयेत् ॥२७०॥**

चोरबाट चोरिएको सामान फिर्ता गराउनू र विविध दण्ड दिनू, बाहुन भए निधार डामी देशनिकाला गर्नू ।

**घातितेऽपहृते दोषे ग्रामभर्तुरनिर्गते ।**
**विवीतभर्तुस्तु पथि चौरोद्धर्तुरवीतके ॥२७१॥**

गाऊँमा चोरी वा हत्या भई अपराधी त्यहीँ भए ग्रामपाल तथा बाटामा यस्तो भए मार्गपाल (गस्ती-प्रहरी प्रमुख) दोषी हुन्छ ।

**स्वसीम्नि दद्याद्ग्रामस्तु पदं वा यत्र गच्छति ।**
**पञ्चगामी बहिः क्रोशाद्दशग्रामाथवा पुनः ॥२७२॥**

गाऊँको सीमाभित्र चोरी हुँदा वा चोरको पदचिह्न भेटिँदा सोही गाऊँबाट र सीमाबाट एक कोस पर भएको हत्याचोरीमा वरपरका पाँच-दश गाऊँ मिली क्षतिपूर्ति तिर्नू ।

**बन्दिग्राहाँस्तथा वाजिकुञ्जराणां च हारिणः ।**
**प्रसह्य घातिनश्चैव शूलानारोपयेन्नरान् ॥२७३॥**

बन्दी भगाउने, भाग्ने बन्दी, हाती वा घोडा चोर्ने र अकारण हत्या गर्नेलाई मृत्युदण्ड दिनू वा शूलीमा चढाउनू ।

**उत्क्षेपकग्रन्थिभेदो करसन्दंशहीनकौ ।**
**कार्यौ द्वितीयापराधे करपादैकहीनकौ ॥२७४॥**

बहुमूल्य वस्तु चोर्ने र पाकेटमारको क्रमशः साहिँली र बूढी औंला काट्नू । फेरी त्यो कर्म गरे हातगोडा काट्नू ।



**क्षुद्रमध्यमहाद्रव्यहरणे सारतो दमः ।**
**देशकालवयःशक्ति सञ्चिन्त्यं दण्डकर्मणि ॥२७५॥**

चोरिएको वस्तुको आकार-महत्व-मूल्य, स्थान-समय र चोरको उमेर-शक्ति आदि हेरी चोरलाई दण्ड दिने गर्नू ।

**भक्तावकाशग्न्युदकमन्त्रोपकरणव्ययान् ।**
**दत्त्वा चौरस्य वा हन्तुर्जानतो दम उत्तमः ॥२७६॥**

चोरलाई खुवाउने, पियाउने, आगो र वास दिने, चोर्न सिकाउने, साधन जुटाइदिने र बाटो खर्च दिनेलाई उत्तम साहसको दण्ड दिनू ।

**शस्त्रावपाते गर्भस्य पातने चोत्तमो दमः ।**
**उत्तमो वाऽधमो वापि पुरुषस्त्रीप्रमापणे ॥२७७॥**

हतियारले शरीर क्षतविक्षत पार्ने र गर्भपात गराउनेलाई उत्तम साहस तथा पुरुष वा स्त्रीको हत्या गर्नेलाई सामाजिक स्थिति हेरी उत्तम वा अधम साहस दण्ड दिनू ।

**विप्रदुष्टां स्त्रियञ्चैव पुरुषघ्नीमगर्भिणीम् ।**
**सेतुभेदकरीं चाप्सु शिलां बध्वा प्रवेशयेत् ॥२७८॥**

गर्भपात गर्ने, निकृष्ट व्यवहार गर्ने, पुरुषको हत्या गर्ने र पुल नष्ट गर्ने महिलालाई गर्भवती नभए गलामा ढुङ्गा बाँधी पानीमा डुबाउनू ।

**विषाग्निदां पतिगुरुनिजापत्यप्रमापणीम् ।**
**विकर्णकरनासौष्ठीं कृत्वा गोभिः प्रमापयेत् ॥२७९॥**

अन्नमा विष हाल्ने, अर्काको घर जलाउन आगो दिने र पति-गुरु-सन्तानको हत्या गर्ने महिलाको गर्भवती नभए नाक-कान-हात-ओठ काट्नू वा साँढेले कुल्चाएर मार्नू ।

**अविज्ञातहतस्याशु कलहं सुतबान्धवाः ।**
**प्रष्टव्या योषिश्चास्य परपुंसि रताः पृथक् ॥२८०॥**

हत्यारा पत्ता लगाउन उसका नातागोता र छोरानातीमा भएको सम्बन्धको पत्ता लगाउनू । यसैगरी कुलटा स्त्रीको बेग्लाबेग्लै र गुप्त तरिकाले जानकारी लिनू ।

**स्त्रीद्रव्यवृत्तिकामो वा केन वाऽयं गतः सह ।**
**मृत्युदेशसमासन्नं पृच्छेद्वापि जनं शनैः ॥२८१॥**

मृत व्यक्ति कोसँग गएको थियो, उसका स्त्री, धन आदि के के कमजोरी थिए, व्यवहार कस्तो थियो, अन्तिम पटक कसले देखेको थियो आदि आसपासका व्यक्तिसँग सोधपुछ गर्नू र प्राप्त जानकारी गोप्य हुने बचन दिनू ।

**क्षेत्रवेश्मवनग्रामविवीतखलदाहकाः ।**
**राजपत्न्यभिगामी च दग्धव्यास्तु कटाग्निना ॥२८२॥**

पाकेको बाली, घर, बगैंचा, गाउँ, गोठ र धन्सारमा आगो लगाउने अनि राजपत्नीलाई व्यभिचार गर्नेलाई बोरामा हाली जलाउनू ।

**इति स्तेयप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत चोरी र दण्ड सम्बन्धी कुरा उल्लेख भएको स्तेयप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

## अथ स्त्रीसंग्रहणप्रकरणम् (२४)

**पुमान्सङ्ग्रहणे ग्राह्य केशाकेशि परस्त्रिया ।**
**सद्यो वा कामजैश्चिह्नैः प्रतिपत्तौ द्वयोस्तथा ॥२८३॥**

पुरुष र परस्त्रीले एकअर्काको कपाल समाई क्रीडारत देखे शरीरमा दाँत वा नङका चिह्न र अनुराग हेरी पुरुषलाई बाँध्नू ।

**नीवीस्तनप्रावरणसक्थिकेशावमर्शनम् ।**
**अदेशकालसम्भाषं सहैकासनमेव च ॥२८४॥**

वासनाग्रस्त भई परस्त्रीको ओढ्ने-चोली-आँचल-तिघ्रा-कपाल छुने; परएकान्त-रात-अँध्यारोमा गफ गर्ने र एकै आसनमा बस्ने पुरुषलाई बाँध्नू ।

**स्त्री निषेधे शतं दद्याद् द्विशतं तु दमं पुमान् ।**
**प्रतिषेधे तयोर्दण्डो यथा संग्रहणे तथा ॥२८५॥**



निषेधित पुरुष वा स्त्रीसँग सम्बन्ध राख्ने, राख्न चाहने वा राखिरहने पुरुष वा स्त्रीलाई दुई सय र सय पण जरिवाना गर्नू ।

**सजातावुत्तमो दण्ड आनुलोम्ये तु मध्यमः ।**
**प्रातिलाम्ये वधः पुंसो नार्याः कर्णादिकर्तनम् ॥२८६॥**

समान जातको व्यभिचारमा दुबैलाई उत्तम साहसको, पुरुष उत्तमजातको भए दुवैलाई मध्यम साहसको र पुरुष निम्न जातको भए पुरुषलाई मार्नू र स्त्रीको नाककान काट्नू ।

**अलङ्कृता हरन्कन्यामुत्तमं ह्यन्यथाऽधमम् ।**
**दण्डं दद्यात्सवर्णासु प्रातिलोम्ये वधःस्मृतः ॥२८७॥**

सजिएकी वधू हरण गरे उत्तम साहसको, अन्य बेलामा सजिएकी कन्या हर्नेलाई अधम साहसको र माख्लो जातकी कन्या हरण गर्नेलाई मृत्युदण्डको सजायँ दिनू ।

**सकामास्वनुलोमासु न दोषस्त्वन्यथा दमः ।**
**दूषणे तु करच्छेद उत्तमायां वधस्तथा ॥२८८॥**

सहमतीमा तल्लो वर्णकी कन्यारतीको दोष हुँदैन तर बलात्कारमा प्रथम साहस दण्ड र दाँत वा नङले दूषित गरे हात काट्नू । उच्च जातकीलाई दूषित गरे प्राणदण्ड दिनू ।

**शतं स्त्रीदूषणे दद्याद् द्वे तु मिथ्याभिशंसने ।**
**पशून्गच्छन्शतं दाप्यो हीनां स्त्रीं गाञ्च मध्यमम् ॥२८९॥**

कन्याको दोष बताउँदै हिँड्नेलाई सय र झूटो दोष लगाउनेलाई दुई सय पण तिराउनू । पशुकरणीमा सय पण र गाईकरणीमा मध्यम साहसको दण्ड तिराउनू ।

**अवरुद्धासु दासीषु भुजिष्यासु तथैव च ।**
**गम्यास्वपि पुमान्दाप्यः पञ्चाशत्पणिकं दमम् ॥२९०॥**

आफ्नो सेवाका लागि पर्दामा राखिएकी दासी परस्त्र गम्या भएपनि गमन गरे पचास पण तिराउनू ।

**प्रसह्य दास्यभिगमे दण्डो दशपणः स्मृतः ।**
**बहूनां यद्यकामासौ चतुर्विंशतिकः पृथक् ॥२९१॥**



सित्तैंमा गरिने दासी वा वेश्या करणीमा दश र सामूहिक बलात्कारमा सबैलाई चौबीस पण तिराउनू ।

**गृहीतवेतना वेश्या नेच्छन्ती द्विगुणं वहेत् ।**
**अगृहीते समं दाप्यः पुमानप्येवमेव हि ॥२९२॥**

पैसा लिएर नमान्ने वेश्यासँग दोब्बर र पछि पैसा लिने सहमती गरी नमान्ने वेश्यासँग शुल्क बराबर दण्ड लिनू । पैसा तिर्ने तर उत्तेजित नहुनेले पैसा फिर्ता लिने अधिकार हुँदैन ।

**अयोनौ गच्छतो योषां पुरुषं वापि मेहतः ।**
**चतुर्विंशतिको दण्डस्तथा प्रव्रजितागमे ॥२९३॥**

स्त्रीको जननेन्द्रियको सट्टा उनको गुदद्वार वा मुखमा सहवास गर्ने वा संन्यासिनीलाई सम्भोग गर्ने पुरुषलाई चौबीस पण तिराउनू ।

**अन्त्याभिगमने त्वङ्क्यः कुबन्धेन प्रवासयेत् ।**

**शूद्रस्तथान्त्य एव स्यादन्त्यस्यार्यागमे वधः ॥२९४॥**

चाण्डाल्नी गमनकर्ता पुरुषको शरीरमा योनीको चिह्न डाम्नू वा देश निकाला गर्नू । यस्तो पुरुष पतित र चाण्डाल हुन्छ भने अरु वर्णलाई गमन गर्ने चाण्डालको वध गर्नू ।

**इति स्त्रीसंग्रहणप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत करणी एवं आशय करणी र दण्ड सम्बन्धी कुरा उल्लेख भएको स्त्रीसंग्रहणप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

## अथ प्रकीर्णप्रकरणम् (२५)

**ऊनं वाभ्यधिकं वापि लिखेद्यो राजशानम् ।**
**परदारिक चौरं वा मुञ्चतो दण्ड उत्तमः ॥२९५॥**

राजाज्ञा (वा कानुन) लाई घटबढ पारेर लेख्ने, चोर भगाउने र परस्त्री गमन गर्नेलाई उत्तम साहसको दण्ड दिनू ।

**अभक्ष्येण द्विजं दूष्यो दण्डच्च उत्तमसाहसम् ।**
**मध्यमं क्षत्रियं वैश्यं प्रथमं शूद्रमर्धिकम् ॥२९६॥**

अभक्ष्यले भक्ष्य दूषित पार्ने द्विजलाई क्रमशः उत्तम, मध्यम र प्रथम तथा शूद्रलाई प्रथम साहसको आधा दण्ड दिनू ।

**कूटस्वर्णव्यवहारी विमांसस्य च विक्रयी ।**
**त्र्यहीनस्तु कर्तव्यो दाप्यश्चोत्तमसाहसम् ॥२९७॥**



सुनआदि धातु र निषेधित पशुको मासु भ्रुक्याई बेच्नेको तीन अङ्ग नाक, कान र हात काटी उत्तम साहसको दण्ड दिनू ।

**चतुष्पादकृतो दोषे नापेहीति प्रजल्पतः ।**
**काष्ठलोष्टेषुपाषाणबाहुयुग्यकृतस्तथा ॥२९८॥**

अटेर गरी पशुले नोक्सान पुर्‍याए क्षतिपूर्ती तथा बाण, काठ, माटो, ढुङ्गा वा रथका घोडाले घाइते बनाए दोष हुन्न ।

**छिन्नस्येन यानेन तथा भग्नयुगादिना ।**
**पश्चाच्चैवापसरता हिंसने स्वाम्यदोषभाक् ॥२९९॥**

बाहनमा नारिएका पशुको बन्धन चुँडेर वा बाहनको पछिपछि लागी घाइते वा मृत्यु भएमा चालकको दोष मानिन्न ।

**शक्तोऽप्यमोक्षयन्स्वामी दंष्ट्रिणां श्रृङ्गिणान्तथा ।**
**प्रथमं साहसं दद्याद्विक्रुष्टे द्विगुणन्तथा ॥३००॥**

दाँत वा सिङ भएका आफ्ना पशुबाट अरुलाई जोगाउन नखोज्नेलाई प्रथम साहस र पशुले दुःख दिई गुहार माग्नेलाई सहायता नगर्ने धनीलाई सो को दोब्बर दण्ड तिराउनू ।

**जारश्चौरेत्यभिवदन्दाप्यः पञ्चशतं दमम् ।**
**उपजीव्य धनं मुञ्चस्तदेवाष्टगुणीकृतम् ॥३०१॥**

घरमा छिरेको जारलाई इज्जतका लागि चोर भनी भगाउन मद्दत गर्नेलाई पाँच सय र घुस लिएर छाड्नेलाई चार हजार पण तिराउनू ।

**राज्ञोऽनिष्टप्रवक्तारं तस्यैवाक्रोशकारिणम् ।**
**तन्मन्त्रस्य च भेत्तारं छित्त्वा जिह्वां प्रवासयेत् ॥३०२॥**

पटकपटक राजाको अनिष्ट गर्ने, निन्दा गर्ने र गोप्य कुरा सार्वजनिक गर्नेलाई जिब्रो काटेर देशनिकाला गर्नू ।

**मृताङ्गलग्नविक्रेतुर्गुरोस्ताडयितुस्तथा ।**
**राजयानासनारोढुर्दण्ड उत्तमसाहसः ॥३०३॥**



लाशका कपडा आदि बेच्ने, गुरु आदि मान्यलाई पिट्ने तथा अनुमति बिना राजाको आसनमा बस्नेलाई उत्तम साहसको दण्ड दिनू ।

**द्विनेत्रभेदिनो राजद्विष्टादेशकृतस्तथा ।**
**विप्रत्वेन च शूद्रस्य जीवतोऽष्टशतो दमः ॥३०४॥**

दुवै आँखा फोर्नेलाई, राजद्रोह गर्ने र ब्राह्मणको भेष लिएर जीवन चलाउने शूद्रलाई आठ सय पण दण्ड गर्नू ।

**दुर्दृष्टाँस्तु पुनर्दृष्ट्वा व्यवहारान्नृपेण तु ।**
**सभ्याःसजयिनो दण्ड्या विवादाद् द्विगुणं दमम् ॥३०५॥**

सभासदले गरेको निर्णयमा पुनर्विचार गर्दा (सभासदबाट) पक्षपात गरेको देखिए राजाले निर्णय उल्टाउनू र हार्नेबाट दोब्बर रकम असुल्नू ।

**यो मन्येताजितोऽस्मीति न्यायेनापि पराजितः ।**

**तमायान्तं पुनर्जित्वा दापयेद् द्विगुणं दमम् ॥३०६॥**

हार्नेले पराजय स्वीकार नगरे राजाले धर्मपूर्वक पराजित भएको घोषणा गर्नू र विवाद गर्नेसँग दोब्बर दण्ड लिनू ।

**राज्ञाऽन्यायेन यो दण्डो गृहीतो वरुणाय तम् ।**
**निवेद्य दद्याद्विप्रेभ्यः स्वयं त्रिंशद्गुणीकृतम् ॥३०७॥**

दण्ड लिएको अन्यायपूर्ण प्रमाणित भए राजाले त्यसको तीस गुणा वरुणलाई सङ्कल्प गरी ब्राह्मणलाई बाँड्नू र सम्बन्धितलाई उसको पैसा फिर्ता दिनू ।

इति प्रकीर्णप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत विविध प्रकारका अपराध र दण्ड सम्बन्धी कुरा उल्लेख भएको प्रकीर्णप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

इति व्यवहाराध्यायः

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत व्यवहाराध्यायको नेपाली भावानुवाद पूर्ण भयो ।

# अथ प्रायश्चित्ताध्यायः ३
## अथाशौचप्रकरणम् (१)

**ऊनद्विवर्षं निखनेन्न कुर्यादुदकं ततः ।**
**आश्माशानादनुव्रज्य इतरो ज्ञातिभिर्वृतः ॥१॥**

दुई वर्ष नपुगेका बालकको लाश गाड्नू, जलाञ्जलि नदिनू । सपिण्डी र समानोदकहरु मसानसम्म मलाम जानू ।

**यमसूक्तं तथा गाथा जपद्भिः लौकिकाग्निना ।**
**स दग्धव्य उपेतश्चेदाहिताग्न्यावृतार्थवत् ॥२॥**

मलामीले यमशूक्त वा यमगाथा गाउनू । दुई वर्षका बालकको लौकिक अग्निले लाश जलाउनू । व्रतबन्ध गरिसकेको भए आफ्नो गृह्यसूत्र अनुसार लौकिक अग्निले लाश जलाउनू ।

**सप्तमाद्दशमाद्वापि ज्ञातयोऽभ्युपयन्त्यपः ।**
**अप नः शोशुचदघमनेन पितृदिङ्मुखाः ॥३॥**



जलाएको सात वा दश दिन नबिती सपिण्डीहरुले जलाशयका नजिक दक्षिण फर्की "अप नः शोशुचदघम्" मन्त्रले मृतकलाई जलदान गर्नू ।

**एवं मातामहाचार्यप्रेतानामुदकक्रिया ।**
**कामोदकं सखिप्रत्तास्वस्त्रीयश्वहुरर्त्विजाम् ॥४॥**

यसैगरी मावली हजूरबा र आचार्यलाई जलदान दिनू । मित्र, विवाहिता छोरी, दिदीबहिनी, भाञ्जा, ससुरा र ऋत्विजलाई पनि दिन चाहनेले यसैगरी जलदान दिनू ।

**सकृत्प्रसिञ्चन्त्युदकं नामगोत्रेण वाग्यताः ।**
**न ब्रह्मचारिणः कुर्युरुदकं पतितास्तथा ॥५॥**

सपिण्डीहरुले मौन रही "अमुकनामा अमुक गोत्रः प्रेतः तृप्यतु" भनी एक पटक जलाञ्जली दिनू । ब्रह्मचारी र पतितले जलाञ्जली नदिनू ।

**पाखण्डयनाश्रिताःस्तेना भर्तृघ्न्यः कामगादिकाः ।**

सुराप्य आत्मत्यागिन्यो नाशौचोदकभाजनाः ॥६॥

पाखण्डी, चारमध्ये कुनै आश्रममा नरहेका, चोर, पतिहत्या गर्ने र कुलटा स्त्री, जाँड खाने र आत्महत्या गर्नेलाई आशौच अवधिभर जलाञ्जली नदिनू ।

कृतोदकान्समुत्तीर्णान्मृदुशाद्वलसंस्थितान् ।
स्नातानपवदेयुस्तानितिहासैः पुरातनैः ॥७॥

जलाञ्जली दिएर स्नानगरी तीरको हरियो घाँस वा बालुवामा बसेर जीवनको अनित्यता र शरीरको नश्वरता (नाश हुने गुण) सम्बन्धी कुराले आफन्तलाई सम्झाउनू ।

मानुष्ये कदलीस्तम्भनिःसारे सारमार्गणम् ।
करोति यः स सम्मूढो जलबुद्बुदसन्निभे ॥८॥

केराको खम्बाझैं सारहीन र पानीका थोपाझैं क्षणिक यो शरीरमा सारताको कामना गर्नु आफैंलाई धोका दिनु हो ।



पञ्चधा सम्भृतः कायो यदि पञ्चत्वमागतः ।
कर्मभिः स्वशरीरोत्थैस्तत्र का परिवेदना ॥९॥

कर्मको फल भोग्न पञ्चतत्वले बनेको शरीर त्यसैमा मिल्यो त्यसमा के आश्चर्य र शोक गर्नु, मिलनको बिछोड र संश्लेषणको विश्लेषण हुने सहज प्रक्रिया कुनै नयाँ प्रक्रिया होइन ।

गन्त्री वसुमती नाशमुदधिर्दैवतानि च ।
फेनप्रख्यः कथं नाशं मर्त्यलोको न यास्यति ॥१०॥

पृथ्वी, समुद्र र देवता त एक दिन नष्ट हुन्छन् भने फिँजका फोकाझैं क्षणिक जीवन जिउने मृत्युलोकका प्राणी नष्ट हुनुमा के आश्चर्य ? ।

श्लेष्माश्रु बान्धवैर्मुक्तं प्रेतो भुङ्क्ते यतोऽवशः ।
अतो न रोदितव्यं हि क्रियाः कार्याः स्वशक्तितः ॥११॥

आफन्तले बगाएको आँशु, थुकेको थुक र खकार विवश भई प्रेतले खानुपर्ने हुनाले यी ननिकाल्नू बरु शक्ति अनुसार श्राद्धतर्पण गरी प्रेतात्माको कल्याण गर्नू ।

**इति संश्रुत्य गच्छेयुर्गृहं बालपुरःसराः ।**
**विदश्य निम्बपत्राणि नियता द्वारि वेश्मनः ॥१२॥**
**आचम्याग्न्यादि सलिलं गोमयं गौरसर्षपान् ।**
**प्रविशेयुः समालभ्य कृत्वाश्मनि पदं शनैः ॥१३॥**

परिवारका वृद्ध मान्यजनले शान्त चित्तका व्यक्तिलाई बालकको अगुवाईमा घरभित्र पसाउनू । पस्नु अघि ढोकामा उभिएर नीमको पात चबाउनू र कुल्ला गरी आचमन गर्नू । त्यसपछि अग्नि, जल, गोबर तथा पहेँलो सरस्यूँ छोएर पत्थरमा गोडा राखी विस्तारै घरभित्र छिर्नू ।

**प्रवेशनादिकं कर्म प्रेतसंस्पर्शिनामपि ।**
**इच्छतां तत्क्षणाच्छुद्धिःपरेषां स्नानसंयमान् ॥१४॥**

सबै सगोत्री र लाश छुनेले घरभित्र पस्दा यसै गर्नू । असगोत्री यदि तुरुन्त शुद्ध हुन चाहन्छन् भने तिनले स्नान र प्राणायाम गर्नू, अरु गर्न पर्दैन ।

**आचार्यपित्रुपाध्यायान्निर्हृत्यापि व्रतीव्रती ।**

**सङ्कटान्नं च नाश्नीयान्न च तैः सह सम्वसेत् ॥१५॥**

ब्रह्मचारीले आफ्ना मातापिता र उपाध्यायको लाश बोके पनि उसको ब्रह्मचर्य व्रत खण्डित हुँदैन तर उसले जुठो लागेका व्यक्तिसँगै बस्न र तिनको अन्न ग्रहण गर्न चाहीँ हुन्न ।

**क्रीतलब्धाशना भूमौ स्वपेयुस्ते पृथक् क्षितौ ।**
**पिण्डयज्ञावृता देयं प्रेतायान्नं दिनत्रयम् ॥१६॥**

जुठो परेका घरकाले आफ्नै पैसाले किनेको वा बिचाराको अन्न खानू र स्त्री-पुरुष बेग्लाबेग्लै जमिनमा सुत्नू तथा पितृयज्ञको विधिले तीन दिनसम्म पिण्डदान गर्नु पर्दछ ।

**जलमेकाहमाकाशे स्थाप्यं क्षीरञ्च मृन्मये ।**
**वैतानौपासनाःकार्याः क्रियाश्च श्रुतिचोदनात् ॥१७॥**

माटाका दुई वटा भाँडामा बेग्लाबेग्लै जल र दूध हाली अग्लो स्थानमा राख्नू र वेदले बताए बमोजिम बिहान बेलुकी अग्निहोत्र र उपासना कर्म गर्नू ।

**त्रिरात्रं दशरात्रं वा शावमाशौचमिष्यते ।**
**ऊनद्विवर्ष उभयोः सूतकं मातुरेव हि ॥१८॥**

जुठो तीन दिन वा दश दिन लाग्दछ । दुई वर्ष मुनिका शिशुको जुठो मातापितालाई लाग्दछ । सूतक मातालाई मात्र लाग्दछ ।

**पित्रोस्तु सूतकं मातुस्तदसृग्दर्शनाद् ध्रुवम् ।**
**तदहर्न प्रदुष्येत पूर्वेषां जन्मकारणात् ॥१९॥**

आमालाई रगत देखिएपछि दश दिन सूतक लाग्छ । बालक जन्मेको दिन पूर्वपुरुष नै फेरी पुत्ररुपमा जन्मने हुनाले (पिता) अपवित्र हुँदैन ।

**अन्तरा जन्ममरणे शेषाहोभिर्विशुद्ध्यति ।**
**गर्भस्रावे मासतुल्या निशाः शुद्धेस्तु कारणम् ॥२०॥**

बीचमा अर्को आशौच परेमा पहिलोको समाप्तिमा दोश्रो पनि समाप्त हुन्छ । गर्भस्रावमा जति महिनाको गर्भ स्राव भएको हो त्यति रात आशौच लाग्दछ ।



**हतानां नृपगोविप्रैरन्वक्षं चात्मघातिनाम् ।**
**प्रोषिते कालशेषः स्यात्पूर्णे दत्त्वोदकं शुचिः ॥२१॥**

राजा, गाई र ब्राह्मणबाट मारिने तथा आत्महत्या गर्नेको आशौच स्नानले नै शुद्ध हुन्छ । विदेशमा मर्नेको बाँकी दिन आशौच बार्नू । दिन बितेपछि सुने नुहाएर जलाञ्जली दिनाले शुद्ध हुन्छ ।

**क्षात्रस्य द्वादशाहानि विशः पञ्चदशैव तु ।**
**त्रिंशद्दिनानि शूद्रस्य तदर्धं न्यायवर्तिन ॥२२॥**

क्षत्रीलाई बाह्र, वैश्यलाई पन्ध्र दिन साधारण शूद्रलाई तीस दिन र ब्राह्मण सेवारत शूद्रलाई पन्ध्र दिन आशौच लाग्दछ ।

**आदन्तजन्मनः सद्य आचूडान्नैशिकी स्मृता ।**
**त्रिरात्रमाव्रतादेशाद्दशरात्रमतः परम् ॥२३॥**

दाँत नउम्री मरे नुहाएर, चूडाकर्म गर्ने उमेर भएमा एक दिनरात, उपनयन गर्ने उमेर

भएमा तीन रात र त्यसपछिको मृत्युमा दश रात आशौच रहन्छ ।

**अहस्त्वदत्तकन्यासु बालेषु च विशोधनम् ।**
**गुर्वन्तेवास्यनूचानमातुलश्रोत्रियेषु च ॥२४॥**

टिकाटाला नगरी बिह्ले कन्याको सपिण्डीलाई तथा गुरु, शिष्य, वेदाङ्गका प्रवक्ता, मामा र श्रोत्रियको मृत्युमा एक दिनरात आशौच हुन्छ ।

**अनौरसेषु पुत्रेषु भार्यास्वन्यगतासु च ।**
**निवासराजनि प्रेते तदहः शुद्धिकारणम् ॥२५॥**

औरस बाहेकका अरु पुत्र, पोइल गएकी पत्नी र शासकको मरणमा एक दिनरात आशौच रहन्छ ।

**ब्राह्मणेनानुगन्तव्यो न शूद्रो न द्विजः क्वचित् ।**
**अनुगम्याम्भसि स्नात्वा स्पृष्ट्वाग्निं घृतभुक्शुचिः ॥२६॥**

ब्राह्मणले असगोत्री र शूद्रको मलाम कहिल्यै नजानु । स्नेहवश गए शुद्धिका लागि स्नान र अग्निस्पर्श गरी घिउ खानू ।



**महीपतीनां नाशौचं हतानां विद्युता तथा ।**
**गोब्राह्मणार्थे संग्रामे यस्य चेच्छति भूमिपः ॥२७॥**

राजा, चटयाङले मर्ने, गाईब्राह्मणको रक्षार्थ मर्ने र आशौच-निषेध गरिएका व्यक्तिको आशौच लाग्दैन ।

**ऋत्विजां दीक्षितानाञ्च यज्ञियं कर्म कुर्वताम् ।**
**सत्रिव्रतिब्रह्मचारिदातृब्रह्मविदां तथा ॥२८॥**
**दाने विवाहे यज्ञे च सङ्ग्रामे देशविप्लवे ।**
**आपद्यपि हि कष्टायां सद्यः शौचं विधीयते ॥२९॥**

ऋत्विज, यज्ञमा वरण गरिएका, यज्ञका सहायक, यज्ञ गर्ने, ठूलो व्रत बसेका, ब्रह्मचारी र दानी व्यक्तिलाई तथा दान-विवाह-यज्ञ र युद्धमा, उत्पात र सङ्कटमा दानगर्न लागेको समयमा कुनै आशौच लाग्दैन ।

**उदक्याशुचिभिः स्नायात्संस्पृष्टस्तैरुपस्पृशेत् ।**
**अब्लिङ्गानि जपेच्चैव गायत्रीं मनसा सकृत् ॥३०॥**

रजस्वला र अपवित्रलाई छोए नुहाउनू, तिनलाई छुनेलाई छोए आचमन गर्नू,
त्यसपछि 'आपो हिष्ठाः' आदि तीन मन्त्र र गायत्री जप्नू ।

**कालोऽग्निः कर्म मृद्वायुर्मनो ज्ञानं तपो जलम् ।**
**पश्चात्तापो निराहारः सर्वेऽमी शुद्धिहेतवः ॥३१॥**

समय, अग्नि, कर्म, माटो, वायु, मन, ज्ञान, तप, जल, पश्चाताप र उपवास शुद्धिका उपाय हुन् ।

**अकार्यकारिणां दानं वेगो नद्याश्च शुद्धिकृत् ।**
**शोध्यस्य मृच्च तोयञ्च सन्न्यासो वै द्विजन्मनाम् ॥३२॥**

दुष्कार्यको शुद्धि दानले, वेगले नदी शुद्ध हुन्छ, अशुद्ध वस्तुको शुद्धि माटो र जलले
तथा द्विजको शुद्धि सन्यास लिनाले हुन्छ ।



**तपो वेदविदां क्षान्तिर्विदुषां वर्ष्मणो जलम् ।**
**जपः प्रच्छन्नपापानां मनसः सत्यमुच्यते ॥३३॥**

वेदवेत्ताको पाप तपले, विद्वानको पाप क्षमाले, शरीरको शुद्धि जलले, गोप्य पापको
शुद्धि जपले र मनको शुद्धि सत्यसङ्कल्पले हुन्छ ।

**भूतात्मनस्तपोविद्ये बुद्धेर्ज्ञानं विशोधनम् ।**
**क्षेत्रज्ञस्येश्वरज्ञानाद्विशुद्धिः परमा मता ॥३४॥**

मृतात्मा तप र विद्याले, बुद्धि ज्ञानले र क्षेत्रज्ञ (जीवात्मा) ईश्वर ज्ञानले परम शुद्ध (पवित्र) हुन्छ ।

**इत्याशौचप्रकरणम्**

✷

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत**
**आशौचप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

✷

## अथापद्धर्मप्रकरणम् (२)

**क्षात्रेण कर्मणा जीवेद्विशां वाप्यापदि द्विजः ।**
**निस्तीर्य तामथात्मानं पावयित्वा न्यसेत्पथि ॥३५॥**

आपदमा ब्राह्मणले अस्थायी क्षत्रीयकर्म नभए वैश्य-कर्मले जीवन धान्नू र
आपदकाल सकिएपछि स्व-पेसामा फर्कनू ।

**फलोपलक्षौमसोममनुष्यापूपवीरुधः ।**
**तिलौदनरसक्षारान्दधि क्षीरं घृतं जलम् ॥३६॥**

वैश्यकर्म अपनाए पनि फलफूल, हिरा, मणि आदि रत्न, आलस-कपडा, सोमलता, दासदासी,
मालपुवा, बेल आदि लहरा, तिल, भात आदि खानेकुरा, जूस, क्षार, दही, खीर, घिउ, पानी,..।

**शस्त्रासवमधूच्छिष्टं मधु लाक्षा च बर्हिषः ।**
**मृच्चर्मपुष्पकुतपकेशतक्रविषक्षितिः ॥३७॥**



हतियार, रक्सी, मैन, मह, लाहा, कुश, माटो, छाला, फूल, बाख्राको ऊनले बनेका कम्बल आदि,
रौं र यसले बनेका चमर आदि, मोही, विष, धरती (जमिन),...।

**कौशेयनीललवणमांसैकशफसीसकान् ।**
**शाकार्द्रौषधिपिण्याकपशुगन्धाँस्तथैव च ॥३८॥**

रेशमी कपडा, नीर, नुन, मासु, एकखुरे जनावर, सीसा, सागपात, गिला औषधी, पिना,
हिङ आदि, जङ्गली जनावर र चन्दन आदि गन्ध पनि ...।

**वैश्यवृत्त्यापि जीवन्नो विक्रीणीत कदाचन ।**
**धर्मार्थं विक्रयं नेयास्तिला धान्येन तत्समाः ॥३९॥**

वैश्यको पेसा अँगाली बाँचिरहँदा पनि कहिल्यै नबेच्नु । धर्मकार्यका लागि
तिल बेच्नु नै परे पनि त्यो धानसँग साट्नू ।

**लाक्षालवणमांसानि पतनीयानि विक्रये ।**

**पयो दधि च मद्यं च हीनवर्णकराणि तु ॥४०॥**

लाहा, सुन र मासु बेच्ने व्यक्ति पतित हुन्छ । दूध, दही र मद्य बेचे जातबाट तल झर्दछ ।

**आपद्गतः सम्प्रगृह्णन्भुञ्जानो वा यतस्ततः ।**
**न लिप्येतैनसा विप्रो ज्वलनार्कसमो हि सः ॥४१॥**

आपदमा जोसुकैसँग दान र अन्न लिन दोष हुँदैन । ब्राह्मण सूर्य र अग्नि समान भएकाले अपवित्र पदार्थको सम्पर्कमा पनि यी अपवित्र हुँदैनन् ।

**कृषिः शिल्पं भृतिर्विद्या कुसीदं शकटं गिरिः ।**
**सेवानूपं नृपो भैक्षमापत्तौ जीवनानि तु ॥४२॥**

कृषि, शिल्प, श्रम र विद्याको विक्रय, ऋणलगानी, बाहन-भाडा, वनपैदावारको बिक्री, नोकरी, प्रशस्त घाँसपात-रुख-जल आदि भएका ठाउँमा बसाईं, राज्यको सहायता र भीख माग्नु जस्ता वृत्ति आपदकालीन वृत्ति-व्यवसाय हुन् ।



**बुभुक्षितस्त्र्यहं स्थित्वा धान्यमब्राह्मणाद्धरेत् ।**
**प्रतिगृह्य तदाख्येयमभियुक्तेन धर्मतः ॥४३॥**

तीन दिनको भोको ब्राह्मणले क्रमशः शूद्र, वैश्य र क्षत्रीको अन्न चोर्न दोष छैन । तर, समातिए सबै कुरा साँचो भन्नू ।

**तस्य वृत्तं कुलं शीलं श्रुतमध्ययनं तपः ।**
**ज्ञात्वा राजा कुटुम्बं च धर्म्यां वृत्तिं प्रकल्पयेत् ॥४४॥**

राजाले चोरी गर्दा समातिएको वा अभावग्रस्त ब्राह्मणको आचार, कुल, स्वभाव, शास्त्रीय ज्ञान, विद्याको स्तर, उपाधि, तप-साधना र परिवार संख्या हेरी उचित वृत्तिको व्यवस्था मिलाइ दिनुपर्दछ ।

इत्यापद्धर्मप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत आपद्धर्मप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ वानप्रस्थधर्मप्रकरणम् (३)

**सुतविन्यस्तपत्नीकस्तया वानुगतो वनम् ।
वानप्रस्थो ब्रह्मचारी साग्निः सोपासनो व्रजेत् ॥४५॥**

पुत्रलाई पत्नी जिम्मा लगाई वा उनलाई सँगै लिई वनमा जानू । ब्रह्मचर्यमा रही, वैतानाग्नि र गृह्याग्नि समेत सँगै लिई वानप्रस्थ आश्रममा प्रवेश गर्नू ।

**अफालकृष्टेनाग्नींश्च पितृन्देवातिथीनपि ।
भृत्याँश्च तर्पयेच्छ्मश्रु जटालोमभृदात्मवान् ॥४६॥**

नजोतिएका जमिनमा (खेती नगरिएको जमिनमा) जे अन्न पाइन्छ त्यसैले अग्नि, पितृ, देवता, पितृ र सेवकजनलाई सन्तुष्ट पार्नू । दाह्री, कपाल (जटा) र नङ नकाट्नू । आत्माको उपासनामा तल्लिन हुनू ।

**अह्नो मासस्य षण्णां वा तथा सम्वत्सरस्य वा ।
अर्थस्य सञ्चयं कुर्यात्कृतमाश्वयुजे त्यजेत् ॥४७॥**



एक दिन, महिनाभरी, छ महिना वा वर्ष दिनलाई पुग्ने गरी सामलतुमलको जोहो गर्नू । हरेक आश्विन पूर्णिमामा त्यो जोरजाम गरिएको कुरालाई छाड्नू । (नयाँ जम्मा गर्न थाल्नू) ।

**दान्तस्त्रिषवणस्नायी निवृत्तश्च प्रतिग्रहात् ।
स्वाध्यायवान्दानशीलः सर्वसत्त्वहिते रतः ॥४८॥**

इन्द्रियलाई वशमा राख्नू, तीन वटै सन्ध्यामा नुहाउनू, दान नलिनू, वेद पढ्ने गर्नू, दान दिने गर्नू र सबै जीवको भलो गर्न तत्पर रहनू ।

**दन्तोलूखलिकः काल पक्वाशी वाश्मकुट्टकः ।
श्रौत्रं स्मार्तं फलं स्नेहैः कर्म कुर्यात्तथा क्रियाः ॥४९॥**

दाँतले टोकेर जे खान सकिन्छ त्यो कुरा खानू वा आफूले जे पकाएको छ त्यो खानू अथवा ढुङ्गामा कुटेर काम चलाउनू । वैदिक तथा स्मार्त कर्म र अन्य नीजि कर्म (शरीरमा दल्ने, खाना पकाउने आदि) मा फलफूलको चिल्लो प्रयोग गर्नू ।

**चान्द्रायणैर्नयेत्कालं कृच्छ्रैर्वा वर्तयेत्सदा ।**
**पक्षे गते वाप्यश्नीयान्मासे वाहनि वा गते ॥५०॥**

सधैं चान्द्रायण वा कृच्छ्र व्रत गरेर समय बिताउनू अथवा पन्ध्र दिन वा महिना दिन वा एक दिन बिराएर खाने गर्नू ।

**स्वप्याद्भूमौ शुची रात्रौ दिवा सम्प्रपदैर्नयेत् ।**
**स्थानासनविहारैर्वा योगाभ्यासेन वा तथा ॥५१॥**

शुद्ध भई रातमा भुइँमा सुत्नू, दिन घुमेर बिताउनू अथवा उभिइरहने वा बसिरहने वा घुमिरहने जस्ता योगको अभ्यास गरेर दिन काट्नू ।

**ग्रीष्मे पञ्चाग्निमध्यस्थो वर्षासु स्थण्डिलेशयः ।**
**आर्द्रवासास्तु हेमन्ते शक्त्या वापि तपश्चरेत् ॥५२॥**

ग्रीष्म ऋतुमा पञ्चाग्नि ताप्नू, वर्षा ऋतुमा जमिनका सुत्नू, हेमन्त ऋतुमा चिसा वस्त्र लगाउनू अथवा आफ्नो क्षमता अनुसार तपस्या गर्नू ।



**यः कण्टकैर्वितुदति चन्दनैर्यश्च लिम्पति ।**
**अक्रुद्धोऽपरितुष्टश्च समस्तस्य च तस्य च ॥५३॥**

कसैले काँडाले घोची देओस् वा कसैले चन्दन दली देओस्, दुवैप्रति समान व्यवहार गर्नू । कसैसँग रिसाउने र कसैसँग सन्तुष्ट वा खुशी हुने नगर्नू ।

**अग्नीन्वाप्यात्मसात्कृत्वा वृक्षावासो मिताशनः ।**
**वानप्रस्थगृहेष्वेव यात्रार्थं भैक्षमाचरेत् ॥५४॥**

तीन वटै अग्नि आत्मासँग मिलन भएको सम्झी रुखमुनि बस्ने गर्नू, ठिक्क वा थोरै खाना खानू । ज्यान जोगाउन पर्दा वानप्रस्थीकै आश्रमबाट भिक्षा लिने गर्नू ।

**ग्रामादाहृत्य वा ग्रासानष्टौ भुञ्जीत वाग्यतः ।**
**वायुभक्षः प्रागुदीचीं गच्छेदा वर्ष्मसंक्षयात् ॥५५॥**

अथवा (यो सम्भव नभए) गाउँबाट अन्न मागेर लेराई चूपचाप आठ गाँस खानु अथवा उपवास बस्दै प्राण नजाँदासम्म ईशान दिशातिर गई रहनू ।

इति वानप्रस्थधर्मप्रकरणम्

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत वानप्रस्थधर्मप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

## अथ यतिधर्मप्रकरणम् (४)

**वनाद्गृहाद्वा कृत्वेष्टिं सार्ववेदसदक्षिणाम् ।**
**प्राजापत्यां तदन्ते तानग्नीनारोप्य चात्मनि ॥५६॥**

गृहस्थाश्रम वा वानप्रस्थाश्रममा प्राजापत्य यज्ञ गरे त्यसमा आफ्नो सर्वस्व (धनसम्पत्ति) दान दिनू । त्यसपछि यज्ञको अग्निलाई वेदविधिले आत्मामा स्थापना गर्नू ।

**अधीतवेदो जपकृत्पुत्रवानन्नदोऽग्निमान् ।**
**शक्त्या च यज्ञकृन्मोक्षे मनः कुर्यात्तु नान्यथा ॥५७॥**

वेद पढेको छ, जप गर्दछ, छोरो जन्मी सकेको छ, दीनदुःखीलाई अन्न दान गर्दछ र गच्छे अनुसार यज्ञयागादि पनि गर्दछ भने उसले मोक्ष (सन्यासाश्रम) को चाहना गर्नू, नभए नगर्नू ।

**सर्वभूतहितः शान्तस्त्रिदण्डी सकमण्डलुः ।**
**एकारामः परिव्रज्य भिक्षार्थी ग्राममाश्रयेत् ॥५८॥**



सबै जीवको भलो गर्न तत्पर हुनू, शान्त रहनू, त्रिदण्डी (वाग्दण्ड, मनोदण्ड र कर्मदण्डले युक्त) हुनू, कमण्डलु बोक्नू, एकाकी जीवन बिताउने हुनू, सांसारिक ममता त्याग्नू र भिक्षा माग्न गाउँमा जानू ।

**अप्रमत्तश्चरेद्भैक्षं सायाह्नेऽनभिलक्षितः ।**
**रहिते भिक्षुकैर्ग्रामे यात्रामात्रमलोलुपः ॥५९॥**

लापरबाही नगरी, कुनै (चिना हेर्ने आदि जस्ता) अर्को उद्देश्य नलिई, अरु भिक्षुक नरहेको गाउँमा साँझमा गई, लोभ नगरी, आफ्नो पेट भर्न पुग्ने जति मात्र भिक्षा लिनू ।

**यतिपात्राणि मृद्वेणु दार्वलाबुंमयानि च ।**
**सलिलं शुद्धिरेतेषां गोवालैश्चावघर्षणम् ॥६०॥**

सन्यासीका माटाका, बाँसका, काठका वा तुम्बाका भाँडाकुँडा हुन्छन् र ती भाँडाकुँडा गाईका रौंले माझेर शुद्ध हुन्छन् ।

**सन्निनरुध्येन्द्रियग्रामं रागद्वेषौ प्रहाय च ।**
**भयं हित्वा च भूतानाममृतीभवति द्विजः ॥६१॥**

इन्द्रियलाई संयमित बनाउनू, माया वा द्वेष छोड्नू, कुनै पनि जीव डराउने खालका काम नगर्नू, यसो गरे द्विज मोक्ष हुन्छ ।

**कर्तव्याऽऽशयशुद्धिस्तु भिक्षुकेण विशेषतः ।**
**ज्ञानोत्पत्तिनिमित्तत्वात्स्वातन्त्र्यकरणाय च ॥६२॥**

सन्यासीले आफ्नो अन्तस्करण मुख्य गरी प्राणायामले शुद्ध बनाउनू किन कि यसले ज्ञान बढाउँदछ र ध्यान गर्न स्वतन्त्र (सहज) पार्दछ ।

**आवेक्ष्या गर्भवासाश्च कर्मजा गतयस्तथा ।**
**आधयो व्याधयः क्लेशा जरारूपविपर्ययः ॥६३॥**

वैरागी हुन गर्भमा वास हुँदाको अवस्थाका बारेमा तथा कर्मजन्य फलका बारेमा सोच्नू । पीर, रोग, पीडा, बुढ्यौली र रूप परिवर्तनका बारेमा सोच्नू ।



**भवो जातिसहस्रेषु प्रियाप्रियविपर्ययः ।**
**ध्यानयोगेन सम्पश्येत्सूक्ष्म आत्मात्मनि स्थितः ॥६४॥**

हजारौं जुनी (जाति) मा जन्म लिएका जीव, आफूलाई प्रिय लाग्ने कुरा नहुने तर प्रिय नलाग्ने कुरा हुने आदि जस्ता परिस्थितिलाई हेरी निश्चिन्त भएर ध्यान गर्दै आफूभित्र रहेको आत्मालाई हेर्ने गर्नू ।

**नाश्रमः कारणं धर्मे क्रियमाणो भवेद्धि सः ।**
**अतो यदात्मनोऽपथ्यं परेषां न तदाचरेत् ॥६५॥**

आश्रम विशेष नै धर्म गर्नलाई कारण हुने गर्दैन (सबै आश्रममा धर्म हुन्छ नै) । यसैले जुन कुरा आफूलाई राम्रो लाग्दैन त्यो कुरा अरुलाई लाद्न नखोज्नू ।

**सत्यमस्तेयमक्रोधो ह्रीः शौचं धीर्धृतिर्दमः ।**
**संयतेन्द्रियता विद्या धर्मः सर्व उदाहृतः ॥६६॥**

साँचो बोल्नु, चोरी नगर्नु, नरिसाउनु, लाज मान्नु, पवित्र रहनु, बुद्धिमान हुनु, धैर्यशाली हुनु, शान्त रहनु, इन्द्रियलाई नियन्त्रण गर्नु र विद्याको अभ्यास गर्नु : यी सबै धर्मका लक्षण हुन् ।

**निःसरन्ति यथा लोह पिण्डात्तप्तात्स्फुलिङ्गकाः ।**
**सकाशादात्मनस्तद्वदात्मानः प्रभवन्ति हि ॥६७॥**

जसरी तातो पारिएको फलामको डल्लोबाट आगोका ससाना झिल्का उड्दछन् त्यसरी नै परमात्मारूपी आगाको डल्लोबाट जीवात्मारूपी झिल्काको जन्म भएको हो भनिन्छ ।

**तत्रात्मा हि स्वयं किञ्चित्कर्म किञ्चित्स्वभावतः ।**
**करोति किञ्चिदभ्यासाद्धर्माधर्मोभयात्मकम् ॥६८॥**

यहाँ फेरी धर्म र अधर्मका डरलाग्दा काम केही त आत्मा आफैंले पनि गर्दछ, केही स्वभावका कारण हुने गर्दछन् भने केही अभ्यासले गर्दा हुने गर्दछन् ।

**निमित्तमक्षरः कर्त्ता बोद्धा ब्रह्म गुणी वशी ।**
**अजः शरीरग्रहणात्स जात इति कीर्त्यते ॥६९॥**



हुन त आत्मा सबै कुराको कारण, अविनाशी, कारक, ज्ञानदाता, व्यापक, इन्द्रियलाई नियन्त्रण गर्ने र कहिल्यै नजन्मने गुणको हुन्छ तै पनि शरीर ग्रहण गरेपछि मानिस त्यसलाई "जन्मियो" यसो भन्ने गर्दछन् ।

**सर्गादौ स यथाकाशं वायुं ज्योतिर्जलं महीम् ।**
**सृजत्येकोत्तरगुणाँस्तथा दत्ते भवन्नपि ॥७०॥**

सृष्टिको शुरुमा आकाश, वायु, तेज, जल र पृथ्वी क्रमशः एक एक गुण बढी लिएर सृष्टि गरिएका हुन्छन् । यी आआफ्ना गुणलाई बनाउँदछन् र उत्पन्न भई बोक्दछन् पनि ।

**आहुत्याप्यायते सूर्यः सूर्याद्वृष्टिरथौषधिः ।**
**तदन्नं रसरूपेण शुक्रत्वमधिगच्छति ॥७१॥**

होमले सूर्यको तेज बढ्दछ, सूर्यबाट वर्षा हुन्छ, वर्षाबाट अनेक प्रकारका औषधि र अन्न उत्पन्न हुन्छन्, यिनै औषधि र अन्नको रसबाट वीर्य बन्दछ ।

**स्त्रीपुंसयोस्तु संयोगे विशुद्धे शुक्रशोणिते ।**
**पञ्चधातून्स्वयं षष्ठ आदत्ते युगपत्प्रभुः ॥७२॥**

स्त्रीपुरुषको समागमबाट जब शुक्र र रज शुद्ध हुन पुग्दछ तब त्यहाँ पाँच धातु र छैटौं आत्मा ईश्वरको चाहना अनुसार एकैपटक समावेश हुन पुग्दछन् ।

**इन्द्रियाणि मनः प्राणो ज्ञानमायुः सुखं धृतिः ।**
**धारणा प्रेरणं दुःखं इच्छाहङ्कार एव च ॥७३॥**

इन्द्रिय, मन, प्राण, ज्ञान, आयु, सुख, धैर्य, स्मरणशक्ति, प्रेरण, दुःख इच्छा, अहङ्कार,...।

**प्रयत्न आकृतिर्वर्णः स्वरद्वेषौ भवाभवौ ।**
**तस्यैतदात्मजं सर्वमनादेरादिमिच्छतः ॥७४॥**

प्रयत्न, आकृति, वर्ण, स्वर-दोष, उत्पत्ति र नाश-यी सबै त्यही आत्माका आश्रयमा हुन्छन् । जब त्यो आत्मा उत्पन्न हुने चाहना गर्दछ..।



**प्रथमे मासि संक्लेद भूतो धातुविमूर्च्छितः ।**
**मास्यर्बुदं द्वितीये तु तृतीयेऽङ्गेन्द्रियैर्युतः ॥७५॥**

तब पहिलो महिनामा पृथ्वी आदि सूक्ष्म धातुबाट मूर्छित भई (त्यो गर्भ) थलथले हुन पुग्दछ । दोश्रो महिनामा कडा हुन्छ र तेश्रो महिनामा अङ्ग र इन्द्रियले युक्त हुने गर्दछ ।

**आकाशाल्लाघवं सौक्ष्म्यं शब्दं श्रोत्रं बलादिकम् ।**
**वायोश्च स्पर्शनं चेष्टां व्यूहनं रौक्ष्यमेव च ॥७६॥**

आकाशबाट हलुकापन, सूक्ष्मता, शब्द र बल आदि तथा वायुबाट स्पर्शता, हलचल गर्ने र रुखोपनको गुण ग्रहण गर्दछ ।

**पित्तात्तु दर्शनं पक्तिमौष्ण्यं रूपं प्रकाशिताम् ।**
**रसात्तु रसनं शैत्यं स्नेहं क्लेदं समार्दवम् ॥७७॥**

पित्तबाट दृश्यशक्ति, पचाउने क्षमता, गर्मी, रूप र प्रकाश गर्ने शक्ति प्राप्त गर्दछ । रसबाट

जिब्रो, शितलता, गिलोपन, ढीलोपन र कोमलता प्राप्त गर्दछ ।

**भूमेर्गन्धं तथा घ्राणं गौरवं मूर्तिमेव च ।**
**आत्मा गृह्णात्यजः सर्वं तृतीये स्पन्दते ततः ॥७८॥**

भूमिबाट गन्ध, नाक, गरुङ्गोपन र आकार ग्रहण गर्दछ । आत्मा पनि तेश्रो महिनामा नै ग्रहण गर्दछ । यसपछि उ अलिअलि हलचल गर्न थाल्दछ ।

**दौहृदस्याप्रदानेन गर्भो दोषं अवाप्नुयात् ।**
**वैरूप्यं मरणं वापि तस्मात्कार्यं प्रियं स्त्रियाः ॥७९॥**

दोहद (गर्भवतीको चाहना) पूरा नगरिदिनाले गर्भ कुरुप हुने, तुहिने आदि हुने गर्दछ । यसैले गर्भवतीलाई जे मन पर्दछ त्यतिखेर त्यही गरिदिनु पर्दछ ।

**स्थैर्यं चतुर्थे त्वङ्गानां पञ्चमे शोणितोद्भवः ।**
**षष्ठे बलस्य वर्णस्य नखरोम्णां च सम्भवः ॥८०॥**



चौथो महिनामा हात, गोडा आदि अङ्ग बलिया हुन थाल्दछन्, पाँचौं महिनामा रगत उत्पन्न हुन्छ र छैटौं महिनामा बल, वर्ण र रौंको विकास हुन्छ ।

**मनश्चैतन्ययुक्तोऽसौ नाडीस्नायुशिरायुतः ।**
**सप्तमे चाष्टमे चैव त्वङ्मांसस्मृतिमानपि ॥८१॥**

सातौं महिनामा मन, चेतना, नाडी, स्नायु र शिरा जेलिन थाल्दछ । आठौं महिनामा छाला, मासु र सम्झना शक्ति प्राप्त गर्दछ ।

**पुनर्धात्रीं पुनगर्भमोजस्तस्य प्रधावति ।**
**अष्टमे मास्यतो गर्भो जातः प्राणैर्वियुज्यते ॥८२॥**

आठौं महिनामा गर्भको तेज (पिताको अंश) माताको पेटमा दौडने गर्दछ । यसैले आठौं महिनामा नै सुत्केरी भए बालकको देहभित्र जीव (प्राण) रहन सक्ने सम्भावना कम हुन्छ ।

**नवमे दशमे वापि प्रबलैः सूतिमारुतैः ।**

**निःसार्यते बाण इव यन्त्रच्छिद्रेण सज्वरः ॥८३॥**

नवौं वा दशौं महिनामा प्रसूति वायु (अपान वायु) ले गर्भलाई धनुबाट बाण छुटेजसरी जरो फुटाउँदै धकेलेर गर्भाशयबाट बाहिर निकाली दिन्छ ।

**तस्य षोढा शरीराणि शट् त्वचो धारयन्ति च ।**
**षडङ्गानि तथास्थ्नाञ्च सह षष्ट्या शतत्रयम् ॥८४॥**

उसले छ प्रकारको शरीर, छ नै प्रकारका छाला र छ अङ्ग तथा तीन सय साठी हाड धारण गर्दछ ।

**स्थालैः सह चतुःषष्टिर्दन्ता वै विंशतिर्नखाः ।**
**पाणिपादशलाकाश्च तेषां स्थानचतुष्टयम् ॥८५॥**

ती ३६० हाड हुन्- दाँत मुनि रहने गिजाको भित्री भागको हाड र बत्तीस वटा दाँत समेत गरी ६४, नङ २०, हातगोडाका चार ठाउँमा सुइरो वा किला जस्ता औंलाका मूल हाड २०,..। (कुल १०४) ।



**षष्ट्यङ्गुलीनां द्वे पार्ष्ण्योर्गुल्फेषु च चतुष्टयम् ।**
**चत्वार्यरत्निकास्थीनि जङ्घोस्तावदेव तु ॥८६॥**

औंलाका आँख्ली ६०, कुर्कुच्चामा २, गोलीगाँठा ४, हातमा ४, तिघ्रामा ४,..। (कुल ७४) ।

**द्वे द्वे जानुकपोलोरु फलकांससमुद्भवे ।**
**अक्षतालूषकश्रोणीफलके च विनिर्दिशेत् ॥८७॥**

घुँडामा २, गालामा २, तिघ्रामा २, काँध (वा कुम) मा २, कञ्चटमा २, तालुमा २, नितम्बमा २, ..। (कुल १४)

**भगास्थ्येकं तथा पृष्ठे चत्वारिंशच्च पञ्च च ।**
**ग्रीवापञ्चदशास्थिः स्याज्जत्र्वेकैकं तथा हनुः ॥८८॥**

मलद्वारमा १, ढाडमा ४५, गर्धनमा १५, छाती र हातको भित्री जोर्नीमा २, चिउँडोमा १,...। (कुल ६४)

**तन्मूले द्वे ललाटाक्षि गण्डे नासाघनास्थिका ।**
**पार्श्वकाः स्थालकैः सार्धमर्बुदैश्च द्विसप्ततिः ॥८९॥**

चिउँडोको फेदमा २, निधारमा २, आँखामा २, गाला र आँखाका बीचमा २, नाकमा घन नामको १, कोखाको तल स्थालक र अर्बुद सहितका बहत्तर हाड हुन्छन् ।

**द्वौ शङ्खकौ कपालानि चत्वारि शिरसस्तथा ।**
**उरः सप्तदशास्थीनि पुरुषस्यास्थिसङ्ग्रहः ॥९०॥**

कनपारामा २, टाउकामा ४, छातीमा १७ गरी पुरुषका शरीरमा ३६० हाड हुन्छन् ।

**गन्धरूपरसस्पर्शशब्दाश्च विषयाः स्मृताः ।**
**नासिका लोचने जिह्वा त्वक् श्रोत्रञ्च इन्द्रियाणि च ॥९१॥**

गन्ध, रूप, रस, स्पर्श र शब्द-यि मानिसलाई बन्धनमा पार्ने कारण भएका हुनाले यिनलाई "विषय" भनिन्छ । यी विषयका ज्ञान हुने (वा गराउने) शरीरका अङ्गहरू क्रमशः नाक, आँखा, जिभ्रो, छाला र कानलाई ज्ञानेन्द्रिय भनिन्छ ।



**हस्तौ पायुरुपस्थञ्च जिह्वा पादौ च पञ्च वै ।**
**कर्मेन्द्रियाणि जानीयान्मनश्चैवोभयात्मकम् ॥९२॥**

हात, मलद्वार, जननेन्द्रिय, जिभ्रो र गोडा कर्मेन्द्रिय हुन् । मन ज्ञानेन्द्रिय र कर्मेन्द्रिय दुवै हो ।

**नाभिरोजो गुदं शुक्रं शोणितं शङ्खकौ तथा ।**
**मूर्धा सकण्ठहृदयं प्राणस्यायतनानि तु ॥९३॥**

नाइटो, ओज (शरीरका रसहरूको सार), मलद्वार, शुक्र, रगत, कञ्चट, तालु, काँध, घाँटी र मुटु-यि प्राण रहने स्थान हुन् ।

**वपा वसावहननं नाभिः क्लोम यकृत्प्लिहा ।**
**क्षुद्रान्त्रं वृक्ककौ बस्तिः पुरीषाधानमेव च ॥९४॥**

बोसो, भित्री बोसो वा गिदी, फोक्सो (देब्रे), नाइटो, दाहिने फोक्सो, कलेजो, फियो, साना आन्द्रा, मृगौला, तल्लो पेट, मलाशय,..।

**आमाशयोऽथ हृदयं स्थूलान्त्रं गुद एव च ।**
**उदरञ्च गुदौ कोष्ठ्यौ विस्तारोऽयं उदाहृतः ॥९५॥**

खाना पचेर जम्मा हुने आमाशय, मुटु, ठूलो आन्द्रा, मलद्वार, पेट र गुदका दुई कोठा पनि प्राण रहने सहायक स्थान हुन् ।

**कनीनिके चाक्षिकूटे शष्कुली कर्णपत्रकौ ।**
**कर्णौ शङ्खौ भ्रुवौ दन्त वेष्टावोष्ठौ ककुन्दरे ॥९६॥**

आँखाका पुतली, आँखाका नाकतिरका कुना, कानको भित्री भाग, कानको बाहिरी भाग, कान, कञ्चट, आँखीभुइँ, गिजा, ओठ, फिलामा पर्ने खाल्टो,..।

**वङ्क्षणौ वृषणौ वृक्कौ श्लेष्मसङ्घातजौ स्तनौ ।**
**उपजिह्वा स्फिजौ बाहू जङ्घोरुषु च पिण्डका ॥९७॥**



काछ, अण्डकोष, मृगौला, दुई स्तन, रुद्रघण्टी, फिला, बाहु, तिघ्रा र यसका मांसपेशी,...।

**तालूदरं बस्तिशीर्षं चिबुके गलशुण्डिके ।**
**अवटश्चैवं एतानि स्थानान्यत्र शरीरके ॥९८॥**

तालु, पेट, तल्लो पेट, शिर, चिउँडो, लिगलिगे, र शरीरका अन्य दबेका भाग,..।

**अक्षिकर्णचतुष्कञ्च पद्धस्तहृदयानि च ।**
**नव छिद्राणि तान्येव प्राणस्यायतनानि तु ॥९९॥**

दुई आँखा, दुई कान, नाकका दुई प्वाल, मुख, गुदद्वार र मूत्रद्वार-यि शरीरका नौ छिद्र (प्वाल) हुन् । यी प्वाल तथा हात, गोडा र हृदय प्राण रहने स्थान हुन् ।

**शिराः शतानि सप्तैव नव स्नायुशतानि च ।**
**धमनीनां शते द्वे तु पञ्च पेशीशतानि च ॥१००॥**

शिरा सात सय, स्नायु नौ सय, धमनी दुई सय, मोटा नसा (मसल) पाँच सय हुन्छन् ।

**एकोनत्रिंशल्लक्षाणि तथा नव शतानि च ।**
**षट् पञ्चाशच्च जानीत शिरा धमनि संज्ञिताः ॥१०१॥**

शिरा र धमनीका अन्य शाखा नसा २९ लाख ९ सय ५६ हुन्छन् ।

**त्रयो लक्षास्तु विज्ञेयाः श्मश्रुकेशाः शरीरिणाम् ।**
**सप्तोत्तरं मर्मशतं द्वे च संधिशते तथा ॥१०२॥**

दाह्री, कपाल र जुँगा समेतको संख्या ३ लाख हुन्छ । मर्मस्थल १०७ वटा हुन्छन् ।
हाडका जोर्नी २ सय हुन्छन् ।

**रोम्णां कोटयस्तु पञ्चाशच्चतस्रः कोटय एव च ।**
**सप्तषष्टिस्तथा लक्षाः सार्धाः स्वेदायनैः सह ॥१०३॥**

सबै रौं (पसिना निस्कने ठाउँ) को संख्या ५४ करोड ६७ लाख ३३ हजार ५ सय हुन्छन् ।



**वायवीयैर्विगण्यन्ते विभक्ताः परमाणवः ।**
**यद्यप्येकोऽनुवेत्त्येषां भावनाञ्चैव संस्थितिम् ॥१०४॥**

यो कुरा वायुको सूक्ष्म तत्व विभाजन गर्ने विज्ञान जान्नेहरूले मात्र गणना गर्न सक्दछन् ।
आँखाले देख्न नसकिने हुनाले यो कठिन सूक्ष्म ज्ञान जसले जान्दछ त्यो परम बुद्धिमान् हुन्छ ।

**रसस्य नव विज्ञेया जलस्याञ्जलयो दश ।**
**सप्तैव तु पुरीषस्य रक्तस्याष्टौ प्रकीर्तिताः ॥१०५॥**

शरीरमा रस नौ अँजुली, जल दश अँजुली, मल सात अँजुली, रगत आठ अँजुली,..।

**षट् श्लेष्मा पञ्च पित्तं तु चत्वारो मूत्रमेव च ।**
**वसा त्रयो द्वौ तु मेदो मज्जैकोर्ध्वं तु मस्तके ॥१०६॥**

कफ छ अँजुली, पित्त पाँच अँजुली, मूत्र चार अँजुली, बोसो तीन अँजुली, मांसरस दुई अँजुली र

मासी पूरा शरीरमा एक अँजुली र टाउकामा आधा अँजुली हुन्छ ।

**श्लेष्मौजसस्तावदेव रेतसस्तावदेव तु ।**
**इत्येतदस्थिरं वर्ष्म यस्य मोक्षाय कृत्यसौ ॥१०७॥**

कफको सार र वीर्य पनि डेढ अँजुली नै हुन्छ । यसरी हाड, मासु आदि अपवित्र वस्तुले यो शरीर बनेको हुन्छ र अस्थिर हुन्छ, जसले यि कुरा जान्दछ उ मोक्ष हुनका लागि योग्य हुन्छ ।

**द्वासप्ततिसहस्राणि हृदयादभिनिःसृताः ।**
**हिताहिता नाम नाडयस्तासां मध्ये शशिप्रभम् ॥१०८॥**

मुटुबाट निस्केका हित र अहित नाम गरिएका ७२ हजार इडा, पिङ्गला र सुषुम्ना नाडी-यि सबैका बीचमा चन्द्रमा समान प्रकाशित..।

**मण्डलं तस्य मध्यस्थ आत्मा दीप इवाचलः ।**
**स ज्ञेयस्तं विदित्वेह पुनराजायते न तु ॥१०९॥**



एक घेरामा हावा नलागेको ठाउँमा बालिएको बत्तीझैं स्थिर भएर प्रकाशित भइरहेको आत्मा हुन्छ । जसले यो आत्मालाई जान्दछ वा देख्दछ उसले फेरी यो संसारमा आउनु पर्दैन ।

**ज्ञेयं चारण्यकमहं यदादित्यादवाप्तवान् ।**
**योगशास्त्रञ्च मत्प्रोक्तं ज्ञेयं योगमभीप्सता ॥११०॥**

जो योग-विज्ञ हुन चाहन्छ उसले मैले (याज्ञवल्क्यले) सूर्यबाट उपदेश पाई लेखेको बृहदारण्यक र योगशास्त्र पढोस् ।

**अनन्यविषयं कृत्वा मनोबुद्धिस्मृतीन्द्रियम् ।**
**ध्येय आत्मा स्थितो योऽसौ हृदये दीपवत्प्रभुः ॥१११॥**

मन, बुद्धि, स्मृति र इन्द्रियलाई विषय वासनाबाट हटाई हृदयमा रहेका, स्थिर-दीप समान प्रकाशित आत्मारूपी ईश्वरलाई ध्यान गर्ने गर्नू ।

**यथाविधानेन पठन्सामगायमविच्युतम् ।**

**सावधानस्तदभ्यासात्परं ब्रह्माधिगच्छति ॥११२॥**

आत्माको ध्यान गर्न सकिएन भने सावधान भई विधिपूर्वक सामवेद पढ्नू र त्यसपछि ध्यान गर्ने अभ्यास गर्नू, परब्रह्मको ज्ञान हुन्छ ।

**अपरान्तकमुल्लोप्यं मद्रकं प्रकरीन्तथा ।**
**औवेणकं सरोबिन्दुमुत्तरं गीतकानि च ॥११३॥**

जसको ध्यान त्यसमा पनि लाग्दैन उसले अपरान्तक (?), उल्लोप्य, मद्रक, प्रकरी, औवेणक, सरोबिन्दु र उत्तर नामका सात प्रकारका गीत तथा आसारित, वर्धमानक आदि महागीत,..।

**ऋग्गाथा पाणिका दक्ष विहिता ब्रह्मगीतिका ।**
**गेयं एतत्तदभ्यास करणान्मोक्षसञ्ज्ञितम् ॥११४॥**

ऋग्गाथा, पाणिका, दक्षविहिता र ब्रह्मगीतिका गाउनू । यी गीत गाउने अभ्यास गर्नाले चित्त एकाग्र हुन्छ र मोक्षको ढोका खोल्दछ ।



**वीणावादनतत्त्वज्ञः श्रुतिजातिविशारदः ।**
**तालज्ञश्चाप्रयासेन मोक्षमार्गं नियच्छति ॥११५॥**

विधिपूर्वक वीणा बजाउने जान्ने, सात स्वरमा बाईस प्रकारका हुने भेद अर्थात् श्रुति र अठार प्रकारका यसका उप-भेद अर्थात् जातिलाई जान्ने तथा गीतको ताल जान्ने भएपछि (सम्पूर्ण ध्यान त्यसमा केन्द्रित हुने हुनाले) मानिस आत्मालाई (पनि) ध्यान गर्न सक्षम हुन पुग्दछ र आत्माको ध्यान गरेर मोक्ष हुन सक्दछ ।

**गीतज्ञो यदि योगेन नाप्नोति परमं पदम् ।**
**रुद्रस्यानुचरो भूत्वा तेनैव सह मोदते ॥११६॥**

सङ्गीतमा पोख्त भएर मानिसले योग गर्दा आत्माको ध्यान गर्न सकेन वा जानेन भने पनि उ रुद्रको अनुचर हुन पुगी तिनैसँग रमाउन पुग्दछ ।

**अनादिरात्मा कथितस्तस्यादिस्तु शरीरकम् ।**
**आत्मनस्तु जगत्सर्वं जगतश्चात्मसम्भवः ॥११७॥**

यो प्रकरणमा जेजति कुरा बताइए ती सबैबाट थाहा हुन्छ कि आत्मा अनादि छ । आत्मा जन्मियो भन्नुको मतलब उसले शरीर धारण गऱ्यो भनी जान्नु पर्दछ (वास्तवमा आत्मा अजन्मा हुन्छ) । आत्माबाटै सारा जगत, पञ्चमहाभूत र जीव जन्मने गर्दछन् भनिएको छ ।

**कथमेतद्विमुह्यामः सदेवासुरमानवम् ।**
**जगदुद्भूतमात्मा च कथं तस्मिन्वदस्व नः ॥११८॥**

देवता, असुर र मानिस समेत यो संसार कसरी बन्यो ? अनि त्यसमा आत्मा कसरी रहन पुग्यो ? कुरो बुझिएन स्पष्ट पार्नु होस् (भनी ऋषिहरूले याज्ञवल्क्यलाई सोधे) ।

**मोहजालमपास्येह पुरुषो दृश्यते हि यः ।**
**सहस्रकरपन्नेत्रः सूर्यवर्चाः सहस्रकः ॥११९॥**

(याज्ञवल्क्यले भने) संसारमा व्याप्त मोहजाललाई छाडी जुन् असंख्य हात, गोडा र आँखा हुने सूर्यसमान तेजस्वी र हजारौं शिर भएको...।

**स आत्मा चैव यज्ञश्च विश्वरूपः प्रजापतिः ।**

**विराजः सोऽन्नरूपेण यज्ञत्वमुपगच्छति ॥१२०॥**

(जुन तत्व छ) त्यसैलाई आत्मा वा यज्ञ भनिन्छ । यही विराट् यज्ञपुरुषको अन्नरूपबाट यज्ञ हुन्छ । यज्ञबाट वृष्टि हुन्छ र वृष्टि नै जगतको आधार हुन्छ ।

**यो द्रव्यदेवतात्यागसम्भूतो रस उत्तमः ।**
**देवान्सन्तर्प्य स रसो यजमानं फलेन च ॥१२१॥**

देवताका लागि भनी जेजस्ता वस्तु दिइन्छन् त्यसबाट यो सारा संसार जन्माउने उत्तम बीज-रस उत्पन्न हुने गर्दछ । त्यो रस देवतालाई तृप्त पार्दै र जजमानलाई फलले सन्तुष्ट पार्दै...।

**संयोज्य वायुना सोमं नीयते रश्मिभिस्ततः ।**
**ऋग्यजुः सामविहितं सौरं धामोपनीयते ॥१२२॥**

वायुसँग मिसिएर वा वायुका बलले चन्द्रमण्डलमा पुग्दछ । त्यसपछि त्यो रस चन्द्रकिरण मार्फत सूर्यमण्डलमा पुगी ऋक्, यजु र सामको रूप धारण गर्दछ ।

**खमण्डलादसौ सूर्यः सृजत्यमृतमुत्तमम् ।**
**यज्जन्म सर्वभूतानामशनानशनात्मनाम् ॥१२३॥**

सूर्यले आफ्नो मण्डलबाट वृष्टिरुपी अमृत उत्पन्न गर्दछन् यही अमृत नै संसारका सबै चलायमान र स्थिर वस्तुको उत्पत्तिको कारण हो ।

**तस्मादन्नात्पुनर्यज्ञः पुनरन्नं पुनः क्रतुः ।**
**एवमेतदनाद्यन्तं चक्रं सम्परिवर्तते ॥१२४॥**

त्यो वर्षाबाट अन्न उब्जन्छ र त्यो अन्नबाट पुनः यज्ञ गरिन्छ । यज्ञबाट फेरी माथि बताइएकै क्रममा अन्न हुन्छ । यो प्रक्रिया अनादि कालदेखि चल्दै आएको छ र यसैमा अविनाशी संसार घुमिरहने गर्दछ ।

**अनादिरात्मा सम्भूतिर्विद्यते नान्तरात्मनः ।**
**समवायी तु पुरुषो मोहेच्छाद्वेषकर्मजः ॥१२५॥**

आत्मा अनादि छ त्यसैले अन्तरात्मा जन्मने भन्ने हुँदैन । यसो हुँदाहुँदै पनि उ शरीरसँग आवद्ध भएर उसले भोग्ने सुखदुःख आदिसँग सम्बन्धित हुने गर्दछ । यस्तो सम्बन्ध मोह, इच्छा, द्वेष आदि मार्फत उसले गर्ने कर्म अनुसार हुने गर्दछ ।



**सहस्रात्मा मया यो व आदिदेव उदाहृतः ।**
**मुखबाहूरुपज्जाः स्युस्तस्य वर्णा यथाक्रमम् ॥१२६॥**

मैले जुन् हजारौं आत्माका विराट् पुरुषका कुरा गरेँ, तिनैका मुख, हात, तिघ्रा र गोडाबाट क्रमैले चार वर्ण उत्पन्न भएका हुन् ।

**पृथिवी पादतस्तस्य शिरसो द्यौरजायत ।**
**नस्तः प्राणा दिशः श्रोत्रात्स्पर्शाद्वायुर्मुखाच्छिखी ॥१२७॥**

उनका मुखबाट पृथ्वी, शिरबाट आकाश, नाकबाट प्राण, कानबाट दशवटा दिशा, स्पर्शबाट वायु, मुखबाट अग्नि,...।

**मनसश्चन्द्रमा जातश्चक्षुषश्च दिवाकरः ।**
**जघनादन्तरिक्षञ्च जगच्च सचराचरम् ॥१२८॥**

मनबाट चन्द्रमा, आँखाबाट सूर्य, र तिघ्राबाट अन्तरिक्ष र सारा संसार उत्पन्न हुने गर्दछ ।

**यद्येवं स कथं ब्रह्मन्पापयोनिषु जायते ।**
**ईश्वरः स कथं भावैरनिष्टैः सम्प्रयुज्यते ॥१२९॥**

ऋषिहरूले सोधे-हे ब्रह्मन् ! आत्मा नै जीव भए त्यो किन पापयोनिमा जन्मने गर्दछ त ? अनि आत्मा ईश्वर भए उ जसमा शरीर बनेर जन्म लिन्छ त्यो शरीरमा अनिष्टकारी भावना नआउनु पर्ने होइन र ? यसको संयोजन कसरी गरिन्छ ?

**करणैरन्वितस्यापि पूर्वं ज्ञानं कथञ्चन ।**
**वेत्ति सर्वगतां कस्मात्सर्वगोऽपि न वेदनाम् ॥१३०॥**

मन आदिका ज्ञान इन्द्रियले युक्त हुन्छन् भने उसलाई पूर्वजन्मको ज्ञान किन हुँदैन ? आत्मा नै सबैमा छ भने त्यसले सुखदुःख आदि किन थाहा पाउँदैन ?

**अन्त्यपक्षिस्थावरतां मनोवाक्कायकर्मजैः ।**
**दोषैः प्रयाति जीवोऽयं भवयोनिशतेषु च ॥१३१॥**



याज्ञवल्क्य भन्दछन्-जीव ईश्वरको अंश भएपनि मन, वचन र शरीरले गर्ने कर्मका कारण जीव अनेक (सैयौं) जुनीमा जन्मने गर्दछ ।

**अनन्ताश्च यथा भावाः शरीरेषु शरीरिणाम् ।**
**रूपाण्यपि तथैवेह सर्वयोनिषु देहिनाम् ॥१३२॥**

जीवका शरीरमा हुने अनन्त भाव अनुसार सबै जुनीमा जीवले धारण गर्ने शरीर हुन्छन् ।

**विपाकः कर्मणां प्रेत्य केषाञ्चिदिह जायते ।**
**इह वामुत्र वैकेषां भावस्तत्र प्रयोजनम् ॥१३३॥**

जीवमा जस्तो भावना हुन्छ त्यही अनुसार कर्मको फल कसैले यही लोकमा, कसैले परलोकमा त कसैले दुबै लोकमा भोग्नु पर्ने हुन्छ ।

**परद्रव्याण्यभिध्यायंस्तथानिष्टानि चिन्तयन् ।**

**वितथाभिनिवेशी च जायतेऽन्यासु योनिषु ॥१३४॥**

अर्काको वस्तु के गरी हडप्ने भनी हरपल सोच्ने, अनिष्ट सोच्ने र असत्य सङ्कल्प गर्ने मानिस (अर्को जन्ममा) अन्त्यज भएर जन्मन्छ ।

**पुरुषोऽनृतवादी च पिशुनः परुषस्तथा ।**
**अनिबद्धप्रलापी च मृगपक्षिषु जायते ॥१३५॥**

जो झूट बोल्दछ, कुरा लगाउँदछ, कठोर वचन बोल्दछ, बकम्फुसे गफ गर्दछ उ मृग एवं पंक्षीको योनिमा जन्मन पुग्दछ ।

**अदत्तादाननिरतः परदारोपसेवकः ।**
**हिंसकश्चाविधानेन स्थावरेष्वभिजायते ॥१३६॥**

जो कहिल्यै दिन जान्दैन लिन्छ मात्र, जो परस्त्रीमा आशक्त हुने गर्दछ र जो यज्ञ आदि नगरी पशुपंक्षी मार्दछ उ स्थावर योनिमा जन्मने गर्दछ ।



**आत्मज्ञः शौचवान्दान्तस्तपस्वी विजितेन्द्रियः ।**
**धर्मकृद्वेदविद्यावित्सात्त्विको देवयोनिताम् ॥१३७॥**

जो आत्मज्ञानी, शौचशील, शान्तिप्रिय, तपस्वी, इन्द्रियलाई वशमा पार्ने, धार्मिक, वेदज्ञ र सात्विक गुणको छ उ देवयोनिमा जन्मन पुग्दछ ।

**असत्कार्यरतो धीर आरम्भी विषयी च यः ।**
**स राजसो मनुष्येषु मृतो जन्माधिगच्छति ॥१३८॥**

जो नाचगान आदि जस्ता व्यर्थका काममा धेरै लाग्दछ, जो चञ्चल चित्तको हुन्छ, जो विषयवासनामा लुटपुटिने गर्दछ यस्तो रजोगुणी मानिस मानिसकै योनिमा जन्मने गर्दछ ।

**निद्रालुः क्रूरकृल्लुब्धो नास्तिको याचकस्तथा ।**
**प्रमादवान्भिन्नवृत्तो भवेत्तिर्यक्षु तामसः ॥१३९॥**

सुताहा, निष्ठूर, लोभी, नास्तिक, माग्ने, प्रमादी र उल्टो आचार गर्ने तामसी गुणको

मानिस पशुपंक्षीका योनिमा जन्मन पुग्दछ ।

**रजसा तमसा चैवं समाविष्टो भ्रमन्निह ।**
**भावैरनिष्टैः संयुक्तः संसारं प्रतिपद्यते ॥१४०॥**

यसरी रज र तम गुणले युक्त भई अनेक थरी दुःखदायी भाव सहित जीव पटक पटक शरीर धारण गर्ने गर्दछ ।

**मलिनो हि यथादर्शो रूपालोकस्य न क्षमः ।**
**तथाविपक्वकरण आत्मज्ञानस्य न क्षमः ॥१४१॥**

जसरी मैलो ऐनामा आफ्नो रूप देखिन्न त्यसैगरी राग, द्वेष, माया आदिले ग्रस्त भएको आत्मा पनि पूर्वजन्मका कुरा थाहा पाउन असमर्थ हुने गर्दछ ।

**कट्वेर्वारौ यथापक्वे मधुरः सन्नसोऽपि न ।**
**प्राप्यते ह्यात्मनि तथा नापक्वकरणे ज्ञता ॥१४२॥**



जसरी काँचो एवं तीतो काँक्रोमा नपाकिकन गुलियो वा मिठास पस्दैन त्यसरी नै राग, द्वेष आदि मलले जेलिएको आत्मामा पूर्वजन्मका कुरा पस्न सक्दैन ।

**सर्वाश्रयां निजे देहे देही विन्दति वेदनाम् ।**
**योगी मुक्तश्च सर्वासां यो न चाप्नोति वेदनाम् ॥१४३॥**

जसलाई आफ्नो शरीरको घमण्ड हुन्छ उसैले शरीरमा आश्रित हुने सबै प्रकारका पीडा खप्नु पर्दछ । जुन् योगी अहङ्कार आदि सबै खाले विकृतिबाट पर हुन्छ उसले अरुको पीडा जान्दछ र आफू पीडित हुँदैन ।

**आकाशमेकं हि यथा घटादिषु पृथग्भवेत् ।**
**तथात्मैको ह्यनेकश्च जलाधारेष्विवांशुमान् ॥१४४॥**

आकार एउटै हो तर पनि गाग्रो आदिका अनुसार विभिन्न भेद (घटाकाश, मठाकाश आदि) ले चिनिने गर्दछ, जसरी सूर्य एउटै भएर पनि जुन जुन भाँडामा पानी राखिन्छ त्यस त्यसमा फरक रूपमा देखिने गर्दछ, त्यसैगरी आत्मा एउटै भएर पनि अन्तकरण र नामले अनेकौं जस्तो देखिने गर्दछ ।

**ब्रह्मखानिलतेजांसि जलं भूश्चेति धातवः ।**
**इमे लोका एष चात्मा तस्माच्च सचराचरम् ॥१४५॥**

आत्मा, आकाश, वायु, अग्नि, जल र भूमि-यिनलाई धातु भन्ने गरिन्छ, किन कि यि शरीरमा व्यापक भएर बसी शरीरलाई नै धारण गर्ने गर्दछन् । यी आकाश आदिलाई मानिस जड पनि भन्ने गर्दछन् । यिनै दुईबाट सारा संसार उत्पन्न हुन्छ ।

**मृद्दण्डचक्रसंयोगात्कुम्भकारो यथा घटम् ।**
**करोति तृणमृत्काष्ठैर्गृहं वा गृहकारकः ॥१४६॥**

जसरी माटो, लौरो र चक्रका सहायताले कुम्हाले भाँडाकुँडा बनाउँदछ, जसरी घाँसपात, माटो र काठका सहायताले डकर्मी घर बनाउँदछ,..।

**हेममात्रमुपादाय रूपं वा हेमकारकः ।**
**निजलालासमायोगात्कोशं वा कोशकारकः ॥१४७॥**



जसरी सुनारले सुनको सहायतामा अनेक थरीका गरगहना बनाउँदछ, जसरी आफ्नै र्‍यालको सहायताले माकुरो जाल बुन्दछ,..।

**कारणान्येवमादाय तासु तास्विह योनिषु ।**
**सृजत्यात्मानमात्मा च सम्भूय करणानि च ॥१४८॥**

त्यसरी नै इन्द्रिय र पञ्चमहाभूतको सहायतामा आत्माले स्वतः विभिन्न जुनिका शरीर बनाउँदछ ।

**महाभूतानि सत्यानि यथात्मापि तथैव हि ।**
**कोऽन्यथैकेन नेत्रेण दृष्टमन्येन पश्यति ॥१४९॥**

जसरी आका आदि पञ्चमहाभूत सत्य हुन्, त्यसैगरी आत्मा पनि सत्य हो । यदि यस्तो नहुँदो हो त आँखाले देखिएका कुरा शरीरका अरु अङ्गले नदेख्ने भन्ने नै हुदैनथ्यो,.. ।

**वाचं वा को विजानाति पुनः संश्रुत्य संश्रुताम् ।**
**अतीताथ स्मृतिः कस्य को वा स्वप्नस्य कारकः ॥१५०॥**

एकपटक सुनिएका कुरा फेरी त्यही सुनियो भनेर कसरी थाहा हुन्थ्यो ? धेरै पहिलेका कुरा कसरी सम्झना आउँदथ्यो ? सपनाका कुरा को सम्झन्थ्यो ?.. ।

**जातिरूपवयोवृत्त विद्यादिभिरहङ्कृतः ।**
**शब्दादिविषयोद्योगं कर्मणा मनसा गिरा ॥१५१॥**

जात, रूप, उमेर, विद्या आदिको घमण्ड कसलाई हुन्थ्यो ? सुन्न, छुन आदि विषय भोग गर्न को प्रयत्न गर्दथ्यो ? । यसैले बुद्धि र इन्द्रियभन्दा छुट्टै एउटा आत्मा छ (वा हुन्छ) भनेर प्रमाणित हुन्छ ।

**स सन्दिग्धमतिः कर्मफलमस्ति न वेति वा ।**
**विप्लुतः सिद्धमात्मानमसिद्धोऽपि हि मन्यते ॥१५२॥**

त्यो आत्मा, अहङ्कारले दूषित भई कर्मको फल छ वा छैन (पाइन्छ वा पाइन्न) भनेर बुद्धिमा द्विविधा उत्पन्न गर्दछ, आफू कृतार्थ नभए पनि कृतार्थ भएको भनी मान्दछ ।



**मम दाराः सुतामात्या अहमेषामिति स्थितिः ।**
**हिताहितेषु भावेषु विपरीतमतिः सदा ॥१५३॥**

त्यही अहङ्कारले गर्दा दूषित आत्माले नै मेरी स्त्री, मेरा छोरा, मेरा नोकर, म यिनको फलानो आदि तथा हितकारी र अहितकारी कर्ममा उल्टो बुद्धि उत्पन्न गर्ने गर्दछ, यही नै शास्त्रको विचार हो ।

**ज्ञेयज्ञे प्रकृतौ चैव विकारे वाऽविशेषवान् ।**
**अनाशकानलाघात जलप्रपतनोद्यमी ॥१५४॥**

आत्मज्ञानी आत्मा प्रकृति र यसका अहङ्कार आदि विकारले गर्दा विवेकहीन हुने गर्दछ र बेलाबेलामा शरीरलाई भोकै बस्न, आगोमा डढ्न, पानीमा डुब्न वा कतै भीरमा गएर हाम फाल्न मानिसलाई उक्साउने गर्दछ ।

**एवं वृत्तोऽविनीतात्मा वितथाभिनिवेशवान् ।**
**कर्मणा द्वेषमोहाभ्यामिच्छया चैव बध्यते ॥१५५॥**

यसरी विकारले जेलिएको आत्मा कठोर भई भूटो प्रतीज्ञा गर्दै कर्म, राग, द्वेष, इच्छा आदिले बाँधिने गर्दछ ।

**आचार्योपासनं वेद शास्त्रार्थेषु विवेकिता ।**
**तत्कर्मणामनुष्ठानं सङ्गः सद्भिर्गिरः शुभाः ॥१५६॥**

विद्याका लागि योग्य गुरुको उपासना, वेदान्त र योगशास्त्र जस्ता शास्त्रका अर्थमा विवेक लगाउने, ती शास्त्रमा बताएका कुरा व्यवहारमा उतार्ने, सज्जनको सङ्गत गर्ने, प्रिय र शुभ वचन बोल्ने,..।

**स्त्र्यालोकालम्भविगमः सर्वभूतात्मदर्शनम् ।**
**त्यागः परिग्रहाणाञ्च जीर्णकाषायधारणम् ॥१५७॥**

स्त्रीलाई हेर्ने वा छुने चाहना रोक्ने, सबै जीवलाई आफूसरह मान्ने, परिवार (पत्नी, पुत्र आदि) वा धनसम्पत्तिको सङ्ग्रह गर्न छाड्ने, पुराना वस्त्र लगाउने,..।

**विषयेन्द्रियसंरोधस्तन्द्रालस्यविवर्जनम् ।**

**शरीरपरिसङ्ख्यानं प्रवृत्तिष्वघदर्शनम् ॥१५८॥**

विषयतिर जानबाट इन्द्रियलाई रोक्ने, तन्द्रा र अल्छि नगर्ने, शरीरको अपवित्रताका बारेमा सचेत हुने, गमन आदि प्रवृत्तिमा पाप देख्ने,.. ।

**नीरजस्तमसा सत्त्व शुद्धिर्निःस्पृहता शमः ।**
**एतैरुपायैः संशुद्धः सत्त्वयोग्यमृती भवेत् ॥१५९॥**

प्राणायाम आदि मार्फत रजोगुण र तमोगुण छाड्ने, विषयको प्राप्तिमा सुख र अप्राप्तिमा दुःख हुने स्वभाव नियन्त्रण गर्ने, संयमित हुने, आदि उपायले शुद्ध भई केवल सत्वगुणी चिन्तनमा लीन हुने मानिस मोक्ष हुन्छ ।

**तत्त्वस्मृतेरुपस्थानात्सत्त्वयोगात्परिक्षयात् ।**
**कर्मणां संनिकर्षाच्च सतां योगः प्रवर्तते ॥१६०॥**

आत्मालाई निरन्तर सम्झनाले, शुद्धिले, कर्म नाश हुनाले र सत्सङ्गतले आत्माको दर्शन हुने गर्दछ ।

**शरीरसंक्षये यस्य मनः सत्त्वस्थमीश्वरम् ।**
**अविप्लुतमतिः सम्यक्सजातिसंस्मरतामियात् ॥१६१॥**

अहङ्कार आदि विकारले ग्रस्त बुद्धि नभएको मानिसको मन शरीर त्याग गर्नेबेलामा सत्वगुणी भएर ईश्वरमा लाग्दछ भने उ मोक्ष भएनछ भनेपनि उसलाई पूर्वजन्मका कुरा सबै सम्झना हुने गर्दछ ।

**यथा हि भरतो वर्णैर्वर्णयत्यात्मनस्तनुम् ।**
**नानारूपाणि कुर्वाणस्तथात्मा कर्मजास्तनूः ॥१६२॥**

जसरी रङ्गमञ्चमा कलाकारहरू विभिन्न रूप बनाउन अनेक थरीका भेषभूषा लगाउने गर्दछन् त्यसरी नै कर्म अनुसार फल भोग्न मिल्ने गरी उत्पन्न शरीरलाई आत्माले धारण गर्ने गर्दछ ।

**कालकर्मात्मबीजानां दोषैर्मातुस्तथैव च ।**
**गर्भस्य वैकृतं दृष्टं अङ्गहीनादि जन्मनः ॥१६३॥**



समयपरिस्थिति, कर्म, पिताको बीज र माताको रजमा हुने दोषका कारणले पनि गर्भका विकार भई अङ्गहीन आदि सन्तान जन्मने गर्दछन् ।

**अहङ्कारेण मनसा गत्या कर्मफलेन च ।**
**शरीरेण च नात्मायं मुक्तपूर्वः कथञ्चन ॥१६४॥**

अहङ्कार, मन आदिजस्ता संसारका स्वाभाविक दोषहरू, धर्म एवं अधर्मरूपी कर्मको फल तथा सूक्ष्म शरीरसँग, मोक्ष नहुँदासम्म यो आत्मा कहिल्यै छुट्टिँदैन ।

**वर्त्याधारस्नेहयोगाद्यथा दीपस्य संस्थितिः ।**
**विक्रियापि च दृष्टैवं अकाले प्राणसंक्षयः ॥१६५॥**

जसरी तेल हालेर दियोमा बालिएका अनेकौं बत्तीहरू हावाको एउटै झोक्काले एकैपटक निभाइ दिन्छ त्यसरी नै मानिसको पनि अकालमा ज्यान जाने गर्दछ ।

**अनन्ता रश्मयस्तस्य दीपवद्यः स्थितो हृदि ।**

**सितासिताः कर्बुरूपाः कपिला नीललोहिताः ॥१६६॥**

शरीरमा दियो बलेजसरी बलिरहेको आत्माका सेता, काला, रङ्गीचङ्गी,
कैला, नीला, राता आदि अनन्त किरण हुन्छन् ।

**ऊर्ध्वमेकः स्थितस्तेषां यो भित्त्वा सूर्यमण्डलम् ।**
**ब्रह्मलोकं अतिक्रम्य तेन याति परां गतिम् ॥१६७॥**

यि किरणमध्ये एउटा किरण सूर्यमण्डललाई पनि छेडेर ब्रह्मलोकभन्दा पनि पर
गइरहेको हुन्छ, मोक्षको मार्ग त्यही किरण हो ।

**यदस्यान्यद्रश्मिशतं ऊर्ध्वमेव व्यवस्थितम् ।**
**तेन देवशरीराणि सधामानि प्रपद्यते ॥१६८॥**

आत्माको मोक्षमार्ग भन्दा बाहेकका सैयौं माथितिर गइरहेका किरण मार्फत नै
विभिन्न देवलोक र देव-शरीर प्राप्त हुने गर्दछ ।



**येनैकरूपाश्चाधस्ताद्रश्मयोऽस्य मृदुप्रभाः ।**
**इह कर्मोपभोगाय तैः संसरति सोऽवशः ॥१६९॥**

त्यसभन्दा तलतिर रहेका कम उज्याला किरणबाट संसारमा
कर्मफल भोग्न जीवको जन्म हुने गर्दछ ।

**वेदैः शास्त्रैः सविज्ञानैर्जन्मना मरणेन च ।**
**आर्त्या गत्या तथाऽगत्या सत्येन ह्यनृतेन च ॥१७०॥**

वेद, शास्त्र, अनुभव, जन्म, मरण, दुःख, हलचल, जडता, साँचो, झूटो,..।

**श्रेयसा सुखदुःखाभ्यां कर्मभिश्च शुभाशुभैः ।**
**निमित्तशाकुनज्ञान ग्रहसंयोगजैः फलैः ॥१७१॥**

हितकारी कुरो पाउनु, सुख र दुःख, राम्रा र नराम्रा काम, साइतको ज्ञान, ग्रह आदिका फल,..।

**तारानक्षत्रसञ्चारैर्जागरैः स्वप्नजैरपि ।**
**आकाशपवनज्योतिर्जलभूतिमिरैस्तथा ॥१७२॥**

तारा-नक्षत्रको गति र फल, निदाउँदा वा ननिदाउँदा देखिने सपनाका फल,
आकाश-वायु-ज्योति-जल-भूमि, अन्धकार तथा,..।

**मन्वन्तरैर्युगप्राप्त्या मन्त्रौषधिफलैरपि ।**
**वित्तात्मानं वेद्यमानं कारणं जगतस्तथा ॥१७३॥**

मन्वन्तर, स्मृति, धारणा शक्ति, मन्त्र तथा औषधीका फल-यी कुराले गर्दा शरीरबाट
आत्मा बेग्लै छ (वा हुन्छ) र त्यही नै संसारको कारण हो भनी बुझ ।

**अहङ्कारः स्मृतिर्मेधा द्वेषो बुद्धिः सुखं धृतिः ।**
**इन्द्रियान्तरसञ्चार इच्छा धारणजीविते ॥१७४॥**

अहङ्कार, स्मरणशक्ति, धारणशक्ति, द्वेष, बुद्धि, सुख, धैर्य, एउटा इन्द्रियले थाहा पाएको
कुरा दोश्रो इन्द्रियले समझिने कार्य, इच्छा, धारण, बाँच्नु,..।



**स्वर्गः स्वप्नश्च भावानां प्रेरणं मनसो गतिः ।**
**निमेषश्चेतना यत्न आदानं पाञ्चभौतिकम् ॥१७५॥**

स्वर्ग, सपना, इन्द्रियका प्रेरणा, मनको गति, निमेष, चेतना, प्रयाश,
पञ्चमहाभूतलाई धारण गर्ने कार्य,..।

**यत एतानि दृश्यन्ते लिङ्गानि परमात्मनः ।**
**तस्मादस्ति परो देहादात्मा सर्वग ईश्वरः ॥१७६॥**

यी सबै कुरा परमात्माका लक्षण देखिन्छन् । यसैले शरीरभन्दा पर बेग्लै कुनै आत्मा छ, त्यो
नै सबैको ईश्वर हो र सबैमा व्याप्त छ भन्ने कुरा प्रमाणित हुन्छ ।

**बुद्धीन्द्रियाणि सार्थानि मनः कर्मेन्द्रियाणि च ।**
**अहङ्कारश्च बुद्धिश्च पृथिव्यादीनि चैव हि ॥१७७॥**
**अव्यक्तमात्मा क्षेत्रज्ञः क्षेत्रस्यास्य निगद्यते ।**

**ईश्वरः सर्वभूतस्थः सन्नसन्सदसच्च यः ॥१७८॥**

कान आदि ज्ञानेन्द्रिय, यि इन्द्रियका शब्द आदि विषय, मन, कर्मेन्द्रिय, अहङ्कार, बुद्धि, पृथ्वी आदि पञ्चमहाभूत र अव्यक्त प्रकृतिलाई यि ती परमात्माका क्षेत्र हुन् । ईश्वर- सबै जीवमा रहेका र प्रमाणले जान्न नसकिने हुनाले तथा सद्रूप र स्पष्ट प्रतीत नहुनाले सत् असत् रूपी आत्मा र क्षेत्रज्ञ भनेर पनि चिनिन्छन् ।

**बुद्धेरुत्पत्तिरव्यक्तात्ततोऽहङ्कारसम्भवः ।**
**तन्मात्रादीन्यहङ्कारादेकोत्तरगुणानि च ॥१७९॥**

सत्व, रज र तम गुण साम्य अवस्थामा हुँदा त्यसबाट बुद्धिको जन्म हुने गर्दछ । बुद्धिबाट अहङ्कार र अहङ्कारबाट तन्मात्रा आदि उत्पन्न हुन्छन् । यिनमा क्रमशः एक एक गुण बढी हुन्छन् ।

**शब्दः स्पर्शश्च रूपञ्च रसो गन्धश्च तद्गुणः ।**
**यो यस्मान्निःसृतश्चैषां स तस्मिन्नेव लीयते ॥१८०॥**



शब्द, स्पर्श, रूप, रस र गन्ध यि आकाश गरिएका पञ्चमहाभूतका गुण हुन् । जुन गुण जेबाट निस्कन्छन् प्रलय हुँदा त्यसैमा बिलीन हुन्छन् ।

**यथात्मानं सृजत्यात्मा तथा वः कथितो मया ।**
**विपाकात्त्रिप्रकाराणां कर्मणां ईश्वरोऽपि सन् ॥१८१॥**

ईश्वर भएर पनि यो आत्मा मानस आदि तीन प्रकारका कर्म विपाक ( कर्मका अधिनमा) भई कसरी जीवलाई रच्दछ भनेर मैले बताएँ ।

**सत्त्वं रजस्तमश्चैव गुणास्तस्यैव कीर्तिताः ।**
**रजस्तमोभ्यामाविष्टश्चक्रवद्भ्राम्यते ह्यसौ ॥१८२॥**

सत्व, रज र तम यी तीन गुण पनि उनैका हुन् भनेर पनि बताएँ । रज र तम गुणले युक्त भई चक्र घुमे जसरी आत्मा यो संसारमा घुम्ने कुरा पनि भने ।

**अनादिरादिमांश्चैव स एव पुरुषः परः ।**
**लिङ्गेन्द्रियग्राह्यरूपः सविकार उदाहृतः ॥१८३॥**

यो अनादि परम पुरुष शरीर धारण गर्ने जस्तो विकारले गर्दा चिह्न सहितको र इन्द्रियले जान्न वा देख्न योग्य पनि हुने गर्दछ ।

**पितृयानोऽजवीथ्याश्च यदगस्त्यस्य चान्तरम् ।**
**तेनाग्निहोत्रिणो यान्ति स्वर्गकामा दिवं प्रति ॥१८४॥**

अजविथि (आकाशमा शिशुमार चक्रमा हुने एउटा बाटो, जहाँ धेरै नक्षत्रहरू हुन्छन्) र अगस्त्य ताराका बीचमा रहेको बाटोबाट पितृयानमा बसी  स्वर्गको चाहना गरी अग्निहोत्र गर्नेहरू स्वर्ग जाने गर्दछन् ।

**ये च दानपराः सम्यगष्टाभिश्च गुणैर्युताः ।**
**तेऽपि तेनैव मार्गेण सत्यव्रतपरायणाः ॥१८५॥**

जो मानिस अहङ्कार छाडी दानशील हुँदै दया, क्षमा (क्षान्ति), इर्ष्या नगर्ने (अनसूया), शौच, अनायास (निरुद्यमी), मंगल, अकार्पण्य (कञ्जुस नहुने) र अस्पृहा (निर्लोभी)-आत्माका आठ गुणले युक्त हुन्छन् ती सबै सत्यवादी त्यही बाटो हुँदै स्वर्ग जान्छन् ।



**तत्राष्टाशीतिसाहस्रा मुनयो गृहमेधिनः ।**
**पुनरावर्तिनो बीजभूता धर्मप्रवर्तकाः ॥१८६॥**

त्यो पितृयानमा अठासी हजार गृहस्थधर्मी मुनिहरू रहन्छन् । सृष्टिको शुरुमा पटक पटक धर्मको उपदेश दिँदै त्यसको बीउ रोप्नु नै ती मुनिहरुको धर्म हुने गर्दछ ।

**सप्तर्षिनागवीथ्यन्तर्देवलोकं समाश्रिताः ।**
**तावन्त एव मुनयः सर्वारम्भविवर्जिताः ॥१८७॥**

सप्तर्षि र ऐरावत पथका बीचको देवलोकमा बस्ने अठासी हजार नै मुनिहरू सबै काम छोडी केवल ज्ञानमा लागी..।

**तपसा ब्रह्मचर्येण सङ्गत्यागेन मेधया ।**
**तत्र गत्वावतिष्ठन्ते यावदाभूतसम्प्लवम् ॥१८८॥**

तपस्या, ब्रह्मचर्य, संगति-त्याग र मेधा आदि गुणले युक्त भई महाप्रलय हुँदासम्म रहन्छन् ।

**यतो वेदाः पुराणानि विद्योपनिषदस्तथा ।**
**श्लोका सूत्राणि भाष्याणि यच्च किञ्चन वाङ्मयम् ॥१८९॥**

यिनैबाट वेद, पुराण, अङ्गविद्या, उपनिषद्, श्लोक, सूत्र, भाष्य आदि जेजति शास्त्र (वा साहित्य) छन् ती प्रचलित भएका हुन् ।

**वेदानुवचनं यज्ञो ब्रह्मचर्यं तपो दमः ।**
**श्रद्धोपवासः स्वातन्त्र्यमात्मनो ज्ञानहेतवः ॥१९०॥**

वेद पढ्नु, यज्ञ गर्नु, ब्रह्मचर्यमा रहनु, तपस्या गर्नु, इन्द्रियलाई वशमा राख्नु, धर्मप्रति श्रद्धा गर्नु, उपवास बस्नु र आत्मस्वतन्त्र हुनु-यी सब कार्यले ज्ञान प्राप्त हुन्छ ।

**स ह्याश्रमैर्विजिज्ञास्यः समस्तैरेवमेव तु ।**
**द्रष्टव्यस्त्वथ मन्तव्यः श्रोतव्यश्च द्विजातिभिः ॥१९१॥**

द्विजले हरेक आश्रममा रहँदा त्यो आत्मालाई खोज्ने गर्नू, त्यसैको मनन, ध्यान र विचारविमर्श गर्नू ।



**य एनमेवं विन्दन्ति ये चारण्यकमाश्रिताः ।**
**उपासते द्विजाः सत्यं श्रद्धया परया युताः ॥१९२॥**

जो द्विज अत्यन्त श्रद्धापूर्वक वनमा बसेर आत्माको ध्यान गर्दछ, उसले त्यसलाई प्राप्त गर्दछ ।

**क्रमात्ते सम्भवन्त्यर्चिरहः शुक्लं तथोत्तरम् ।**
**अयनं देवलोकञ्च सवितारं सवैद्युतम् ॥१९३॥**

जसलाई आत्मज्ञान प्राप्त हुन्छ, ती क्रमैले अग्नि, दिन, शुक्लपक्ष, उत्तरायण, देवलोक, सूर्य र विद्युत जस्ता मुक्तिमार्ग देखाउने देवताका लोकमा गई तिनकै जस्तो रूप प्राप्त गर्दछन् ।

**ततस्तान्पुरुषोऽभ्येत्य मानसो ब्रह्मलौकिकान् ।**
**करोति पुनरावृत्तिस्तेषामिह न विद्यते ॥१९४॥**

मनको सङ्कल्पबाट उत्पन्न भएका पुरुषाकार (जीव) ले तिनलाई ब्रह्मलोक पुऱ्याउने गर्दछन् ।

त्यहाँ पुगेपछि तिनको जन्म हुँदैन किन कि ती परमात्मामा बिलीन हुन्छन् ।

**यज्ञेन तपसा दानैर्ये हि स्वर्गजितो नराः ।**
**धूमं निशां कृष्णपक्षं दक्षिणायनमेव च ॥१९५॥**

जो यज्ञ, तपस्या र दानका कारण स्वर्गमा जान्छन् ती आफूले गरेको पुण्यको फल भोगी सकेपछि क्रमैले धुवाँ, रात, कृष्णपक्ष, दक्षिणायन,..।

**पितृलोकं चन्द्रमसं वायुं वृष्टिं जलं महीम् ।**
**क्रमात्ते संभवन्तीह पुनरेव व्रजन्ति च ॥१९६॥**

पितृलोक, चन्द्रलोक आदि प्राप्त गर्दछन् । त्यसपछि ती वायु, वृष्टिजल र भूमिमा मिसिएर अन्न आदि मार्फत वीर्य बनी संसारमा आउने गर्दछन् ।

**एतद्यो न विजानाति मार्गद्वितयमात्मवान् ।**
**दन्दशूकः पतङ्गो वा भवेत्कीटोऽथ वा कृमिः ॥१९७॥**



जो यी दुवै मार्गको अनुसरण गर्दैन उ सर्प, चरा, कीरा, फटयाङ्ग्रा आदि भई जन्मने गर्दछ ।

**ऊरुस्थोत्तानचरणः सव्ये न्यस्योत्तरं करम् ।**
**उत्तानं किञ्चिदुन्नाम्य मुखं विष्टभ्य चोरसा ॥१९८॥**

पद्मासनमा बसी , देब्रेहातको हत्केलामा दाहिने हात उत्तानो पारेर राख्दै मुख केही ठाडो पारी छातीले रोकी,..।

**निमीलिताक्षः सत्त्वस्थो दन्तैर्दन्तानसंस्पृशन् ।**
**तालुस्थाचलजिह्वश्च सम्वृतास्यः सुनिश्चलः ॥१९९॥**

आँखा चिम्लेर काम, क्रोध, आदि त्यागी दाँत नकिटी, तालुमा जिब्रो स्थिर राखी मुख बन्द गरेर हलचल नगरी बस्नू ।

**संनिरुध्येन्द्रियग्रामं नातिनीचोच्छ्रितासनः ।**
**द्विगुणं त्रिगुणं वापि प्राणायामुपक्रमेत् ॥२००॥**

इन्द्रियलाई आआफ्ना विषयतिर जानबाट राम्ररी रोकी, न धेरै अग्लो न धेरै होचो यस्तो आसनमा बसी दोब्बर वा तेब्बर प्राणायाम गर्ने अभ्यास गर्नू ।

**ततो ध्येयः स्थितो योऽसौ हृदये दीपवत्प्रभुः ।**
**धारयेत्तत्र चात्मानं धारणां धारयन्बुधः ॥२०१॥**

यसरी प्राणायामको अभ्यास गर्दै जाँदा जब प्राणवायु आफ्नो नियन्त्रणमा हुन्छ, तब निश्चल दियो समानका प्रभुलाई हृदयमा ध्यान गर्नू र त्यसैमा आत्मालाई स्थापना गर्नू । प्राणायामको एक विधि धारणलाई पनि विद्वानहरूले गर्ने गर्नू ।

**अन्तर्धानं स्मृतिः कान्तिर्दृष्टिः श्रोत्रज्ञता तथा ।**
**निजं शरीरमुत्सृज्य परकायप्रवेशनम् ॥२०२॥**

अदृश्य हुनु, बितेका कुरा सम्झनु, कान्तिमान हुनु, भइसकेका र अब हुने कुराहरु देख्नु, अती टाढाका कुरा पनि सुन्नु, आफ्नो शरीर छाडेर अर्काको शरीरमा प्रवेश गर्नु,..।

**अर्थानां छन्दतः सृष्टिर्योगसिद्धेर्हि लक्षणम् ।**
**सिद्धे योगे त्यजन्देहममृतत्वाय कल्पते ॥२०३॥**

जे चाहना गरे पनि त्यसलाई उत्पन्न गर्न सक्नु : यी योग सिद्धिका लक्षण हुन् । योगमा सिद्ध भएपछि जसले देहत्याग गर्दछ उ मोक्ष हुन्छ ।



**अथवाप्यभ्यसन्वेदं न्यस्तकर्मा वने वसन् ।**
**अयाचिताशी मितभुक्परां सिद्धिमवाप्नुयात् ॥२०४॥**

यदि यज्ञ, दान आदि गर्न सक्दैन भने कुनै एक वेदको अभ्यास गर्दै सबै काम छोडी वनमा जानू । त्यहाँ नमागीकन जे पाइन्छ त्यो थोरथोरै खाँदै बस्नू । यसरी पनि मोक्ष प्राप्त हुन्छ ।

**न्यायागतधनस्तत्त्वज्ञाननिष्ठोऽतिथिप्रियः ।**
**श्राद्धकृत्सत्यवादी च गृहस्थोऽपि हि मुच्यते ॥२०५॥**

जसले धर्मपूर्वक धन कमाएको छ, जो तत्वज्ञानमा निष्ठा राख्दछ, जो अतिथिलाई माया गर्दछ, जो श्राद्ध आदि गर्दछ, जो सत्य बोल्दछ, त्यो गृहस्थ पनि मोक्ष हुन्छ ।

**इत्यध्यात्म (यतिधर्म) प्रकरणम्**

*

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत सन्यास वा अध्यात्म धर्मप्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

*

## अथ प्रायश्चित्तप्रकरणम् (५)

**महापातकजान्घोरान्नरकान्प्राप्य दारुणान् ।**
**कर्मक्षयात्प्रजायन्ते महापातकिनस्त्विह ॥२०६॥**

महापापीहरु घोर नरकमा दुःखकष्ट भोग गरी कर्म क्षीण भएपछि पुनःपुनः निकृष्ट योनीमा जन्म लिई रहन्छन् ।

**मृग(गा)श्वसूकरोष्ट्राणां ब्रह्महा योनिमृच्छति ।**
**खरपुल्कसवेणानां सुरापो नात्र संशयः ॥२०७॥**

ब्रह्महत्या गर्ने मृग, कुकुर, सुँगुर र ऊँट भई जन्मन्छ । सुरासेवी पुल्कस, वैदेहक र अम्बष्ठ तथा गधा भई जन्मन्छ ।

**कृमिकीटपतङ्गत्वं स्वर्णहारी समाप्नुयात् ।**
**तृणगुल्मलतात्वञ्च क्रमशो गुरुतल्पगः ॥२०८॥**



सुनचोर मासु वा गुमूत को कीरा, कमिला र पुतली भई जन्मन्छ । गुरुपत्नीगामी घाँस, बुटो र लहरा भई जन्मन्छ ।

**ब्रह्महा क्षयरोगी स्यात्सुरापः श्यामदन्तकः।**
**हेमहारी तु कुनखी दुश्चर्मा गुरुतल्पगः ॥२०९॥**

ब्रह्महत्यारा क्षयरोगी, सुनचोर नङ काला र भद्दा भएर, सुरासेवी दाँत काला भएर तथा गुरुपत्नीगामी कुष्ठरोगी भएर जन्मन्छ ।

**यो येन सम्वसत्येषां स तल्लिङ्गोऽभिजायते ।**
**अन्नहर्तामयावी स्यान्मूको वागपहारकः ॥२१०॥**

यिमध्ये जुन पतितसँग जो पुरुष बस्दछ उ त्यही लिङ्गमा जन्मन्छ । अन्न चोर अजीर्णको रोगी र विद्या चोर लाटो हुन्छ ।

**धान्यमिश्रोऽतिरिक्ताङ्गः पिशुनः पूतिनासिकः ।**
**तैलहृत्तैलपायी स्यात्पूतिवक्त्रस्तु सूचकः ॥२११॥**

धानमा मिसावट गर्ने धेरैअङ्गी, चुक्लीखोर नाक गन्हाउने र तेलचोर कनसुत्लो हुन्छ ।
परस्परमा दोष देखाई अरुलाई एकआपसमा बभ्फाउने मुख गनाउने हुन्छ ।

**परस्य योषितं हृत्वा ब्रह्मस्वमपहृत्य च ।**
**अरण्ये निर्जले देशे भवति ब्रह्मराक्षसः ॥२१२॥**

ब्रह्मस्व र परस्त्री हरण गर्नेले अर्कोजन्ममा ब्रह्मराक्षस भई निर्जल वनमा बस्नु पर्दछ ।

**हीनजातौ प्रजायेत पररत्नापहारकः ।**
**पत्रशाकं शिखी हत्वा गन्धाञ्छुच्छुन्दरी शुभान् ॥२१३॥**

रत्न चोरी गर्नेले हेमकार पक्षी, सागपात चोरी गर्नेले मयूर र सुगन्धित
द्रव्य चोरी गर्नेले छुचुन्द्रो भई जन्मनु पर्दछ ।

**मूषको धान्यहारी स्याद्यानमुष्ट्रः कपिः फलम् ।**
**जलं प्लवः पयः काको गृहकारी ह्युपस्करम् ॥२१४॥**



धानचोर मुसो, बाहनचोर ऊँट, फलचोर बाँदर, जलचोर भ्यागुतो,
दूधचोर काग, मूसलादि चोर बारुलो हुन्छ ।

**मधु दंशः पलं गृध्रो गां गोधाग्निं बकस्तथा ।**
**श्वित्री वस्त्रं श्वा रसं तु चीरी लवणहारकः ॥२१५॥**

मह, मासु, गाई, आगो, वस्त्र, ऊखु आदि रस र नुन चोरे क्रमशः लामखुट्टे, गिद्ध, गोही,
बकुल्ला, श्वेतकुष्ठी, कुकुर र झ्याउँकीरी हुन्छ ।

**प्रदर्शनार्थमेतत्तु मयोक्तं स्तेयकर्मणि ।**
**द्रव्यप्रकारा हि यथा तथैव प्राणिजातयः ॥२१६॥**

मैले उदाहरणका लागि यति मात्र भने तर जस्ता वस्तु चोरेको हो उ
त्यस्तै जातिमा जन्मन्छ भनी यसबाट बुझ्नु पर्दछ ।

**यथाकर्म फलं प्राप्य तिर्यक्त्वं कालपर्ययात् ।**

**जायन्ते लक्षणभ्रष्टा दरिद्राः पुरुषाधमाः ॥२१७॥**

पापीले कर्म अनुसारको नरक भोगेछि पशुपक्षिको योनीमा जन्म लिँदै
पाप क्षीण भएपछि कुरुप दरिद्र भई निम्न जातमा जन्म लिन्छ ।

**ततो निष्कल्मषीभूताः कुले महति भोगिनः ।**
**जायन्ते विद्ययोपेता धनधान्यसमन्विताः ॥२१८॥**

निम्न जातमा जन्मी जन्म-जन्मान्तरसम्म नरक भोग्दै पाप कटेपछि
उच्च कुलमा जन्मी धन र विद्या सम्पन्न हुन्छ ।

**विहितस्याननुष्ठानन्निन्दितस्य च सेवनात् ।**
**अनिग्रहाच्चेन्द्रियाणां नरः पतनपृच्छति ॥२१९॥**

नित्य र नैमित्तिक कर्मको उपेक्षा, निन्दित कर्मको कर्ता र इन्द्रियको
वशमा पर्नु नै पतनका कारण देखिन्छन् ।



**तस्मात्तेनेह कर्तव्यं प्रायश्चित्तं विशुद्धये ।**
**एवमस्यान्तरात्मा च लोकश्चैव प्रसीदति ॥२२०॥**

पतनोन्मुख व्यक्ति बेलैमा होसियार भई प्रायश्चित गरी निषिद्ध कर्म गर्न छोड्दछ र
कर्तव्यकर्म गर्दछ भने उसको अन्तरात्मा शुद्ध भई लोक-परलोक सुध्रन्छ ।

**प्रायश्चित्तमकुर्वाणाः पापेषु निरता नराः ।**
**अपश्चात्तापिनः कष्टान्नरकान्यान्ति दारुणान् ॥२२१॥**

आफूले गरेको पापलाई ठीक मानी प्रायश्चितको रुपमा पश्चाताप नगर्ने व्यक्ति
ठूला कष्टकारी नरकमा दुःखकष्ट भोग गर्दछ ।

**तामिस्रं लोहशङ्कुञ्च महानिरयशाल्मली ।**
**रौरवं कुड्मलं पूतिमृत्तिकं कालसूत्रकम् ॥२२२॥**

तामिस्र, लोहशङ्कु, महानिरय, शाल्मली, रौरव, कुड्मल, पूतिमृत्तिक, कालसूत्रक, ...।

**सङ्घातं लोहितोदञ्च सविषं सम्प्रपातनम् ।**
**महानरककाकोलं सञ्जीवनमहापथम् ॥२२३॥**

सङ्घात, लोहितोद, सविष, सम्प्रपातन, महानरक, काकोल, सञ्जीवन, महापथ,...।

**अवीचिमन्धतामिस्रं कुम्भीपाकं तथैव च ।**
**असिपत्रवनञ्चैव तापनञ्चैकविंशकम् ॥२२४॥**

अवीचि, अन्धतामिस्र, कुम्भीपाक, असिपत्रवन र तापन एक्काईस वटा घोर नरकलोक हुन् ।

**महापातकजैर्घोरैरुपपातकजैस्तथा ।**
**अन्विता यान्त्यचरितप्रायश्चित्ता नराधमाः ॥२२५॥**

महापापी र घोर उपपापीहरु जो पश्चातापको रुपमा प्रायश्चित नगरी अधम भएका हुन्छन्, तिनले यिनै नरकमा परी दुःख पाउँदछन् ।

**प्रायश्चित्तैरपैत्येनो यदज्ञानकृतं भवेत् ।**
**कामतो व्यवहार्यस्तु वचनादिह जायते ॥२२६॥**



अनजानमा गरिएको पाप प्रायश्चितले कट्टा हुन्छ तर जानाजान गरेको पापको प्रायश्चित गर्नु उपहास मात्र हुन्छ ।

**ब्रह्महा मद्यपः स्तेनस्तथैव गुरुतल्पगः ।**
**एते महापातकिनो यश्च तैः सह सम्वसेत् ॥२२७॥**

ब्रह्महत्यारा, मदिरासेवी, ब्रह्मस्व चोर र गुरुपत्नीगामी महापापी हुन् र यसमा कुनै पनि रुपले सहभागी हुने मानिस पनि महापापी नै हुन्छन् ।

**गुरुणामध्यधिक्षेपो वेदनिन्दा सुहृद्वधः ।**
**ब्रह्महत्सासमं ज्ञेयमधीतस्य च नाशनम् ॥२२८॥**

गुरुलाई झुटो आरोप लगाउनु, वेदनिन्दा गर्नु, मित्रलाई विश्वासघात गर्नु र पढेका शास्त्रको अल्छी गरी अभ्यास नगर्नु ब्रह्महत्या सरहका पापकर्म हुन् ।

**निषिद्धभक्षणं जैह्म्यमुत्कर्षे च वचोऽनृतम् ।**
**रजस्वलामुखास्वादः सुरापानसमानि तु ॥२२९॥**

अभक्ष्य भक्षण, कुटिल व्यवहार, झुटो वचन र रजस्वला चुम्बन सुरा-सेवन समानका पाप हुन् ।

**अश्वरत्नमनुष्यस्त्रीभूधेनुहरणन्तथा ।**
**निक्षेपस्य च सर्वं हि सुवर्णस्तेयसम्मितम् ॥२३०॥**

घोडा, रत्न, सेवक, स्त्री, जमिन, गाई र नासो चोर्नु यि सबै सुन चोर्नु समानका पापकर्म हुन् ।

**सखिभार्याकुमारीषु स्वयोनिष्वन्त्यजासु च ।**
**सगोत्रासु सुतस्त्रीषु गुरुतल्पसमं स्मृतम् ॥२३१॥**

मित्रपत्नी, कुमारी कन्या, साक्खे दिदीबहिनी, चाण्डाल्नी, सगोत्रीया स्त्री र पुत्रवधु गमन गर्नु गुरुपत्नी गमन गर्नु सरहको पाप हो ।

**पितुः स्वसारं मातुश्च मातुलानीं स्नुषामपि ।**

**मातुः सपत्नीं भगिनीमाचार्यतनयान्तथा ॥२३२॥**

**आचार्यपत्नीं स्वसुतां गच्छँस्तु गुरुतल्पगः ।**
**लिङ्गं छित्त्वा वधस्तस्य सकामायाः स्त्रिया अपि ॥२३३॥**

फुपू, आमाका दिदीबहिनी, माइजू, छोराकी पत्नी, सौतेनी आमा, बहिनी, आचार्यपुत्री तथा आचार्यपत्नी र छोरी गमन गुरुपत्नी गमन समान घोर पाप हो । यस्ता पापीलाई लिङ्ग काटेर मार्नू र यसमा संलग्न हुने स्त्रीलाई पनि मार्नू ।

**गोवधो व्रात्यता स्तेयमृणानाञ्चानपक्रिया ।**
**अनाहिताग्निता पण्यविक्रयः परिवेदनम् ॥२३४॥**

गोहत्या गर्नु, समयमै व्रतबन्ध नगर्नु, चोरी गर्नु, समर्थतामा पनि ऋण नतिर्नु, अधिकारी भएर पनि यज्ञयागादि नगर्नु, बेच्न नहुने कुरा बेच्नु, दाजुभन्दा अगि विवाह गर्नु,...।

**भृतादध्ययनादानं भृतकाध्यापनन्तथा ।**
**पारदार्यं पारिवित्त्यं वार्धुष्यं लवणक्रिया ॥२३५॥**

पैसा लिनेसँग पढ्नु, पैसा तिरेर पढ्नु, परस्त्री गमन गर्नु, भाईको विहे गर्दा पनि अविवाहित बस्नु, चर्को ब्याज लिनु, नुन बनाउनु,..।

**स्त्रीशूद्रविट्क्षत्रवधो निन्दितार्थोपजीवनम् ।**
**नास्तिक्यं व्रतलोपश्च सुतानाञ्चैव विक्रयः ॥२३६॥**

स्त्री-शूद्र र उपनयन नगरेका वैश्य-शूद्रको हत्या गर्नु, निन्दितकर्मले धन कमाउनु, नास्तिकता, व्रतहीनता, छोरो बेच्नु,..।

**धान्यकुप्यपशुस्तेयमयाज्यानाञ्च याजनम् ।**
**पितृमातृसुतत्यागस्तडागारामविक्रयः ॥२३७॥**

धान-धातु-पशु चोर्नु, कुपात्रको यज्ञ गराउनु, माता-पिता-पुत्र त्याग्नु, तलाउ-उपवन बेच्नु,..।

**कन्यासन्दूषणञ्चैव परिविन्दकयाजनम् ।**
**कन्याप्रदानं तस्यैव कौटिल्यं व्रतलोपनम् ॥२३८॥**



कन्यालाई दूषित बनाउनु, परिवेत्तालाई बिहे गराउनु, त्यस्तालाई कन्या दिनु , उत्तेजित पारी सम्भोग नगरी औंला आदिले क्षति पुऱ्याउनु वा कुटिल व्यवहार गर्नु, आश्रमका नियम पालना नगर्नु,...।

**आत्मनोऽर्थे क्रियारम्भो मद्यपस्त्रीनिषेवणम् ।**
**स्वाध्यायाग्निसुतत्यागो बान्धवत्याग एव च ॥२३९॥**

आत्मकेन्द्रित हुनु, मदिरा सेवी स्त्रीको सङ्गत गर्नु, स्वाध्याय नगर्नु, अग्निहोत्र आदि त्याग्नु, निर्दोष पुत्रलाई हेंला गर्नु, नातागोता एवं बन्धुबान्धवलाई त्याग्नु,...।

**इन्धनार्थं द्रुमच्छेदः स्त्रीहिंसौषधजीवनम् ।**
**हिंस्त्रयन्त्रविधानञ्च व्यसनान्यात्मविक्रयः ॥२४०॥**

निजी कार्यका लागि हरियो रुख काट्नु, स्त्रीको हिंसा वा अपमान गर्नु, औषधीको पेसाले जीवन चलाउनु, व्यसनी हुनु, आफैंलाई (वा आत्मालाई) बेच्नु,...।

**शूद्रप्रेष्यं हीनसख्यं हीनयोनिनिषेवणम् ।**
**तथैवानाश्रमे वासः परान्नपरिपुष्टता ॥२४१॥**

निकृष्टको सङ्गत गर्नु, निकृष्ट स्त्री गमन गर्नु, आश्रमका नियमको उपेक्षा गर्नु, अर्काको अन्नमा भर पर्नु,..।

**असच्छास्त्राधिगमनमाकरेष्वधिकारिता ।**
**भार्याया विक्रयश्चैषामेकेकमुपपातकम् ॥२४२॥**

निन्दित शास्त्रको अनुसरण गर्नु, सुन-चाँदी आदिको खानी कब्जा गर्नु र पत्नी बेच्नु उपपाप हुन् ।

**शिरःकपाली ध्वजवान्भिक्षाशी कर्म वेदयन् ।**
**ब्रह्महा द्वादशाब्दानि मितभुक्शुद्धिमाप्नुयात् ॥२४३॥**

मारेको बाहुनको खप्पर हात वा लौरोमा बोकी मैले यस्तो पाप गरेँ भन्दै, अल्पाहारी र संयमित भई बाह्र वर्ष भिक्षा माग्नाले ब्रह्महत्याको पाप छुट्छ ।



**ब्राह्मणस्य परित्राणाद्गवां द्वादशकस्य च ।**
**तथाश्वमेधावभृथस्नानाद्वा शुद्धिमाप्नुयात् ॥२४४॥**

बाघ आदिबाट ब्राह्मणलाई जोगाए, सङ्कटमा रहेका बाह्र गाईको उद्धार गरे वा अश्वमेध यज्ञको अवभृथ स्नान गरे पनि त्यो पाप छुट्छ ।

**दीर्घतीव्रामयग्रस्तं ब्राह्मणं गामथापि वा ।**
**दृष्ट्वा पथि निरातङ्कं कृत्वा तु ब्रह्महा शुचिः ॥२४५॥**

दीर्घरोगी  ब्राह्मण वा गाईलाई घरमा लेराई औषधोपचार गरी स्वस्थ बनाए पनि ब्रह्महत्याको पापबाट मुक्ति हुन्छ ।

**आनीय विप्रसर्वस्वं हृतं घातित एव वा ।**
**तन्निमित्तं क्षतः शस्त्रैर्जीवन्नपि विशुद्ध्यति ॥२४६॥**

लुटिएका ब्राह्मणको सम्पत्ति लडेर फर्काउन सफल हुँदा तथा सो क्रममा घाइते हुँदा वा प्राण जाँदा पनि त्यो पाप छुट्छ ।

**लोमभ्यः स्वाहेत्येवं हि लोमप्रभृति वै तनुम् ।**
**मज्जन्तां जुहुयाद्वाऽपि मन्त्रैरेभिर्यथाक्रमम् ॥२४७॥**

शरीरका प्रत्येक भाग-रौं, छाला आदि लोमेभ्यः आदि मन्त्रले होम गर्नाले पनि उक्त पापबाट मुक्ति मिल्छ ।

**संग्रामे वा हतो लक्ष्यभूतः शुद्धिमवाप्नुयात् ।**
**मृतकल्पः प्रहारार्तो जीवन्नपि विशुद्ध्यति ॥२४८॥**

लडाईमा बिचमा उभिई हतियारको मार खाई मरे वा घाइते भए पनि पाप मुक्त हुन्छ ।

**अरण्ये नियतो जप्त्वा त्रिर्वै वेदस्य संहिताम् ।**
**शुद्ध्येत वा मिताशित्वात्प्रतिस्रोतःसरस्वतीम् ॥२४९॥**

बनमा वसी सधैं त्रिसन्ध्यामा वेदसंहिता पाठ गर्नाले वा थोरै खाई सरस्वती नदीको तिरैतिर हिँडेर समुद्रसम्म पुग्नाले पनि ब्रह्महत्याको पापबाट मुक्ति मिल्दछ ।



**पात्रे धनं वा पर्याप्तं दत्त्वा शुद्धिमवाप्नुयात् ।**
**आदातुश्च विशुद्ध्यर्थमिष्टिर्वैश्वानरी स्मृता ॥२५०॥**

शुद्ध ब्राह्मणलाई प्रशस्त दान दिएपनि ब्रह्महत्याको पाप छुट्दछ । तर, दान लिनेले पापशुद्धिका लागि वैश्वानर यज्ञ गर्नु पर्दछ ।

**यागस्थक्षत्रविड्घाती चरेद् ब्रह्महणि व्रतम् ।**
**गर्भहा च यथावर्णं तथात्रेयीनिषूदकः ॥२५१॥**

यज्ञमा दीक्षित क्षत्रीय र वैश्यको हत्या गर्नेले ब्रह्महत्याको व्रत गर्नु । गर्भपातक स्त्रीले वर्णअनुसार तोकिएका प्रायश्चित गर्नु ।

**चरेद् व्रतमहत्त्वापि घातार्थं चेत्समागतः ।**
**द्विगुणं सवनस्थे तु ब्राह्मणे व्रतमादिशेत् ॥२५२॥**

दीक्षित क्षत्रिय र वैश्यलाई मार्ने कुरा सोचे मात्र पनि मारेकै प्रायश्चित गर्नू ।
सोमयज्ञरत ब्राह्मणको हत्यामा दोब्बर दण्ड हुन्छ ।

**सुराम्बुघृतगोमूत्रपयसामग्निसन्निभम् ।**
**सुरापोऽन्यतमं पीत्वा मरणाच्छुद्धिमृच्छति ॥२५३॥**

मदिरा सेवीले उम्लिरहेको मदिरा, घिउ, गहुँत वा दूधमध्ये एक चिज पिएर
मर्नु प्रायश्चितको एउटा तरिका हो ।

**वालवासा जटी वापि ब्रह्महत्याव्रतं चरेत् ।**
**पिण्याकं वा कणान्वापि भक्षयेत्त्रिसमा निशि ॥२५४॥**

बोकादिको रौँका लुगा लगाई, कपाल पाली ब्रह्महत्याको बाह्र वर्षे प्रायश्चितको
विधि गर्नु वा तीन वर्ष अन्नकण वा पिना खानु (दोश्रो विधि हो) ।

**अज्ञानात्तु सुरां पीत्वा रेतो विण्मूत्रमेव च ।**
**पुनः संस्कारमर्हन्ति त्रयो वर्णा द्विजातयः ॥२५५॥**



अज्ञानले (भूलवश) सुरा, वीर्य, विष्ठा वा मूत्र पिउने द्विजले पुनः उपनयन गर्नु पर्दछ ।

**पतिलोकं न सा याति ब्राह्मणी या सुरां पिबेत् ।**
**इहैव सा शुनी गृध्री सूकरी चोपजायते ॥२५६॥**

सुरा पिउने बाहुनीले पतिव्रता भएपनि उत्तम गति पाउन्न र
कुकुर्नी, गिद्ध र सुँगुर्नी भएर जन्मनु पर्दछ ।

**ब्राह्मणस्वर्णहारी तु राज्ञे मुसलमर्पयेत् ।**
**स्वकर्म ख्यापयँस्तेन हतो मुक्तोऽपि वा शुचिः ॥२५७॥**

बाहुनको सुन चोर्नेले राजासमक्ष आत्मसमर्पण गर्नू तथा दण्डदिन
अनुरोध गर्नू र दिएको दण्ड भोग्नू, शुद्ध हुन्छ ।

**अनिवेद्य नृपे शुद्ध्येत्सुरापव्रतमाचरन् ।**
**आत्मतुल्यं सुवर्णं वा दद्याद्वा विप्रतुष्टिकृत् ॥२५८॥**

दण्ड भोग्न नचाहनेले सुरापेयीले गर्नुपर्ने प्रायश्चित गर्नू वा अपराध कबुल
गर्दै चोरेको जति वा ब्राह्मण सन्तुष्ट हुनेजति सुन तिर्नू ।

**तप्तेऽयः शयने सार्धमायस्या योषिता स्वपेत् ।**
**गृहीत्वोत्कृत्त्य वृषणौ नैर्ऋत्यां चोत्सृजेत्तनुम् ॥२५९॥**

गुरुपत्नी गामीले तातो फलामे ओछ्यानको त्यस्तै स्त्रीसँग सुत्नू वा लिङ्ग-अण्ड काटी
हातमा लिई नढलुन्जेल नैर्ऋत्य दिशातिर हिँड्नू ।

**प्राजापत्यं चरेत्कृच्छ्रं समा वा गुरुतल्पगः ।**
**चान्द्रायणं वा त्रीन्मासानभ्यसेद्वेदसंहिताम् ॥२६०॥**

गुरुपत्नी गामीको अन्य प्रायश्चित हो तीन वर्षसम्म प्राजापत्य कृच्छ्रव्रत वा तीन
महिनासम्म चान्द्रायण व्रत बसी वेदसंहिता जप्नू ।

**एभिस्तु सम्वसेद्यो वै वत्सरं सोऽपि तत्समः ।**

**कन्यां समुद्वहेदेषां सोपवासामकिञ्चनाम् ॥२६१॥**

महापापीका साथ एक वर्ष बस्ने पनि महापापी हुन्छन् । महापापीको सङ्गत गर्नेको कन्या विवाह
गर्नुपरे कन्याका बाबुलाई उपवास बस्न लगाई केही पनि दाइजो नलिई विवाह गर्नू ।

**चान्द्रायणञ्चरेत्सर्वानवकृष्टान्निहत्य तु ।**
**शूद्रोऽधिकारहीनोऽपि कालेनानेन शुद्ध्यति ॥२६२॥**

निम्न पुरुष र उच्च वर्णकी स्त्रीको समागमबाट जन्मेका सन्तानको हत्या गरे
चान्द्रायण व्रतले शुद्धि हुन्छ ।

**पञ्चगव्यं पिबेद्गोघ्नो मासमासीत संयतः ।**
**गोष्ठेशयो गोऽनुगामी गोप्रदानेन शुद्ध्यति ॥२६३॥**

गोहत्याराले एक महिनासम्म गोठमा बसी संयमतापूर्वक गाईको सेवा, केवल
पञ्चगव्य सेवन र गोदानले शुद्ध हुन्छ ।

**कृच्छ्रञ्चैवातिकृच्छ्रञ्च चरेद्वापि समाहितः ।**
**दद्यात्त्रिरात्रञ्चोपोष्य वृषभैकादशास्तु गाः ॥२६४॥**

कृच्छ्र वा अतिकृच्छ्र व्रत वा तीन रात उपवास र एघार वटा साँढे दान गरे पछि गोहत्याको प्रायश्चित हुन्छ ।

**उपपातकशुद्धिः स्यादेवं चान्द्रायणेन वा ।**
**पयसा वापि मासेन पराकेणाथवा पुनः ॥२६५॥**

उपपापको शुद्धि पनि चान्द्रायण व्रत बस्नाले वा एक महिनासम्म दूध मात्र खाएर वा संयमित भएर कन्दमूल मात्र खाएर हुन्छ ।

**ऋषभैकसहस्रा गा दद्यात्क्षत्रवधे पुमान् ।**
**ब्रह्महत्याव्रतं वापि वत्सरत्रितयञ्चरेत् ॥२६६॥**

क्षत्रीको हत्या गरे एउटा साँढेका साथमा एक हजार गाई दान गरेमा वा तीन वर्षसम्म ब्रह्महत्याको प्रायश्चित गर्नाले शुद्धि हुन्छ ।



**वैश्यहाब्दञ्चरेदेतद्दद्याद्वैकशतं गवाम् ।**
**षण्मासाच्छूद्रहाप्येतद्धेनूर्दद्याद्दशाथवा ॥२६७॥**

वैश्य मारे एक साँढे र सय गाई तथा शूद्र मारे एक साँढे र दश गाई दान गर्नू वा एक वर्ष र एक महिना ब्रह्महत्याको प्रायश्चित गर्नू ।

**दुर्वृत्तब्रह्मविट्क्षत्रशूद्रयोषाः प्रमाप्य तु ।**
**दृतिं धनुर्वस्तमविं क्रमाद्दद्याद्विशुद्धये ॥२६८॥**

कुलटा ब्राह्मणी, छेत्रिनी, वैश्या र शूद्राको हत्यामा क्रमशः छालाको थैलो, धनुष, बोको र भेडाको दान गर्नाले शुद्धि हुन्छ ।

**अप्रदुष्टां स्त्रियं हत्वा शूद्रहत्याव्रतञ्चरेत् ।**
**अस्थिमतां सहस्रन्तु तथानस्थिमतामनः ॥२६९॥**

कुलटाको शङ्कामा गरिएको स्त्री हत्यामा वा हजारौं हाड हुने वा नहुने ससाना

जीवको हत्यामा पनि शूद्रहत्याको प्रायश्चित गर्नू ।

**मार्जारगोधानकुलमण्डूकाँश्च पतत्रिणः ।**
**हत्वा त्र्यहं विबेत्क्षीरं कृच्छ्रं वा पादिकं चरेद् ॥२७०॥**

बिरालो, गोही, न्याहुरीमुसो, भ्यागुतो तथा चराहरु मारे तीन दिन दूधमात्र पिउनू वा पादकृच्छ्र व्रत (चार कोस पैदल हिँड्नु) बस्नू ।

**गजे नीलवृषाः पञ्च शुके वत्सो द्विहायनः ।**
**खराजमेषेषु वृषो देयः क्रौञ्चे त्रिहायनः ॥२७१॥**

हाती मारे पाँच नीला साँढे, सुँगा मारे दुई वर्षको बाछो तथा गधा, बोको र भेडो मारे एक साँढे एवं सारस मारे तीन वर्षको बाछो दान गर्नू ।

**हंसश्येनकपिक्रव्याज्जलस्थलशिखण्डिनः ।**
**भासञ्च हत्वा दद्याद्गामक्रव्यादस्तु वत्सिकाम् ॥२७२॥**



हाँस, बाज, बाँदर, मांसाहारी जीव, जलस्थलचर, मुजुर र गिद्ध मारे एक-एक गाई र शाकाहारी पशुपंक्षी मारे सवत्सा गाई दान दिनू ।

**उरगेष्वायसो दण्डः पण्डके त्रपु सीसकम् ।**
**कोले घृतघटो देय उष्ट्रे गुञ्जा हयेंऽशुकम् ॥२७३॥**

सर्प मारे तीखो फलामको लौरो, नपुंसक मारे सीसा, सुँगुर मारे एक भाँडो घिउ, ऊँट मारे रातीगेडी र घोडा मारे वस्त्र दान गर्नू ।

**तित्तिरौ तु तिलद्रोणं गजादीनामशक्नुवन् ।**
**दानं दातुञ्चरेत्कृच्छ्रमेकैकस्य विशुद्धये ॥२७४॥**

तित्रा मारे एक द्रोण तिल तथा हाती मारे पाँच नीला साँढे दान दिनू, नसके एक, तीन, छ महिना वा एक वर्षसम्म कृच्छ्र व्रत गर्नू ।

**फलपुष्पान्नरसजसत्त्वघाते घृताशनम् ।**
**किञ्चित्सास्थिवधे देयं प्राणायामस्त्वनस्थिके ॥२७५॥**

फलफूल, अन्न र रसमा लाग्ने कीरा मारे घिउ खानू तथा अस्थि हुने जीव मारे धान-सुन दान र अस्थि नहुने जीव मारे प्राणायाम गर्नू ।

**वृक्षगुल्मलतावीरुच्छेदने जप्यमृक्शतम् ।**
**स्यादोषधिवृथाच्छेदे क्षीराशी गोऽनुगो दिनम् ॥२७६॥**

आफ्नो व्यक्तिगत प्रयोजनका लागि रुख, लहरा , पोथ्रा र बुट्यान काटे एक सय आठ पटक गायत्री जप्नू । अकारण जडीबुटी काटे त्यो दिन भोकै बसी दूधपिएर गाईको सेवा गर्नू ।

**पुंश्चलीवानरखरैर्दष्टश्वोष्ट्रादिवायसैः ।**
**प्राणायामं जले कृत्वा घृतं प्राश्य विशुध्यति ॥२७७॥**

कुलटा स्त्रीले छोए, बाँदर-घोडा-गधा-काग-ऊँटले टोके वा अङ्ग छोए जलमा प्राणायाम गरी घिउ खानू, शुद्ध हुन्छ ।

**यन्मेऽद्य रेत इत्याभ्यां स्कन्नं रेतोऽभिमन्त्रयेत् ।**
**स्तनान्तरं भ्रुवोर्मध्यं तेनाऽनामिकया स्पृशेत् ॥२७८॥**



व्यर्थ वीर्यस्खलन भए “यन्मेद्य..” मन्त्र पाठ गर्दै वीर्य मन्त्री साहिँली औँलाले छोई त्यसपछि स्तनको बीच भाग र आँखिभौँको बिचमा छुनू ।

(“यन्मेद्य रेतः पृथिवीम्” तथा “पुनर्मामेत्विन्द्रियम्” ।)

**मयि तेज इतिच्छायां स्वां दृष्ट्वाम्बुगताञ्जपेत् ।**
**सावित्रीमशुचौ दृष्टे चापल्ये चानृतेऽपि च ॥२७९॥**

पानीमा आफ्नो छायाँ देखे ‘मयि तेजः.’ मन्त्र जप्नू । अपवित्र व्यक्ति देखे, हातगोडा चञ्चल गरे तथा झुटो बोले पनि गायत्री जप्नू ।

**अवकीर्णी भवेद्गत्वा ब्रह्मचारी तु योषितम् ।**
**गर्दभं पशुमालभ्य नैर्ऋतं स विशुध्यति ॥२८०॥**

स्त्री भोगे ब्रह्मचारी अवकीर्णी हुन्छ र नैर्ऋति देवतालाई गधाको होम गरेपछि शुद्ध हुन्छ ।

**भैक्षाग्निकार्ये त्यक्त्वा तु सप्तरात्रमनातुरः ।**

**कामावकीर्ण इत्याभ्यां जुहुयादाहुतिद्वयम् ॥२८१॥**
**उपस्थानं ततः कुर्यात्सम्मासिञ्चन्त्वनेन तु ।**
**मधुमांसाशने कार्यः कृच्छ्रः शेषव्रतानि च ॥२८२॥**

अवकीर्णीले शुद्धताका लागि सात रातसम्म भिक्षा र यज्ञ नगर्नू । कसैले सोधे कारण बताउनू । अनी 'कामावकीर्णोऽस्म्यवकीर्णोऽस्मि काम कामाय स्वाहा । कामावपन्नोऽस्म्यवपन्नोऽस्मि कामकामाय स्वाहा' मन्त्रले होम गरी 'सं मा सिञ्चन्तु मरुतः समिन्द्रः सं बृहस्पतिः । समायमग्नि सिञ्चन्तां यशसा ब्रह्मवर्चसेन' मन्त्रले अग्निपूजा गर्नू । ब्रह्मचारीले महमासु खाए कृच्छ्रव्रत गरी अरु व्रत गर्नू ।

**प्रतिकूलं गुरोः कृत्वा प्रसाद्यैव विशुध्यति ।**
**कृच्छ्रत्रयं गुरुः कुर्यान्म्रियते प्रहितो यदि ॥२८३॥**

गुरुको अवज्ञा गर्नेले शुद्ध हुन उनलाई खुशी पार्नू । गुरुको आज्ञाकार्यमा ब्रह्मचारीको प्राण गए गुरुले तीन कृच्छ्र व्रत गरे शुद्ध हुन्छन् ।

**(क्रियमाणोपकारे तु मृते विप्रे न पातकम् ।**
**विपाके गोवृषाणां तु भेषजाग्निक्रियासु च ॥**

उपचारका क्रममा ब्राह्मणको मृत्यु भए वैद्यलाई र पशुपक्षीको मृत्यु भए चिकित्सकलाई दोष हुँदैन ।)

**मिथ्याभिशंसिनो दोषो द्विः समो भूतवादिनः ।**
**मिथ्याभिशस्तदोषश्च समादत्ते मृषा वदन् ॥२८४॥**

झुटो आरोप लगाउनेलाई दोब्बर दण्ड र दोषीको दोष प्रचार गर्नेलाई पनि सोही बराबरको दण्ड गर्नू ।

**महापापोपपाभ्यां योऽभिशंसेन्मृषा परम् ।**
**अब्भक्षो मासमासीत स जापी नियतेन्द्रियः ॥२८५॥**

अरुलाई महापाप र उपपापका झुटो आरोप लगाउनेले एक महिनासम्म जितेन्द्रिय भई पानी मात्र पिएर बस्नू र जप-ध्यान गरिरहनू, शुद्ध हुन्छ ।

**अभिशस्तो मृषा कृच्छ्रं चरेदाग्नेयमेव वा ।**
**निर्वपेत्तु पुरोडाशं वायव्यं पशुमेव वा ॥२८६॥**

मिथ्या दोषीले पनि शुद्धताका लागि कृच्छ्र प्राजापत्य-यज्ञ, अग्निको पुरोडाश-यज्ञ वा वायुको पुरोडाश-यज्ञ वा पशु-यज्ञ गर्नू ।

**अनियुक्तो भ्रातृजायाङ्गच्छँश्चान्द्रायणञ्चरेत् ।**
**त्रिरात्रान्ते घृतं प्राश्य गत्वोदक्यां विशुध्यति ॥२८७॥**

नियोग बाहेकमा बुहारी वा भाउजू गमनमा चान्द्रायण गर्नू । रजस्वला पत्नी गमनमा तीन दिन उपवास पछि घिउ खानू, शुद्ध हुन्छ ।

**त्रीन्कृच्छ्रानाचरेद् व्रात्ययाजकोऽभिचरन्नपि ।**
**वेदप्लावी यवाश्यब्दं त्यक्त्वा च शरणागतम् ॥२८८॥**

व्रात्यको पुरोहित्याईं गरे वा कसैलाई सम्मोहन विद्या सिकाए तीन कृच्छ्र व्रतले शुद्धि हुन्छ । पतितका सामु वा पढ्न नहुने समयमा वेद पढे वा शरणागतलाई त्यागे एक वर्ष जौको भोजन गर्नाले शुद्ध हुन्छ ।



**गोष्ठे वसन्ब्रह्मचारी मासमेकं पयोव्रतः ।**
**गायत्रीजाप्यनिरतः शुद्ध्यतेऽसत्प्रतिग्रहात् ॥२८९॥**

कुपात्रबाट वा लिन नहुने वस्तु दान लिए एक वर्षसम्म ब्रह्मचारी बनी दूध मात्र पिई गौशालामा बसी गायत्री जप गर्नाले शुद्ध हुन्छ ।

**प्राणायामी जले स्नात्वा खरयानोष्ट्रयानगः ।**
**नग्नः स्नात्वा च भुक्त्वा च गत्वा चैव दिवा स्त्रियम् ॥२९०॥**

गधा-ऊँट चढे तथा नाङ्गै नुहाए वा खाए तथा दिउसो स्त्री सम्भोग गरे नुहाएर जलमा उभिई प्राणायाम गर्नू ।

**गुरुं हुङ्कृत्य त्वङ्कृत्य विप्रं निर्जित्य वादतः ।**
**वद्ध्वा वा वाससा क्षिप्रं प्रसाद्योपवसेद्दिनम् ॥२९१॥**

गुरुजनलाई तँ भने वा ठूलो स्वरमा बोले अथवा ब्राह्मणसँग रिसाए, गाली गरे वा तिनका गलामा पासोले बाँधे तिनलाई खुशी पार्नू र दिनमा उपवास बस्नू ।

**विप्रदण्डोद्यमे कृच्छ्रस्त्वतिकृच्छ्रो निपातने ।**
**कृच्छ्रातिकृच्छ्रोऽसृक्पाते कृच्छ्रोऽभ्यन्तरशोणिते ॥२९२॥**

ब्राह्मणलाई पिट्न लौरो उभ्याए, पिटे, पिटेर रगत निकाले क्रमशः कृच्छ्र, अतिकृच्छ्र र कृच्छ्रातिकृच्छ्र व्रत बस्नू ।

**देशं कालं वयः शक्तिं पापञ्चावेक्ष्य यत्नतः ।**
**प्रायश्चित्तं प्रकल्प्यं स्याद्यत्र चोक्ता न निष्कृतिः ॥२९३॥**

प्रायश्चित नबताइका पापको स्थान, परिस्थिति, आयु, शक्ति र इच्छा आदि विचार गरी दण्ड निर्धारण गर्नू ।

**दासीकुम्भं बहिर्ग्रामान्निनयेरन्स्वबान्धवाः ।**
**पतितस्य बहिः कुर्युः सर्वकार्येषु चैव तम् ॥२९४॥**



आफन्तले पतितका घरबाट दासीद्वारा जलपूर्ण कलश निकाल्न लगाई गाऊँ बाहिर फाल्न लगाउनू अर्थात जातीच्यूत गर्नू र प्रायश्चित नगर्दासम्म सबैकार्यमा बहिष्कार गर्नू ।

**चरितव्रत आयाते निनयेरन्नवं घटम् ।**
**जुगुप्सेरन्न चाप्येनं सम्वसेयुश्च सर्वशः ॥२९५॥**

प्रायश्चितपछि उसलाई स्वीकार्नू । शङ्का भए तलाउबाट जलपूर्ण कलश ल्याउन लगाउनू । यसबाट शुद्ध भएको मानी घृणा नगरी समान व्यवहार गर्नू ।

**पतितानामेष एव विधिः स्त्रीणां प्रकीर्तितः ।**
**वासो गृहान्तिके देयमन्नं वासः सरक्षणम् ॥२९६॥**

पापिनीलाई यही विधिले प्रायश्चित गराउनू, नगरे निकाल्नू । घर नजिकै छुट्टै वास दिनू र खानपुग्ने धन दिई रक्षा र नियन्त्रण गर्नू ।

**नीचाभिगमनं गर्भपातनं भर्तृहिंसनम् ।**

**विशेषपतनीयानि स्त्रीणामेतान्यपि ध्रुवम् ॥२९७॥**

निम्नस्तर वा जातसँग सल्के, गर्भपतन गराए वा पतिको हत्या गरे स्त्री विशेषरुपले पतित हुन्छे ।

**शरणागतबालस्त्रीहिंसकान् सम्वसेन्न तु ।**
**चीर्णव्रतानपि सतः कृतघ्नसहितानिमान् ॥२९८॥**

शरणमा परेका बालक वा स्त्री मार्ने र कृतघ्नसँग प्रायश्चित गरी शुद्ध भएर आएपनि सङ्गत नगर्नू ।

**घटेऽपवर्जिते ज्ञातिमध्यस्थो यवसङ्गवाम् ।**
**प्रदद्यात्प्रथमं गोभिः सत्कृतस्य हि सत्क्रिया ॥२९९॥**

प्रायश्चित गर्नेलाई जलाशयबाट नयाँ माटोको घडामा जल लेराए पछि गाईलाई हरियो घाँस खुवाउन लगाउनू, गाईले घाँस खाए जातमा मिसाउनू नत्र नमिसाउनू ।

**इति प्रकाशप्रायश्चित्तप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत देखिने खालका पापको प्रायश्चित प्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

## अथ रहस्यप्रायश्चित्तम्

**विख्यातदोषः कुर्वीत पर्षदोऽनुमतं व्रतम् ।**
**अनभिख्यातदोषस्तु रहस्यं व्रतमाचरेत् ॥३००॥**

दोष सार्वजनिक भए धर्मसभाको दण्ड अनुसार र गोप्य भए बताएर वा गोप्यरुपले शास्त्रानुसार (निम्न) प्रायश्चित गर्नू ।

**त्रिरात्रोपोषितो जप्त्वा ब्रह्महा त्वघमर्षणम् ।**
**अन्तर्जले विशुध्येत दत्त्वा गाञ्च पयस्विनीम् ॥३०१॥**

ब्रह्महत्याको आरोपमा तीन दिन उपवास बसी तीन दिन जलमा उभिएर अघमर्षण जप्नू वा दुहुनु गाई ब्राह्मणलाई दान गर्नू, शुद्ध हुन्छ ।

**लोमभ्यः स्वाहेत्यथवा दिवसं मारुताशनः ।**
**जले स्थित्वाऽभिजुहुयाच्चत्वारिंशद्घृताहुतीः ॥३०२॥**



एक दिनरात उपवास वा रातभर जलमा उभिई बिहान बाहिर आई लोमभ्यः स्वाहा आदि आठ मन्त्रले पाँच-पाँच पटक होम गर्नू ।

**प्राणायामशतं कार्यं सर्वपापापनुत्तये ।**
**उपपातकजातानामनादिष्टस्य चैव हि ॥३०५॥**

सबै खाले अन्य नबताइएका पापबाट मुक्ति पाउन सय पटक प्राणायाम गर्नु शुद्ध हुन्छ ।

**ओङ्काराभिष्टुतं सोमसलिलं पावनं पिबेत् ।**
**कृत्वा हि रेतोविण्मूत्रप्राशनन्तु द्विजोत्तमः ॥३०६॥**

गल्तीले मल-मूत्र-वीर्य मुखमा परे ॐ कार मन्त्रले अभिमन्त्रित सोमलताको रस पिए मुख शुद्ध हुन्छ ।

**निशायां वा दिवा वापि यदज्ञानकृतं भवेत् ।**
**त्रैकाल्यसन्ध्याकरणात्तत्सर्वं विप्रणश्यति ॥३०७॥**

दिउसो वा राती अनजानमा भएको पापको मुक्तिका लागि तिनै सन्ध्यामा सन्ध्योपासना गर्नू ।

**शुक्रियारण्यकजपो गायत्र्याश्च विशेषतः ।**
**सर्वपापहरा ह्येते रुद्रैकादशिनी तथा ॥३०८॥**

'विश्वानिदेव सवितः' आदि मन्त्र भएको शुक्रियारण्यक, गायत्री र रुद्रैकादशिनीको जप गर्नाले सबै पाप नाश हुन्छन् ।

**यत्र यत्र च सङ्कीर्णमात्मानं मन्यते द्विजः ।**
**तत्र तत्र तिलैर्होमो गायत्र्या वाचनन्तथा ॥३०९॥**

जहाँजहाँ द्विजलाई पाप गरेको छु भन्ने लाग्छ त्यहाँत्यहाँ गायत्री जप गर्दै कालो तिल हवन गरोस्, शुद्ध हुन्छ ।

**वेदाभ्यासरतं क्षान्तं पञ्चयज्ञक्रियापरम् ।**
**न स्पृशन्तीह पापानि महापातकजान्यपि ॥३१०॥**



वेदाध्ययन र पञ्चयज्ञ गरिरहनेले कुनै पनि पाप गर्नै सक्दैन र अनजानमा भएको कुकर्मको पाप पनि लाग्दैन ।

**वायुभक्षो दिवा तिष्ठन् रात्रिं नीत्वाऽप्सु सूर्यदृक् ।**
**जप्त्वा सहस्रं गायत्र्याः शुद्ध्येद् ब्रह्मवधादृते ॥३११॥**

दिनमा उपवास रातभर जलमा उभिएर गायत्री जप र सूर्योदय भएपछि एक हजार गायत्री जप र सूर्यको पूजा गर्नाले ब्रह्महत्या बाहेकका सबै पापबाट छुटकारा मिल्छ ।

**इति रहस्यप्रायश्चित्तप्रकरणम्**

**मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत गोप्य पापको प्रायश्चित प्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।**

**ब्रह्मचर्यं दया क्षान्तिर्दानं सत्यमकल्पता ।**
**अहिंसा स्तेयमाधुर्ये दमश्चेति यमाः स्मृताः ॥३१२॥**

ब्रह्मचर्य, दया, क्षमा, दान, सत्यनिष्ठता, अहिंसा, चोरीहीनता, मिठो बोली र इन्द्रिय-नियन्त्रणलाई 'यम' भनिन्छ ।

**स्नानं मौनोपवासेज्यास्वाध्यायोपस्थनिग्रहाः ।**
**नियमा गुरुशुश्रूषा शौचाक्रोधाप्रमादता ॥३१३॥**

स्नान, मौनता, उपवास, यज्ञ, स्वध्याय, जननेन्द्रियको नियन्त्रण, गुरु-सेवा, पवित्रता, अक्रोध र अप्रमाद 'नियम' हुन् ।

**गोमुत्रं गोमयं क्षीरं दधि सर्पिः कुशोदकम् ।**
**जग्ध्वा परेह्न्युपवसेत्कृच्छ्रं सान्तपनञ्चरन् ॥३१४॥**

पहिलो दिन पञ्चगव्य र कुशपानी सेवन गरी दोश्रो दिन पूर्ण उपवास बस्नु 'कृच्छ्र सान्तपन व्रत' हुन्छ ।

**पृथक्सान्तपनद्रव्यैः षडहः सोपवासकः ।**
**सप्ताहेन तु कृच्छ्रोयं महासान्तपनः स्मृतः ॥३१५॥**



दिनहुँ एकपटक पञ्चगव्यका दरले पाँच दिन, छैटौं दिन कुशपानी तथा सातौं दिन उपवास बसी गरिने व्रत 'महासान्तपन कृच्छ्र व्रत' हो ।

**पर्णोदुम्बरराजीवबिल्वपत्रकुशोदकैः ।**
**प्रत्येकं प्रत्यहं पीतैः पर्णकृच्छ्र उदाहृतः ॥३१६॥**

पलाश, डुम्री, कमल, बेलपत्र र कुश एकएक दिन उमालेर पाँच दिनसम्म त्यो पानी मात्र पिउनु 'पर्णकृच्छ्र व्रत' हो ।

**तप्तक्षीरघृताम्बूनामेकैकं प्रत्यहं पिबेत् ।**
**एकरात्रोपवासश्च तप्तकृच्छ्र उदाहृतः ॥३१७॥**

तातो दूध, तातो घिउ र तातो पानी मात्र एकएक दिन पिई चौथो दिन उपवास बस्नाले 'तप्तकृच्छ्र व्रत' हुन्छ ।

**एकभक्तेन नक्तेन तथैवायाचितेन च ।**
**उपवासेन चैवायं पादकृच्छ्रः प्रकीर्तितः ॥३१८॥**

पहिलो दिन एक पटक, दोश्रो दिन रातमा एक पटक, तेश्रो दिन नमागी पाए खाने नपाए भोकै बस्ने र चौथो दिन उपवास बस्ने व्रत 'पादकृच्छ्र व्रत' हो ।

**यथाकथञ्चित्त्रिगुणः प्राजापत्योऽयमुच्यते ।**
**अयमेवातिकृच्छ्रः स्यात्पाणिपूरान्नभोजनः ॥३१९॥**

'पादकृच्छ्र व्रत' लाई तीन पटक गरे 'प्राजापत्य कृच्छ्र व्रत' हुन्छ । 'पादकृच्छ्र व्रत' मा एक, एक गाँसमात्र खाए 'अतिकृच्छ्र व्रत' हुन्छ ।

**कृच्छ्रातिकृच्छ्रः पयसा दिवसानेकविंशतिम् ।**
**द्वादशाहोपवासेन पराकः परिकीर्तितः ॥३२०॥**

एक्काईस दिनसम्म दूध पिएर बसिने व्रत 'कृच्छ्रातिकृच्छ्र व्रत' हो । बाह्र दिनको उपवासलाई 'पराकव्रत' भनिन्छ ।

**पिण्याकाचामतक्राम्बुसक्तूनां प्रतिवासरम् ।**
**एकरात्रोपवासश्च कृच्छ्रः सौम्योऽयमुच्यते ॥३२१॥**

एक, एक दिन तिलको पिना, भातको माड, मोही, जल र जौको सातुमात्र खाई एक दिन उपवास बसी गरिने व्रत 'सौम्यकृच्छ्र व्रत' हो ।

**एषां त्रिरात्रमभ्यासादेकैकस्य यथाक्रमम् ।**
**तुलापुरुष इत्येष ज्ञेयः पञ्चदशाहिकः ॥३२२॥**

पिना, माड, मोही, जल र सातु तीन, तीन दिन खाई एक दिन उपवास वसे पन्ध्र दिने 'तुला-पुरुष व्रत' हुन्छ ।

**तिथिवृद्ध्या चरेत्पिण्डान् शुक्ले शिख्यण्डसम्मितान् ।**
**एकेकं ह्रासयेत्कृष्णे पिण्डं चान्द्रायणं चरन् ॥३२३॥**
शुक्लपक्षको परेवादेखि मयुरको फुल जतिको एक, एक गाँस बढाउँदै खाई फेरी कृष्णपक्षको परेवादेखि घटाउँदै खानु 'चान्द्रायण व्रत' हुन्छ ।

**यथाकथञ्चित्पिण्डानां चत्वारिंशच्छतद्वयम् ।**
**मासेनैवोपभुञ्जीत चान्द्रायणमथापरम् ॥३२४॥**

साधकले आफ्नो सुविधा अनुसार कुनै पनि महिनामा जम्मा दुई सय चालीस गाँस खाई 'चान्द्रायण व्रत' गर्न सक्दछ ।

**कुर्यात्त्रिषवणस्नायी कृच्छ्रं चान्द्रायणन्तथा ।**
**पवित्राणि जपेत्पिण्डान्गायत्र्या चाभिमन्त्रयेत् ॥३२५॥**

अपराध-शुद्धीका लागि तीनै सन्ध्यामा नुहाउनू र प्राजापत्य, चान्द्रायण आदि व्रत बसी प्रायश्चित गर्नू, सदैव वेदमन्त्र जप्नू र प्रत्येक गाँस खाँदा गायत्रीमन्त्रले अभिमन्त्रित गर्नू ।

**अनादिष्टेषु पापेषु शुद्धिश्चान्द्रायणेन तु ।**
**धर्मार्थे यश्चरेदेतच्चन्द्रस्यैति सलोकताम् ॥३२६॥**

प्रायश्चित नबताइएका अन्य पापको चान्द्रायण व्रतले शुद्धि हुन्छ । धर्मपूर्वक यो व्रत बस्नाले ठूलो पुण्य हुन्छ र यो लोकमा सुख भोग गरी मृत्युपछि चन्द्रलोक जान्छ ।

**कृच्छ्रकृद्धर्मकामस्तु महतीं श्रियमाप्नुयात् ।**
**यथा गुरुक्रतुफलं प्राप्नोति सुसमाहितः ॥३२७॥**

धर्म-भावले तथा उन्नतीको चाहनाले कृच्छ्र व्रत बस्ने साधकले चाहेको कुरा मात्र प्राप्त गर्दैन राजसूय आदि यज्ञ गरी प्राप्त हुने ऐश्वर्य आदि समेत प्राप्त गर्दछ ।

**श्रुत्वैतानृषयो धर्मान्याज्ञवल्क्येन भाषितान् ।**
**इदमूचुर्महात्मानं योगीन्द्रममितौजसम् ॥३२८॥**

याज्ञवल्क्य मुनिका मुखबाट यो धर्मशास्त्र सुनेर ऋषिहरूले ती महात्मा, तेजस्वी योगिश्रेष्ठलाई पुनः भने- ।

**य इदं धारयिष्यन्ति धर्मशास्त्रं अतन्द्रिताः ।**
**इह लोके यशः प्राप्य ते यास्यन्ति त्रिविष्टपम् ॥३२९॥**

जसले अल्छी नगरी यो धर्मशास्त्र धारण गर्दछ उसले योलोकमा यश र अन्तमा स्वर्ग पाउँदछ ।

**विद्यार्थी प्राप्नुयाद्विद्यां धनकामो धनन्तथा ।**
**आयुष्कामस्तथैवायुः श्रीकामो महतीं श्रियम् ॥३३०॥**

विद्यार्थीले विद्या, धनार्थीले धन, आयु चाहनेले आयु तथा श्री चाहनेले ठूलो श्री पाउँदछ ।

**श्लोकत्रयमपि ह्यस्माद्यः श्राद्धे श्रावयिष्यति ।**
**पितृणान्तस्य तृप्तिः स्यादक्षय्या नात्र संशयः ॥३३१॥**

श्राद्धका दिन जसले यो धर्मशास्त्रका तीन वटा श्लोक मात्रै भएपनि जजमानलाई सुनाउँदछ त्यो जजमानका पितृलाई अक्षय तृप्ति प्राप्त हुन्छ, यसमा कुनै शङ्का छैन ।

**ब्राह्मणः पात्रतां याति क्षत्रियो विजयी भवेत् ।**
**वैश्यश्च धान्यधनवानस्य शास्त्रस्य धारणात् ॥३३२॥**

यो शास्त्र पढेर धारण गर्नाले ब्राह्मण सुपात्र हुन्छ, क्षेत्री विजयी हुन्छ र वैश्य धनधान्यले समृद्ध हुन्छ ।

**य इदं श्रावयेद्विद्वान्द्विजान्पर्वसु पर्वसु ।**
**अश्वमेधफलं तस्य तद्भवाननुमन्यताम् ॥३३३॥**

जो ब्राह्मण यो शास्त्रलाई हरेक पर्वमा द्विजलाई सुनाउँदछ, उसले अश्वमेध यज्ञ गरेको फल पाउँदछ । अब हामीले भनेका यी कुरालाई हजुर अनुमोदन गर्नु होस् ।

**श्रुत्वैतद्याज्ञवल्क्योऽपि प्रीतात्मा मुनिभाषितम् ।**
**एवमस्त्विति होवाच नमस्कृत्य स्वयम्भुवे ॥३३४॥**

यस्ता मुनिजनका कुरा सुनी याज्ञवल्क्यले प्रसन्न हुँदै परमात्मालाई नमस्कार गरी "हुन्छ त्यस्तै होस्" भन्नु भयो ।

इति प्रायश्चित्तप्रकरणम्



मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत प्रायश्चित प्रकरणको नेपाली भावानुवाद पूर्ण भयो ।

इति प्रायश्चित्ताध्यायः

मोहनप्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृति अन्तर्गत प्रायश्चित अध्यायको नेपाली भावानुवाद पूर्ण भयो ।

आदितः श्लोकानां समष्ट्यङ्काः-६७५+३३४=१,००९

शुरुदेखि जम्मा श्लोक सङ्ख्या : १,००९

समाप्तेयं याज्ञवल्क्यस्मृतिः

नेपालको बाग्मती अञ्चल, काभ्रेपलाञ्चोक जिल्ला, अनैकोट गा.वि.स., वडा नं.३, चारघरटोलमा जन्म भई हाल काठमाडौं जिल्ला, गोकर्णेश्वर नगरपालिका, वडा नं.७ मा बसोबास गर्ने मोहन प्रसाद सापकोटाद्वारा गरिएको याज्ञवल्क्यस्मृतिको नेपाली भावानुवाद पूर्ण भयो

सबैको सधैं कल्याण होस् !